॥ ॐ श्रीपरमात्मने नमः ॥

2163

# सरल गीता

## ( नेपाली श्लोकार्थसहित )









गीताप्रेस, गोरखपुर

॥ ॐ श्रीपरमात्मने नमः ॥

# सरल गीता

## ( नेपाली श्लोकार्थसहित )







त्वमेव माता च पिता त्वमेव
त्वमेव बन्धुश्च सखा त्वमेव।
त्वमेव विद्या द्रविणं त्वमेव
त्वमेव सर्वं मम देवदेव॥

गीताप्रेस, गोरखपुर

पुस्तकहरू यहाँ पनि उपलब्ध छन्।

गीताप्रेस पुस्तक बिक्री केन्द्र
पसल नं० 6,7,8 माधवराज सुमार्गी स्मृति भवन, वनकाली,
पशुपति क्षेत्र, काठमाडौं, नेपाल।
e-mail : gitapress.nepal@gmail.com

सं० २०७६ तृतीय पुनर्मुद्रण १५,०००
कुल मुद्रण २८,०००

❖ मूल्य—₹ ४०
(चालीस रुपये)

प्रकाशक एवं मुद्रक—
गीताप्रेस, गोरखपुर—२७३००५
(गोबिन्दभवन-कार्यालय, कोलकाता का संस्थान)
फोन : (०५५१) २३३४७२१, २३३१२५०, २३३१२५१
web : gitapress.org e-mail : booksales@gitapress.org
गीताप्रेस प्रकाशन gitapressbookshop. in से online खरीदें।

॥ ॐ श्रीपरमात्मने नमः ॥

# प्राक्कथन

श्रीमद्भगवद्गीता एक अलौकिक एवम् रहस्यले भरिएको ग्रन्थ हो। श्रीगीताका बारेमा टीकाटिप्पणी, यसको रहस्यपूर्ण अर्थ, भाव आदि बुझ्नु त टाढाको कुरा हो, आजसम्म पनि हाम्रो समाजमा यस्ता धेरै मानिसहरू छन्, जसले गीताका श्लोकहरू शुद्धसँग पाठ गर्न सक्दैनन्। हाम्रो भावना र प्रयास ती सबै महानुभावका लागि हो, जसले गीताका श्लोकहरूको शुद्ध पाठ गर्न सक्दैनन्। यसै सद्भावनाबाट प्रेरित भई भगवान्को असीम कृपाबाट 'सरल गीता' प्रकाशित भएको छ। यसले गर्दा सामान्य शिक्षित पाठकले कम्तिमा पनि श्रीमद्भगवद्गीताका श्लोकहरू शुद्ध तरिकाले पाठ गरी आफ्नो कल्याण गर्न सकून्। यस सरल गीताको एकमात्र उद्देश्य सामान्य देवनागरी अक्षर पढ्न जानेका सर्वसाधारणले पनि गीताका श्लोकहरू शुद्धसँग पढ्ने अभ्यास गर्न सकून् भन्ने रहेको छ।

दुई पंक्तिमा छापिएका श्लोकहरूलाई पाठ गर्दा यसलाई आठ-आठ अक्षरको चार भाग गर्नुपर्दछ, अर्थात् आठ अक्षर गनेर एक साथ पढेपछि एक चरण पूरा हुन्छ। यसै तरिकाबाट चार पंक्तिमा छापिएको चवालिस अक्षर भएको श्लोकलाई एक चरणमा एघार अक्षर गनेर पढ्नुपर्दछ।

श्रीगीताको कुनै श्लोकमा अक्षर गणना गर्ने बेलामा कहिँ कतै एक चरणमा नौ तथा बाह्र अक्षर पनि भेटिन्छन्। यसको उच्चारण दिइएको रङ्गअनुसार नै गर्नुपर्दछ।

श्लोकका अक्षरहरूको गणना गर्दा आधा अक्षर एवम् हलन्त दिइएका अक्षरहरूको गणना गर्नुहुँदैन। आठ अक्षर एवं एघार अक्षरको गणना गर्दा पूर्ण अक्षरहरूको मात्र गणना गर्नुपर्दछ।

गीताजीको सही उच्चारण सिक्न चाहने सामान्य पाठकको सुविधाका लागि प्रत्येक चरणमा कठिन शब्दहरूलाई सामासिक चिन्हद्वारा अलग गरी दुई रङ्गमा छापिएको छ। यसले गर्दा श्लोकको प्रत्येक चरणको उच्चारणमा सहयोग मिल्ने छ। पाठकहरूले श्लोक पाठ गर्दा यसको भाव पनि सरल तरिकाले बुझ्न सकून् भन्ने हेतुले प्रत्येक श्लोकको तल नेपालीमा अर्थ लेखिएको छ। नित्य गीताजीको पाठ गर्ने मनुष्यको कहिल्यै पतन हुँदैन भनी वाराहपुराणमा भनिएको छ। यसकारण, गीताजीको नित्य पाठ यथासम्भव अवश्य गर्नुपर्दछ।

आशा छ, जुन पाठकले शुद्धसँग श्रीगीताका श्लोकहरू पाठ गर्न चाहनुहुन्छ, उहाँहरूका लागि यो विधि अत्यन्त उपयोगी हुने छ।

~~~o~~~
~~~

॥ ॐ श्रीपरमात्मने नमः ॥

# श्रीगीताजीको महिमा

वास्तवमा श्रीमद्भगवद्गीताको माहात्म्य वाणीद्वारा वर्णन गर्ने सामर्थ्य कसैको पनि छैन, किनकि यो एउटा परम रहस्यमय ग्रन्थ हो। यसमा सम्पूर्ण वेदहरूको सार–सार सङ्ग्रह गरिएको छ। यसको संस्कृत यति सुन्दर र सरल छ कि अलिकति अभ्यास गर्दा पनि मानिसले यसलाई सजिलै बुझ्न सक्दछन्, तर यसको अर्थ भने यति गम्भीर छ कि आजीवन निरन्तर अभ्यास गरिरहँदा पनि त्यसको अन्त्य आउँदैन। प्रतिदिन नयाँ नयाँ भावहरू उत्पन्न भइरहन्छन्, जसका कारण यो सदैव नवीन बनिरहन्छ। एकाग्रचित्त भएर श्रद्धा–भक्तिसहित विचार गरेपछि यसका शब्दशब्दमा परम रहस्य भरिएको प्रत्यक्ष प्रतीत हुन्छ। भगवान्‌का गुण, प्रभाव र मर्मको वर्णन जसरी यस गीताशास्त्रमा गरिएको छ, त्यसरी अन्य ग्रन्थहरूमा भेटिन गाह्रो छ, किनकि प्रायः ग्रन्थहरूमा केही न केही सांसारिक विषय भेटिइरहन्छ। भगवान्‌ले 'श्रीमद्भगवद्गीता' रूपी एउटा यस्तो अनुपमेय शास्त्र बताउनुभएको छ कि जसमा एउटा पनि शब्द सदुपदेशले खाली छैन। श्रीवेदव्यासजीले महाभारतमा गीताजीको वर्णन गरिसकेपछि भन्नुभएको छ—

**गीता सुगीता कर्तव्या, किमन्यैः शास्त्र–विस्तरैः।**
**या स्वयं पद्मनाभस्य, मुखपद्माद्–विनिःसृता॥**

'गीता सुगीता गर्नयोग्य छ, अर्थात् श्रीगीताजीलाई राम्रोसित पढेर अर्थ र भावसहित अन्तःकरणमा धारण गर्नु मुख्य कर्तव्य हो, जुन स्वयं पद्मनाभ भगवान् श्रीविष्णुको मुखारविन्दबाट निस्किएको छ भने अन्य शास्त्रहरूको विस्तारसित के प्रयोजन?' स्वयं श्रीभगवान्‌ले पनि यसको माहात्म्यको वर्णन गर्नुभएको छ (अ० १८ श्लोक ६८ देखि ७१ सम्म)।

यस गीताशास्त्रमा मनुष्यमात्रको अधिकार छ, चाहे ऊ कुनै पनि वर्ण, आश्रममा स्थित होस्, परन्तु भगवान्‌मा श्रद्धालु र भक्तियुक्त अवश्य हुनुपर्दछ, किनकि भगवान्‌ले आफ्ना भक्तमा नै यसको प्रचार गर्नका लागि आज्ञा दिनुभएको छ तथा यो पनि भन्नुभएको छ कि स्त्री, वैश्य, शूद्र र

पापयोनिले पनि मेरो परायण भएर परमगतिलाई प्राप्त गर्दछन् (अ० ९ श्लोक ३२); आ–आफ्ना स्वाभाविक कर्महरूद्वारा मेरो पूजा गरेर मनुष्यले परमसिद्धि प्राप्त गर्दछ (अ० १८ श्लोक ४६)—यी सबै विचार गर्दा परमात्माको प्राप्तिमा सबैको अधिकार छ भन्ने कुरा ज्ञात हुन्छ।

तर, उक्त विषयको मर्मलाई नबुझ्नाले धेरै मानिस, जसले श्रीगीताजीको केवल नाममात्र सुनेका छन्, गीता त केवल संन्यासीहरूका लागि मात्रै हो भनेर भन्ने गर्दछन्, तिनले आफ्ना छोराहरूलाई पनि गीताजीको अभ्यास गराउँदैनन्, कतै गीताको ज्ञानका कारण कदाचित् उसले घर छोडेर सन्न्यासी नहोस्। तर, उनीहरूले मोहका कारण क्षात्रधर्मबाट विमुख भएर भिक्षाको अन्नले निर्वाह गर्नका लागि तयार भएका अर्जुनले जुन परम रहस्यमय गीताको उपदेशबाट आजीवन गृहस्थमा रहेर आफ्नो कर्तव्यपालन गरे, गीताशास्त्रको यस्तो उल्टो परिणाम कसरी हुन सक्छ? भन्ने कुरा विचार गर्नुपर्दछ।

अतएव, कल्याणको इच्छा भएका मनुष्यहरूका लागि के उचित छ भने उनीहरूले मोहलाई त्यागेर अतिशय श्रद्धा–भक्तिपूर्वक आफ्ना बालकहरूलाई अर्थ र भावसहित श्रीगीताजीको अध्ययन गराऊन् एवं स्वयंले पनि यसको पठन र मनन गर्दै भगवान्को आज्ञानुसार साधना गर्न तत्पर होऊन्, किनकि अति दुर्लभ मनुष्य–शरीर पाएर पनि आफ्नो अमूल्य समयको एक क्षण पनि दुःखमूलक क्षणभङ्गुर भोगहरूलाई भोग्नका लागि नष्ट गर्नु उचित होइन।

~~○~~

# श्रीगीताजीको प्रधान विषय

श्रीगीताजीमा भगवान्ले आफ्नो प्राप्तिका लागि मुख्य दुई मार्ग बताउनुभएको छ—एउटा साङ्ख्ययोग, अर्को कर्मयोग। तिनमा—

(१) सम्पूर्ण पदार्थ मृगतृष्णाको पानीजस्तै अथवा सपनाको सृष्टिसमान मायामय हुनाले मायाको कार्यरूप सम्पूर्ण गुण नै गुणमा संलग्न हुन्छन् भन्ने सम्झिएर मन, इन्द्रिय र शरीरद्वारा हुने सम्पूर्ण कर्महरूमा कर्तापनको अभिमानले रहित हुनु (अ० ५ श्लोक ८–९) तथा सर्वव्यापी सच्चिदानन्दघन परमात्माको

स्वरूपमा एकभावले नित्य स्थित रहँदै एक सच्चिदानन्दघन वासुदेवसिवाय अन्य कसैको पनि हुने पनको भाव नरहनु साङ्ख्ययोगको साधना हो।

(२) सबै कुरा भगवान्‌कै ठानेर सिद्धि-असिद्धिमा समत्वभाव राख्दै आसक्ति र फलको इच्छा त्यागेर भगवदाज्ञानुसार केवल भगवान्‌कै लागि सबै कर्मको आचरण गर्नु (अ० २ श्लोक ४८, अ० ५ श्लोक १०) तथा श्रद्धाभक्तिपूर्वक मन, वाणी र शरीरले सम्पूर्णतः भगवान्‌कै शरण परेर नाम, गुण र प्रभावसहित उहाँको स्वरूपको निरन्तर चिन्तन गर्नु (अ० ६ श्लोक ४७), यो कर्मयोगको साधना हो।

उक्त दुवै साधनाको परिणाम एउटै हुनाले ती वास्तवमा अभिन्न मानिएका छन् (अ० ५ श्लोक ४-५), तर साधनाकालमा अधिकारी-भेदले दुवैको भेद हुनाले दुवै मार्ग भिन्न-भिन्न बताइएका छन् (अ० ३ श्लोक ३)। यसर्थ, एउटा पुरुष दुवै मार्गमा एकै पटक हिँड्न सक्दैन, जसरी गङ्गाजी भएको ठाउँमा जाने दुई बाटाहरू भए पनि एउटा मानिस एउटै समयमा दुईटै बाटोबाट हिँड्न सक्दैन। ती साधनामध्ये कर्मयोगको साधना संन्यास-आश्रममा उचित हुँदैन, किनकि संन्यास-आश्रममा कर्महरूको स्वरूपदेखि पनि त्याग गर्ने कुरा बताइएको छ, तर साङ्ख्ययोगको साधना सबै आश्रमहरूमा उचित हुन सक्छ।

यदि साङ्ख्ययोगलाई भगवान्‌ले संन्यासको नामले बताउनुभएको छ, यसर्थ त्यसको अधिकार संन्यास आश्रममै छ, गृहस्थमा होइन भनेर भन्ने हो भने यो ठीक होइन, किनकि अर्को अध्यायमा श्लोक ११ देखि ३० सम्म जुन साङ्ख्यनिष्ठाको उपदेश गरिएको छ, त्यसअनुसार पनि भगवान्‌ले ठाउँ-ठाउँमा अर्जुनलाई युद्ध गर्ने योग्यता देखाउनुभएको छ। यदि गृहस्थमा साङ्ख्ययोगको अधिकार नै हुँदैनथ्यो भने भगवान्‌ले यसरी किन भन्न सक्नुहुन्थ्यो र? हो, यत्ति विशेषता अवश्य छ कि साङ्ख्यमार्गको अधिकारी देहाभिमानदेखि रहित हुनपर्‍यो, किनभने जबसम्म शरीरमा अहम्‌भाव रहन्छ, तबसम्म साङ्ख्ययोगको साधनालाई राम्ररी बुझ्न सकिँदैन। यसर्थ, भगवान्‌ले साङ्ख्ययोगलाई कठिन बताउनुभएको छ (अ० ५ श्लोक ६) भने (कर्मयोग) साधना सुगम हुने भएकाले अर्जुनप्रति ठाउँ-ठाउँमा तिमीले मेरो चिन्तन गर्दै कर्मयोगको आचरण गर भनेर भन्नुभएको छ।

~~o~~

# अथ ध्यानम्

**शान्ताकारं भुजग-शयनं, पद्मनाभं सुरेशं**
**विश्वाधारं गगन-सदृशं, मेघ-वर्णं शुभाङ्गम्।**
**लक्ष्मी-कान्तं कमल-नयनं, योगिभिर्-ध्यान-गम्यं**
**वन्दे विष्णुं भव-भय-हरं, सर्व-लोकैक-नाथम्॥**

*अर्थ*—जसको आकृति अतिशय शान्त छ, जो शेषनागको शय्यामाथि शयन गरिरहनुभएको छ, जसको नाभिमा कमल छ, जो देवताहरूका पनि ईश्वर र सम्पूर्ण जगत्का आधार हुनुहुन्छ, जो आकाशसदृश सर्वत्र व्याप्त हुनुहुन्छ, नीलो मेघसमान जसको वर्ण छ, अतिशय सुन्दर जसका सम्पूर्ण अङ्ग छन्, जो योगीहरूद्वारा ध्यान गरेर प्राप्त गरिनुहुन्छ, जो सम्पूर्ण लोकका स्वामी हुनुहुन्छ, जो जन्म-मरणरूपी भयलाई नाश गर्नेवाला हुनुहुन्छ, यस्ता लक्ष्मीपति, कमलनेत्र भगवान् श्रीविष्णुलाई म शिरले प्रणाम गर्दछु।

**यं ब्रह्मा वरुणेन्द्र-रुद्र-मरुतः, स्तुन्वन्ति दिव्यैः स्तवैर्-**
**वेदैः साङ्ग-पद-क्रमोप-निषदैर्-गायन्ति यं सामगाः।**
**ध्याना-वस्थित-तद्-गतेन मनसा, पश्यन्ति यं योगिनो-**
**यस्यान्तं न विदुः सुरासुर-गणा, देवाय तस्मै नमः॥**

*अर्थ*—ब्रह्मा, वरुण, इन्द्र, रुद्र र मरुद्गणले दिव्य स्तोत्रहरूद्वारा जसको स्तुति गर्दछन्, सामवेदका गाउने अङ्ग, पद, क्रम र उपनिषद्सहित वेदहरूद्वारा जसको गान गरिन्छ, योगीजन ध्यानमा स्थित तद्गत भएको मनले जसको दर्शन गर्दछन्, देवता र असुरगण (जोसुकै)ले जसको अन्त जान्दैनन्, ती (परमपुरुष नारायण) देवलाई मेरो नमस्कार छ।

**वसुदेव-सुतं देवं, कंस-चाणूर-मर्दनम्।**
**देवकी-परमानन्दं, कृष्णं वन्दे जगद्-गुरुम्॥**

*अर्थ*—वसुदेवका पुत्र, कंस र चाणूर नाम गरेका राक्षसको वध गर्ने, माता देवकीलाई ठूलो आनन्द दिलाउने जगत्का गुरु श्रीकृष्णचन्द्रको म वन्दना गर्दछु।



॥ ॐ श्रीपरमात्मने नमः ॥

# अथ श्रीमद्-भगवद्-गीता-माहात्म्यम्

गीता-शास्त्र-मिदं पुण्यं, यः पठेत्-प्रयतः पुमान्।
विष्णोः पद-मवाप्नोति, भय-शोकादि-वर्जितः ॥ १ ॥

गीता-ध्ययन-शीलस्य, प्राणायाम-परस्य च।
नैव सन्ति हि पापानि, पूर्व-जन्म-कृतानि च ॥ २ ॥

मल-निर्मोचनं पुंसां, जल-स्नानं दिने-दिने।
सकृद्-गीताम्भसि स्नानं, संसार-मल-नाशनम् ॥ ३ ॥

गीता सुगीता कर्तव्या, किमन्यैः शास्त्र-विस्तरैः।
या स्वयं पद्मनाभस्य, मुख-पद्माद्-विनिःसृता ॥ ४ ॥

भारतामृत-सर्वस्वं, विष्णोर्-वक्त्राद्-विनिःसृतम्।
गीता-गङ्गोदकं पीत्वा, पुनर्जन्म न विद्यते ॥ ५ ॥

सर्वोपनिषदो गावो, दोग्धा गोपाल-नन्दनः।
पार्थो वत्सः सुधीर्-भोक्ता, दुग्धं गीतामृतं महत् ॥ ६ ॥

एकं शास्त्रं देवकी-पुत्र-गीत-
मेको देवो देवकी-पुत्र एव।
एको मन्त्रस्-तस्य नामानि यानि
कर्माप्येकं तस्य देवस्य सेवा ॥ ७ ॥

~~~o~~~
~~~

# श्रीमद्-भगवद्-गीताका

## प्रधान विषयहरूको अनुक्रमणिका

| श्लोक | विषय |
|---|---|
| | **अर्जुनविषादयोग-नामको १ला अ० ॥** |
| १—११ | दुवै सेनाका प्रधान-प्रधान शूरवीरहरूको गणना र सामर्थ्यको कथन। |
| १२—१९ | दुवै सेनाहरूका शङ्खध्वनिको कथन। |
| २०—२७ | अर्जुनद्वारा सेना निरीक्षणको प्रसङ्ग। |
| २८—४७ | मोहले व्याप्त भएका अर्जुनको कायरता, स्नेह र शोकयुक्त वचन। |
| | **साङ्ख्ययोग-नामको दोस्रो अध्याय ॥** |
| १—१० | अर्जुनको कायरताको विषयमा श्रीकृष्णार्जुन संवाद। |
| ११—३० | साङ्ख्ययोगको विषय। |
| ३१—३८ | क्षात्रधर्मअनुसार युद्ध गर्नुपर्ने आवश्यकताको निरूपण। |
| ३९—५३ | कर्मयोगको विषय। |
| ५४—७२ | स्थिरबुद्धि भएका पुरुषहरूका लक्षण र तिनीहरूको महिमा। |
| | **कर्मयोग-नामको तेस्रो अध्याय ॥** |
| १—८ | ज्ञानयोग र कर्मयोगअनुसार अनासक्त-भावले निश्चित कर्म गर्नुपर्ने श्रेष्ठताको निरूपण। |
| ९—१६ | यज्ञादि कर्महरूको आवश्यकताको निरूपण। |
| १७—२४ | ज्ञानवान् र भगवान्का लागि पनि लोक-सङ्ग्रहार्थ कर्महरूको आवश्यकता। |
| २५—३५ | अज्ञानी र ज्ञानवान्का लक्षण तथा राग-द्वेषरहित भएर कर्म गर्नका लागि प्रेरणा। |
| ३६—४३ | कामको निरोधका विषयहरू। |
| | **ज्ञानकर्मसंन्यासयोग-नामको चौथो अध्याय ॥** |
| १—१८ | सगुण भगवान्को प्रभाव कर्मयोगको विषय। |
| १९—२३ | योगी महात्मा पुरुषहरूका आचरण र तिनको महिमा। |
| २४—३२ | फलसहित पृथक्-पृथक् यज्ञहरूको कथन। |
| ३३—४२ | ज्ञानको महिमा। |

| श्लोक | विषय |
|---|---|
| | **कर्मसंन्यासयोग-नामको पाँचौँ अध्याय॥** |
| १—६ | साङ्ख्ययोग र कर्मयोगको निर्णय। |
| ७—१२ | साङ्ख्ययोगी र कर्मयोगीका लक्षण र तिनको महिमा। |
| १३—२६ | ज्ञानयोगको विषय। |
| २७—२९ | भक्तिसहित ध्यानयोगको वर्णन। |
| | **आत्मसंयमयोग-नामको छैटौँ अध्याय॥** |
| १—४ | कर्मयोगको विषय र योगारूढ पुरुषका लक्षण। |
| ५—१० | आत्मउद्धारका लागि प्रेरणा र भगवत्प्राप्त पुरुषका लक्षण। |
| ११—३२ | विस्तारमा ध्यानयोगको विषय। |
| ३३—३६ | मन-निग्रहको विषय। |
| ३७—४७ | योगभ्रष्ट पुरुषको गतिको विषय र ध्यानयोगीको महिमा। |
| | **ज्ञानविज्ञानयोग-नामको सातौँ अध्याय॥** |
| १—७ | विज्ञानसहित ज्ञानको विषय। |
| ८—१२ | सम्पूर्ण पदार्थहरूमा कारणरूपले भगवान्‌को व्यापकताको कथन। |
| १३—१९ | आसुरी स्वभाववालाको निन्दा र भगवद्‌भक्तहरूको प्रशंसा। |
| २०—२३ | अन्य देवताहरूको उपासनाको विषय। |
| २४—३० | भगवान्‌को प्रभाव र स्वरूपलाई नजान्नेहरूको निन्दा र जान्नेहरूको महिमा। |
| | **अक्षरब्रह्मयोग-नामको आठौँ अध्याय॥** |
| १—७ | ब्रह्म, अध्यात्म र कर्मादिका विषयमा अर्जुनका ७ प्रश्न र तिनको उत्तर। |
| ८—२२ | भक्तियोगको विषय। |
| २३—२८ | शुक्ल र कृष्णमार्गको विषय। |
| | **राजविद्याराजगुह्ययोग-नामको नवौँ अध्याय॥** |
| १—६ | प्रभावसहित ज्ञानको विषय। |
| ७—१० | जगत्‌को उत्पत्तिको विषय। |
| ११—१५ | भगवान्‌लाई तिरस्कार गर्ने आसुरी प्रकृति भएकाहरूको निन्दा र दैवी प्रकृति भएकाहरूको भगवद्भजनको प्रकार। |

| श्लोक | विषय |
|---|---|



* हरिः ॐ तत्सत् *

ॐ श्रीपरमात्मने नमः

# श्रीमद्-भगवद्-गीता

## अथ प्रथमोऽध्यायः

### धृतराष्ट्र उवाच

**धर्मक्षेत्रे कुरुक्षेत्रे, समवेता युयुत्सवः।**
**मामकाः पाण्डवाश्-चैव, किमकुर्वत सञ्जय ॥ १ ॥**

**धृतराष्ट्रले भने**—हे सञ्जय! धर्मभूमि कुरूक्षेत्रमा युद्धको इच्छाले एकत्रित भएका मेरा तथा पाण्डुका पुत्रहरूले के गरे? ॥ १ ॥

### सञ्जय उवाच

**दृष्ट्वा तु पाण्डवानीकं, व्यूढं दुर्योधनस्-तदा।**
**आचार्य-मुप-सङ्गम्य, राजा वचन-मब्रवीत् ॥ २ ॥**

**सञ्जयले भने**—त्यतिखेर राजा दुर्योधनले व्यूहरचनाले युक्त पाण्डवका सेनालाई देखेपछि द्रोणाचार्यको समीपमा गएर यसो भने ॥ २ ॥

**पश्यैतां पाण्डु-पुत्राणा,-माचार्य महतीं चमूम्।**
**व्यूढां द्रुपद-पुत्रेण, तव शिष्येण धीमता ॥ ३ ॥**

हे आचार्य! तपाईँका बुद्धिमान् शिष्य द्रुपदपुत्र धृष्टद्युम्नद्वारा व्यूहाकाररूपमा उभ्याइएका पाण्डु-पुत्रहरूको यो विशाल सेनालाई हेर्नुहोस् ॥ ३ ॥

**अत्र शूरा महेष्वासा, भीमार्जुन-समा युधि।**
**युयुधानो विराटश्-च, द्रुपदश्-च महारथः ॥ ४ ॥**
**धृष्टकेतुश्-चेकितानः, काशिराजश्-च वीर्यवान्।**
**पुरुजित्-कुन्तिभोजश्-च, शैब्यश्-च नरपुङ्गवः ॥ ५ ॥**
**युधामन्युश्-च विक्रान्त, उत्तमौजाश्-च वीर्यवान्।**
**सौभद्रो द्रौपदेयाश्-च, सर्व एव महारथाः ॥ ६ ॥**

यो सेनामा देखिएका ठूलाठूला धनुष धारण गरेका तथा भीम र अर्जुनसमान शूरवीर सात्यकि एवं विराट तथा महारथी राजा द्रुपद, धृष्टकेतु र चेकितान तथा बलवान् काशिराज, पुरूजित्, कुन्तिभोज र मनुष्यहरूमा श्रेष्ठ शैब्य, पराक्रमी युधामन्यु तथा बलवान् उत्तमौजा, सुभद्रापुत्र अभिमन्यु एवं द्रौपदीका पाँचै पुत्र—यी सबै महारथी हुन्॥ ४-६ ॥

**अस्माकं तु विशिष्टा ये, तान्-निबोध द्विजोत्तम।**
**नायका मम सैन्यस्य, सञ्ज्ञार्थं तान् ब्रवीमि ते ॥ ७ ॥**

हे ब्राह्मणश्रेष्ठ! हाम्रो पक्षमा पनि जो प्रमुख छन्, तिनीहरूको नाम सुन्नुहोस्। तपाईंको जानकारीका लागि मेरो सेनाका जो-जो सेनापति छन्, म तिनका बारेमा भन्छु ॥ ७ ॥

**भवान्-भीष्मश्-च कर्णश्-च, कृपश्-च समितिञ्जयः ।**
**अश्वत्थामा विकर्णश्-च, सौमदत्तिस्-तथैव च ॥ ८ ॥**

तपाईँ (द्रोणाचार्य) र पितामह भीष्म तथा कर्ण अनि सङ्ग्रामविजयी कृपाचार्य तथा त्यस्तै अश्वत्थामा, विकर्ण र सोमदत्तका छोरा भूरिश्रवा हुनुहुन्छ ॥ ८ ॥

**अन्ये च बहवः शूरा, मदर्थे त्यक्त-जीविताः ।**
**नाना-शस्त्र-प्रहरणाः, सर्वे युद्ध-विशारदाः ॥ ९ ॥**

यी बाहेक मेरालागि जीवनकै आशा त्यागिदिने अरू पनि धेरै शूरवीरहरू विभिन्न किसिमका शस्त्रास्त्रहरूले सुसज्जित र सबै युद्धकलामा चतुर छन् ॥ ९ ॥

**अपर्याप्तं तदस्माकं, बलं भीष्माभि-रक्षितम् ।**
**पर्याप्तं त्विद-मेतेषां, बलं भीमाभि-रक्षितम् ॥ १० ॥**

भीष्मपितामहद्वारा रक्षित हाम्रो यो सेना सबै किसिमले अजेय छ र भीमद्वारा रक्षित यिनीहरूलाई यो सेना जित्नका लागि सुगम छ ॥ १० ॥

**अयनेषु च सर्वेषु, यथा-भाग-मवस्थिताः ।**
**भीष्म-मेवाभि-रक्षन्तु, भवन्तः सर्व एव हि ॥ ११ ॥**

यसर्थ, सबै मोर्चाहरूमा आ-आफ्ना ठाउँमा रहेर तपाईहरू सबैले निःसन्देह सबैतिरबाट भीष्मपितामहकै रक्षा गर्नुहोस् ॥ ११ ॥

**तस्य सञ्जनयन् हर्षं, कुरु-वृद्धः पितामहः।**
**सिंहनादं विनद्योच्चैः, शङ्खं दध्मौ प्रतापवान्॥ १२॥**

कौरवहरूमा वृद्ध निकै प्रतापी पितामह भीष्मले त्यस दुर्योधनका हृदयमा हर्ष उत्पन्न गर्दै उच्च स्वरमा सिंहकै समान गर्जिएर शङ्ख बजाए॥ १२॥

**ततः शङ्खाश्-च भेर्यश्-च, पणवानक-गोमुखाः।**
**सहसैवाभ्य-हन्यन्त, स शब्दस्-तुमुलोऽभवत्॥ १३॥**

त्यसपछि शङ्ख, दमाहा तथा ढोलक, मृदङ्ग र नरसिंघलगायत बाजा एकै पटक बजे। तिनको त्यो शब्द अत्यन्त भयङ्कर भयो॥ १३॥

**ततः श्वेतैर्-हयैर्-युक्ते, महति स्यन्दने स्थितौ।**
**माधवः पाण्डवश्-चैव, दिव्यौ शङ्खौ प्रदध्मतुः॥ १४॥**

त्यसपछि सेता घोडाहरूले युक्त उत्तम रथमा विराजमान भगवान् श्रीकृष्ण महाराज र अर्जुनले पनि अलौकिक शङ्ख बजाउनुभयो॥ १४॥

**पाञ्चजन्यं हृषीकेशो, देवदत्तं धनञ्जयः।**
**पौण्ड्रं दध्मौ महा-शङ्खं, भीमकर्मा वृकोदरः॥ १५॥**

भगवान् श्रीकृष्णले पाञ्चजन्य, अर्जुनले देवदत्त र भयानक कर्म गर्ने भीमसेनले पौण्ड्र नामक महाशङ्ख बजाए॥ १५॥

**अनन्त-विजयं राजा, कुन्ती-पुत्रो युधिष्ठिरः ।**
**नकुलः सहदेवश्-च, सुघोष-मणिपुष्पकौ ॥ १६ ॥**

कुन्तीपुत्र राजा युधिष्ठिरले अनन्तविजय नामक र नकुल अनि सहदेवले सुघोष एवं मणिपुष्पक नामक शङ्ख बजाए॥ १६ ॥

**काश्यश्-च परमेष्वासः, शिखण्डी च महारथः ।**
**धृष्टद्युम्नो विराटश्-च, सात्यकिश्-चापराजितः ॥ १७ ॥**
**द्रुपदो द्रौपदेयाश्-च, सर्वशः पृथिवी-पते ।**
**सौभद्रश्-च महाबाहुः, शङ्खान्-दध्मुः पृथक्-पृथक् ॥ १८ ॥**

हे राजन्! श्रेष्ठ धनुर्धर काशिराज, महारथी शिखण्डी, धृष्टद्युम्न तथा राजा विराट र सात्यकि, राजा द्रुपद एवं द्रौपदीका पाँचै पुत्रहरू र महाबाहु सुभद्रापुत्र अभिमन्यु—यी सबैले सबैतिरबाट बेग्लाबेग्लै शङ्खहरू बजाए॥ १७-१८ ॥

**स घोषो धार्तराष्ट्राणां, हृदयानि व्यदारयत् ।**
**नभश्-च पृथिवीं चैव, तुमुलो व्यनु-नादयन् ॥ १९ ॥**

त्यस भयानक शब्दले आकाश अनि पृथ्वीलाई नै गुञ्जाउँदै धृतराष्ट्रका पुत्रहरूको हृदय छिया-छिया गरिदियो॥ १९ ॥

**अथ व्यवस्थितान् दृष्ट्वा, धार्तराष्ट्रान् कपिध्वजः ।**
**प्रवृत्ते शस्त्र-सम्पाते, धनुरुद्यम्य पाण्डवः ॥ २० ॥**
**हृषीकेशं तदा वाक्य,-मिदमाह महीपते ।**

*अर्जुन उवाच*

**सेनयो-रुभयोर्-मध्ये, रथं स्थापय मेऽच्युत ॥ २१ ॥**

हे राजन्! यसपछि कपिध्वज अर्जुनले मोर्चा बाँधेर डटेका धृतराष्ट्रका नाता सम्बन्धीहरूलाई देखेर, त्यो शस्त्र चल्ने तयारीका समयमा धनुष उठाई हृषीकेश श्रीकृष्ण भगवान्सित बिन्ती गरे— हे अच्युत! मेरो रथलाई दुवै सेनाका बीचमा उभ्याउनुहोस् ॥ २०-२१ ॥

**यावदेतान्-निरीक्षेऽहं, योद्धु-कामा-नवस्थितान् ।**
**कैर्मया सह योद्धव्य,-मस्मिन्-रण-समुद्यमे ॥ २२ ॥**

मैले युद्धक्षेत्रमा डटिरहेका कुन-कुन युद्धाभिलाषी यी विपक्षी योद्धाहरूसित युद्ध गर्नुपर्ने हो, त्यो राम्ररी देख्ने अवस्थासम्म यो रथलाई उभ्याइ-राख्नुहोस् ॥ २२ ॥

योत्स्य-माना-नवेक्षेऽहं, य एतेऽत्र समागताः।
धार्तराष्ट्रस्य दुर्बुद्धेर्,-युद्धे प्रिय-चिकीर्षवः ॥ २३ ॥

युद्धमा दुर्बुद्धि दुर्योधनको हित चिताउने जोजो राजाहरू यो सेनामा आएका छन्, म ती युद्ध गर्नेहरूलाई हेर्ने छु ॥ २३ ॥

*सञ्जय उवाच*

एवमुक्तो हृषीकेशो, गुडाकेशेन भारत।
सेनयो-रुभयोर्-मध्ये, स्थापयित्वा रथोत्तमम् ॥ २४ ॥
भीष्म-द्रोण-प्रमुखतः, सर्वेषां च महीक्षिताम्।
उवाच पार्थ पश्यैतान्, समवेतान् कुरूनिति ॥ २५ ॥

**सञ्जयले भने**—हे धृतराष्ट्र! अर्जुनले यति भनिसकेपछि भगवान् श्रीकृष्णचन्द्रले दुवै सेनाहरूका बीचमा भीष्म, द्रोणाचार्य र सम्पूर्ण राजाहरूका सामुन्ने उत्तम रथलाई उभ्याएर यसो भन्नुभयो—हे पार्थ! युद्धका लागि जुटेका यी कौरवहरूलाई हेर ॥ २४-२५ ॥

तत्रापश्यत् स्थितान् पार्थः, पितॄनथ पितामहान्।
आचार्यान्मातुलान्भ्रातॄन्, पुत्रान्पौत्रान्सखींस्-तथा ॥ २६ ॥
श्वशुरान् सुहृदश्-चैव, सेनयो-रुभयोरपि।

त्यसपछि पृथापुत्र अर्जुनले ती दुवै सेनाहरूमा

रहेका ठूलाबा–काकाहरू, हजुरबा–बूढाहजुरबाहरू, गुरूहरू, मामाहरू, दाजुभाइ, छोराहरू, नातिहरू, ससुराहरू र इष्टमित्रहरूलाई पनि देखे ॥२६ र २७ को पूर्वार्ध ॥

**तान् समीक्ष्य स कौन्तेयः, सर्वान् बन्धू-नवस्थितान् ॥ २७ ॥**
**कृपया परयाविष्टो, विषीदन्-निदमब्रवीत् ।**

त्यहाँ उपस्थित सम्पूर्ण बन्धुवान्धवहरूलाई देखेर ती कुन्तिपुत्र अर्जुन अत्यन्त करूणाले भरिएर शोक गर्दै यसप्रकार भन्नलागे ॥ २७ को उत्तरार्ध र २८ को पूर्वार्ध ॥

*अर्जुन उवाच*

**दृष्ट्वेमं स्वजनं कृष्ण, युयुत्सुं समुपस्थितम् ॥ २८ ॥**
**सीदन्ति मम गात्राणि, मुखं च परिशुष्यति ।**
**वेपथुश्-च शरीरे मे, रोमहर्षश्-च जायते ॥ २९ ॥**

**अर्जुनले भने**—हे कृष्ण! युद्ध क्षेत्रमा डटेका युद्धका अभिलाषी यी स्वजनसमुदायलाई देखेर मेरा अङ्गहरू शिथिल हुँदै गइरहेका छन्, मुख सुक्दै छ, शरीर काँपेको छ भने रौँहरू ठडिएका छन् ॥ २८ को उत्तरार्ध र २९ ॥

**गाण्डीवं स्रंसते हस्तात्, त्वक्चैव परिदह्यते।**
**न च शक्नो-म्यवस्थातुं, भ्रमतीव च मे मनः ॥ ३० ॥**

मेरा हातबाट गाण्डीव धनुष खस्न लागिरहेको छ, शरीरको छाला पनि पोलिरहेको छ र मन पनि भ्रमित भइरहेको छ; यसर्थ म उभिन पनि सकेको छैन॥ ३० ॥

**निमित्तानि च पश्यामि, विपरीतानि केशव।**
**न च श्रेयोऽनु-पश्यामि, हत्वा स्वजन-माहवे॥ ३१ ॥**

हे केशव! मैले लक्षणहरू पनि विपरीत देखिरहेको छु भने युद्धमा स्वजनसमुदायलाई मारेर कल्याण पनि देख्दिनँ॥ ३१ ॥

**न काङ्क्षे विजयं कृष्ण, न च राज्यं सुखानि च।**
**किं नो राज्येन गोविन्द, किं भोगैर्-जीवितेन वा॥ ३२ ॥**

हे कृष्ण! म न त विजय चाहन्छु, न राज्य तथा सुख नै। हे गोविन्द! हामीलाई यस्तो राज्यको के प्रयोजन अथवा यस्तो भोगसित र जीवनबाट के नै लाभ छ र?॥ ३२ ॥

**येषामर्थे काङ्क्षितं नो, राज्यं भोगाः सुखानि च।**
**त इमेऽवस्थिता युद्धे, प्राणांस्-त्यक्त्वा धनानि च॥ ३३ ॥**

हामीलाई जसको लागि राज्य, भोग र सुखादिको

अपेक्षा छ, ती सबै त धन र जीवनकै आशालाई त्यागेर युद्धमा उभिएका छन्॥ ३३॥

**आचार्याः पितरः पुत्रास्, -तथैव च पितामहाः।**
**मातुलाः श्वशुराः पौत्राः, श्यालाः सम्बन्धिनस्-तथा॥ ३४॥**

जहाँ गुरूजन, हजुरबाहरू, छोराहरू, नातिहरू, मामा, ससुरा, सालालगायत अन्य कयौँ आफन्तहरू रहेका छन्॥ ३४॥

**एतान्न हन्तु-मिच्छामि, घ्नतोऽपि मधुसूदन।**
**अपि त्रैलोक्य-राज्यस्य, हेतोः किं नु मही-कृते॥ ३५॥**

हे मधुसूदन! यदि यिनीहरू मलाई मार्न आइलागे भने पनि पृथ्वीको मात्र के कुरा? तीनै लोकको राज्य पाइने भए पनि म यिनीहरूलाई मार्न चाहन्नँ॥ ३५॥

**निहत्य धार्तराष्ट्रान्नः, का प्रीतिः स्याज्-जनार्दन।**
**पाप-मेवाश्रये-दस्मान्, हत्वैता-नाततायिनः ॥ ३६॥**

हे जनार्दन! धृतराष्ट्रका छोराहरूलाई मारेर हामीलाई के खुसी होला र? यी आततायीलाई मारेर त हामीलाई केवल पाप मात्र लाग्नेछ॥ ३६॥

**तस्मान्नार्हा वयं हन्तुं, धार्तराष्ट्रान् स्व-बान्धवान्।**
**स्वजनं हि कथं हत्वा, सुखिनः स्याम माधव॥ ३७॥**

त्यसकारण हे माधव! हामीहरू आफ्ना बान्धव धृतराष्ट्रका पुत्रहरूलाई मार्न योग्य छैनौं, किनकि आफ्नै बन्धुहरूलाई मारेर हामी कसरी सुखी हुन्छौँ? ॥ ३७ ॥

**यद्यप्येते न पश्यन्ति, लोभोपहत-चेतसः ।**
**कुल-क्षय-कृतं दोषं, मित्र-द्रोहे च पातकम् ॥ ३८ ॥**
**कथं न ज्ञेय-मस्माभिः, पापा-दस्मान्-निवर्तितुम् ।**
**कुल-क्षय-कृतं दोषं, प्रपश्यद्भिर्-जनार्दन ॥ ३९ ॥**

यद्यपि लोभले गर्दा चित्तभ्रष्ट भएका यी कौरवबन्धुहरू वंशनाशबाट पैदा हुने दोषलाई र मित्रहरूसँगको वैरभावबाट हुने पापलाई देख्दैनन्, तापनि हे जनार्दन! कुलको नाशबाट उत्पन्न दोषहरूलाई जान्ने हामीहरूले यस पापबाट मुक्त हुनका लागि किन विचार नगर्ने? ॥ ३८-३९ ॥

**कुल-क्षये प्रणश्यन्ति, कुल-धर्माः सनातनाः ।**
**धर्मे नष्टे कुलं कृत्स्न,-मधर्मोऽभि-भवत्युत ॥ ४० ॥**

कुलको नाशबाट सनातन कुलधर्म नष्ट हुन्छन्, धर्मको नाश हुँदा सम्पूर्ण कुलमा पाप पनि प्रशस्त फैलन्छ ॥ ४० ॥

**अधर्माभि-भवात्-कृष्ण, प्रदुष्यन्ति कुल-स्त्रियः।**
**स्त्रीषु दुष्टासु वार्ष्णेय, जायते वर्ण-सङ्करः॥ ४१॥**

हे कृष्ण! पाप धेरै बढेपछि कुलका स्त्रीहरू अत्यन्त दूषित हुन जान्छन् र हे वार्ष्णेय! स्त्रीहरू दूषित हुँदा वर्णसङ्कर उत्पन्न हुन्छ ॥ ४१ ॥

**सङ्करो नरकायैव, कुलघ्नानां कुलस्य च।**
**पतन्ति पितरो ह्येषां, लुप्त-पिण्डोदक-क्रियाः॥ ४२॥**

अनि वर्णसंकर कुलघातीहरूलाई र कुललाई नरकमा लाने कारण बन्दछ। लुप्त भएको पिण्ड र जलको क्रिया हरू अर्थात् श्राद्ध र तर्पणद्वारा वञ्चित यिनीहरूका पितृहरूले पनि अधोगतिलाई प्राप्त गर्छन्॥ ४२॥

**दोषैरेतैः कुलघ्नानां, वर्ण-सङ्कर-कारकैः।**
**उत्साद्यन्ते जाति-धर्माः, कुल-धर्माश्-च शाश्वताः॥ ४३॥**

यी वर्णसङ्करकारक दोषहरूले गर्दा कुलघाती-हरूका सनातन कुलधर्म र जातिधर्म नष्ट हुन पुग्दछन्॥ ४३॥

**उत्सन्न-कुल-धर्माणां, मनुष्याणां जनार्दन।**
**नरकेऽनियतं वासो, भवती-त्यनु-शुश्रुम॥ ४४॥**

हे जनार्दन! जसको कुलधर्म नष्ट भएको छ, त्यस्ता मानिसहरूको अनन्त समयसम्म नरकमा वास हुन्छ भन्ने हामीले सुन्दै आएका छौं॥ ४४॥

**अहो बत महत्-पापं, कर्तुं व्यवसिता वयम्।**
**यद्-राज्य-सुख-लोभेन, हन्तुं स्वजन-मुद्यताः ॥ ४५ ॥**

अहो! अपसोचको कुरा! हामी बुद्धिमान् भएर पनि ज्यादै ठूलो पाप गर्नका लागि तयार भएका छौँ, किनभने राज्यसुखको लोभले आफन्तलाई नै मार्नका लागि उद्यत भएका छौँ॥ ४५ ॥

**यदि मामप्रतीकार,-मशस्त्रं शस्त्र-पाणयः।**
**धार्तराष्ट्रा रणे हन्युस्, -तन्मे क्षेमतरं भवेत्॥ ४६ ॥**

यदि म शस्त्ररहित एवं सामना नगर्नेलाई शस्त्र हातमा लिएका धृतराष्ट्रका छोराहरूले रणयुद्धमा मारे भने पनि त्यसरी मर्नु मेरालागि अधिक कल्याणकारक हुनेछ॥ ४६ ॥

*सञ्जय उवाच*

**एव-मुक्त्वार्जुनः सङ्ख्ये, रथोपस्थ उपाविशत्।**
**विसृज्य सशरं चापं, शोक-संविग्न-मानसः ॥ ४७ ॥**

**सञ्जयले भने**—रणभूमिमा शोकले व्याकुल मन भएका अर्जुनले यति भनेर बाणसहित धनुषलाई छोडेर रथको पछाडिपट्टि गएर बसे॥ ४७ ॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, अर्जुन-विषाद-योगो नाम प्रथमोऽध्यायः॥ १ ॥

~~०~~

ॐ श्रीपरमात्मने नमः

# अथ द्वितीयोऽध्यायः

## सञ्जय उवाच

तं तथा कृपयाविष्ट,-मश्रु-पूर्णा-कुलेक्षणम्।
विषीदन्त-मिदं वाक्य,-मुवाच मधुसूदनः ॥ १ ॥

**सञ्जयले भने**—त्यसरी करूणाले व्याप्त भई आँसुले भरिएको व्याकुल नेत्र भएका शोकाकुल ती अर्जुनलाई भगवान् मधुसूदनले यस्तो वचन भन्नुभयो ॥ १ ॥

## श्रीभगवानुवाच

कुतस्त्वा कश्मल-मिदं, विषमे समुपस्थितम्।
अनार्य-जुष्ट-मस्वर्ग्य,-मकीर्ति-कर-मर्जुन ॥ २ ॥

**श्रीभगवान्ले भन्नुभयो**—हे अर्जुन! तिमीलाई यो असमयमा यो मोह कहाँबाट प्राप्त भयो? किनभने यो न त श्रेष्ठ पुरूषको आचरण हो, न यसले स्वर्ग प्रदान गर्छ र न यसले कीर्ति नै दिन्छ ॥ २ ॥

क्लैब्यं मा स्म गमः पार्थ, नैतत्-त्वय्युप-पद्यते।
क्षुद्रं हृदय-दौर्बल्यं, त्यक्त्वोत्तिष्ठ परन्-तप ॥ ३ ॥

यसर्थ, हे अर्जुन! नपुंसक नबन, तिमीलाई यस्तो बन्न सुहाउँदैन। हे परंतप! हृदयको तुच्छ

दुर्बलतालाई त्यागी युद्धका लागि उठ॥ ३॥

## अर्जुन उवाच

**कथं भीष्म-महं सङ्ख्ये, द्रोणं च मधुसूदन।**
**इषुभिः प्रति योत्स्यामि, पूजार्हा-वरि-सूदन॥ ४॥**

**अर्जुनले भने**—हे मधुसूदन! रणभूमिमा भीष्मपितामह र द्रोणाचार्यविरूद्ध म बाणहरू लिएर कसरी युद्ध लडूँला? हे अरिसूदन! किनभने उहाँहरू दुवै मेरालागि पूजनीय हुनुहुन्छ॥ ४॥

**गुरू-नहत्वा हि महानुभावान्**
**श्रेयो भोक्तुं भैक्ष्य-मपीह लोके।**
**हत्वार्थ-कामांस्तु गुरूनिहैव**
**भुञ्जीय भोगान् रुधिर-प्रदिग्धान्॥ ५॥**

यसैले, म यी महानुभाव गुरूजनलाई मार्नुभन्दा बरू यस लोकमा भिक्षा मागेर त्यही अन्न खानुमा कल्याण देख्छु, किनकि गुरूजनलाई मारेर पनि मैले रक्तरञ्जित अर्थ र कामरूपी भोगहरूलाई नै त भोग्ने हो॥ ५॥

**न चैतद्-विद्मः कतरन्नो गरीयो-**
**यद्वा जयेम यदि वा नो जयेयुः।**

**यानेव हत्वा न जिजीविषामस्-**

**तेऽवस्थिताः प्रमुखे धार्तराष्ट्राः ॥ ६ ॥**

हाम्रो लागि युद्ध गर्नु या नगर्नु कुन कुरा श्रेष्ठ छ, यो पनि हामी जान्दैनौं । हामीलाई यो पनि थाहा छैन की तिनलाई हामीले जित्छौं या तिनीहरूले हामीलाई जित्लान्। फेरि, जसलाई मारेर हामी बाँच्नै चाहँदैनौँ, तीनै आत्मीय धृतराष्ट्रका पुत्रहरू हाम्रो सामु युद्ध गर्नका लागि तयार छन् ॥ ६ ॥

**कार्पण्य-दोषो-पहत-स्वभावः**

**पृच्छामि त्वां धर्म-सम्मूढ-चेताः ।**

**यच्छ्रेयः स्यान्-निश्चितं ब्रूहि तन्मे**

**शिष्यस्तेऽहं शाधि मां त्वां प्रपन्नम् ॥ ७ ॥**

यसर्थ, कायरतारूपी दोषले उपहत स्वभाव तथा धर्मको विषयमा मोहचित्त भएको म हजुरसँग सोद्धछु —जुन कुरा निश्चित कल्याणकारक छ, त्यही निश्चय गरेर मलाई आज्ञा होस्, किनकि म हजुरको शिष्य हुँ, शरणागत मलाई उपयुक्त शिक्षा दिनुहोस् ॥ ७ ॥

**न हि प्रपश्यामि ममा-पनुद्याद्-**

**यच्छोक-मुच्छोषण-मिन्द्रियाणाम् ।**

**अवाप्य भूमा-वसपत्न-मृद्धं**
**राज्यं सुराणा-मपि चाधिपत्यम् ॥ ८ ॥**

किनकि यस भूमिमा धनधान्यसम्पन्न अकण्टक राज्य र देवताहरूको स्वामित्व पाएर पनि म त्यस्तो कुनै उपाय देख्दिनँ, जसले मेरा इन्द्रियहरूलाई सुकाउने शोकलाई हटाउन सकोस् ॥ ८ ॥

## *सञ्जय उवाच*

**एवमुक्त्वा हृषीकेशं, गुडाकेशः परन्-तप।**
**न योत्स्य इति गोविन्द,-मुक्त्वा तूष्णीं बभूव ह ॥ ९ ॥**

**सञ्जय भन्दछन्**—हे राजन्! निद्राविजयी अर्जुनले अन्तर्यामी भगवान् श्रीकृष्णसमक्ष यति कुरा बताई पुनः श्रीगोविन्द भगवान्‌सित स्पष्टरूपले-हे गोविन्द! 'म युद्ध गर्दिनँ' भनेर चुप लागे ॥ ९ ॥

**तमुवाच हृषीकेशः, प्रहसन्-निव भारत।**
**सेनयो-रुभयोर्-मध्ये, विषीदन्त-मिदं वचः ॥ १० ॥**

हे भरतवंशी धृतराष्ट्र! दुवै सेनाको बीचमा शोकमग्न भएका ती अर्जुनलाई अन्तर्यामी भगवान् श्रीकृष्णले मुस्कुराउँदै यसो भन्नुभयो ॥ १० ॥

## श्रीभगवानुवाच

**अशोच्या-नन्व-शोचस्-त्वं, प्रज्ञा-वादांश्-च भाषसे।**
**गतासू-नगतासूंश्-च, नानु-शोचन्ति पण्डिताः॥ ११॥**

**श्रीभगवान्ले भन्नुभयो**—हे अर्जुन! तिमी जसका लागि शोक गर्दैछौ, जो शोक गर्न योग्य छैनन् र पण्डितजनले झैँ बोल्दै पनि छौ, तर तिनका प्राण गइसकेको छ, तिनका लागि र जो जीवित छन्, तिनका लागि पनि पण्डितजन शोक गर्दैनन्॥ ११॥

**न त्वेवाहं जातु नासं, न त्वं नेमे जनाधिपाः।**
**न चैव न भविष्यामः, सर्वे वयमतः परम्॥ १२॥**

कुनै समयमा म थिइनँ, तिमी थिएनौ अथवा यी राजाहरू थिएनन् भन्ने कुरा होइन। न त यसपछि हामी कोही पनि रहँदैनौँ भन्ने कुरा हो, किनभने हामी सबै शरीरको जन्म र मृत्युदेखि पर छौँ॥ १२॥

**देहिनोऽस्मिन् यथा देहे, कौमारं यौवनं जरा।**
**तथा देहान्तर-प्राप्तिर्,-धीरस्-तत्र न मुह्यति॥ १३॥**

जसरी जीवात्माको यो शरीरमा बालकपना, युवावस्था, वृद्धावस्था हुन्छ, त्यसरी नै अन्य शरीरको प्राप्ति हुन्छ, त्यसमा तत्त्वज्ञानी धीरपुरूष कहिल्यै मोहित हुँदैनन्॥ १३॥

**मात्रा-स्पर्शास्-तु कौन्तेय, शीतोष्ण-सुख-दुःखदाः ।**
**आगमा-पायिनोऽनित्यास्,-तांस्-तितिक्षस्व भारत ॥ १४ ॥**

हे कुन्तीपुत्र! जाडो-गर्मी र सुख-दुःख प्रदान गर्ने इन्द्रिय र विषयहरूको संयोग त उत्पत्ति विनाशशील र अनित्य छन्, तसर्थ हे भरतवंशी अर्जुन! तिमीले यिनलाई सहन गर॥ १४ ॥

**यं हि न व्यथयन्त्येते, पुरुषं पुरुषर्षभ।**
**सम-दुःख-सुखं धीरं, सोऽमृतत्वाय कल्पते॥ १५ ॥**

किनकि हे पुरूषश्रेष्ठ! दुःख-सुखलाई समान ठान्ने जुन धीर पुरूषलाई यी इन्द्रिय तथा विषयहरूको संयोगले विचलित पार्न सक्तैनन्, त्यो पुरूष मोक्ष प्राप्तिका लागि योग्य ठहरिन्छ॥ १५ ॥

**नासतो विद्यते भावो, नाभावो विद्यते सतः ।**
**उभयोरपि दृष्टोऽन्तस्,-त्वनयोस्-तत्त्व-दर्शिभिः ॥ १६ ॥**

असत् वस्तुको अस्तित्व नै छैन भने सत्‌को अभाव छैन। यसप्रकार, यी दुवैको तत्त्व तत्त्वज्ञानी पुरूषहरूद्वारा देखिएको हुन्छ॥ १६ ॥

**अविनाशि तु तद्-विद्धि, येन सर्वमिदं ततम्।**
**विनाश-मव्ययस्यास्य, न कश्चित् कर्तु-मर्हति॥ १७॥**

कहिल्यै नाश नहुने तत्त्व ता त्यसलाई जान, जसद्वारा यो सम्पूर्ण विश्व व्याप्त छ। अविनाशी यस नित्यको नाश गर्न कोही पनि समर्थ छैन॥ १७॥

**अन्तवन्त इमे देहा, नित्यस्योक्ताः शरीरिणः।**
**अनाशिनोऽप्रमेयस्य, तस्माद्-युध्यस्व भारत॥ १८॥**

यस नाशरहित, अप्रमेय, नित्यस्वरूप जीवात्माका यी सबै शरीर नाशवान् मानिएका छन्। यसर्थ, हे भरतवंशी अर्जुन! तिमी युद्ध गर॥ १८॥

**य एनं वेत्ति हन्तारं, यश्-चैनं मन्यते हतम्।**
**उभौ तौ न विजानीतो, नायं हन्ति न हन्यते॥ १९॥**

जसले यस आत्मालाई मार्नेवाला ठान्दछ अथवा जसले यसलाई मरेको ठान्दछ, ती दुवैले जान्दैनन्; किनकि यो आत्माले वास्तवमा न त कसैलाई मार्दछ, न त कसैद्वारा मारिन्छ॥ १९॥

**न जायते म्रियते वा कदाचिन्-**
**नायं भूत्वा भविता वा न भूयः।**
**अजो नित्यः शाश्वतोऽयं पुराणो**
**न हन्यते हन्यमाने शरीरे॥ २०॥**

यो आत्मा न कुनै कालमा जन्मन्छ, न त मर्छ नै, अथवा यो आत्मा पहिले भएर फेरि हुनेवाला

होइन। त्यसैले यो आत्मा अजन्मा, नित्य, निरन्तर रहिरहने शाश्वत छ र पुरातन पनि छ। यो देह मृत्यु भएपछि पनि यसको नाश हुँदैन॥ २०॥

**वेदाविनाशिनं नित्यं, य एन-मज-मव्ययम्।**
**कथं स पुरुषः पार्थ, कं घातयति हन्ति कम्॥ २१॥**

हे पृथापुत्र अर्जुन! जो पुरूष यस आत्मालाई अविनाशी, नित्य, अजन्मा र अव्यय छ भन्ने जान्दछ, त्यो पुरूषले कसरी कसलाई मार्न लगाउँछ वा कसलाई मार्दछ?॥ २१॥

**वासांसि जीर्णानि यथा विहाय**
**नवानि गृह्णाति नरोऽपराणि।**
**तथा शरीराणि विहाय जीर्णा-**
**न्यन्यानि संयाति नवानि देही॥ २२॥**

जसरी मानिसले पुराना कपडा फालेर नयाँ कपडा लगाउँछन्, त्यसैगरी जीवात्माले पनि पुराना शरीरहरूलाई त्यागेर नयाँ शरीर ग्रहण गर्दछ॥ २२॥

**नैनं छिन्दन्ति शस्त्राणि, नैनं दहति पावकः।**
**न चैनं क्लेदयन्-त्यापो, न शोषयति मारुतः॥ २३॥**

यस आत्मालाई शस्त्रले काट्न सक्दैन, यसलाई

आगोले पनि जलाउन सक्दैन, पानीले गलाउन सक्दैन भने वायुले पनि सुकाउन सक्दैन॥ २३॥

**अच्छेद्योऽय-मदाह्योऽय,-मक्लेद्योऽशोष्य एव च।**
**नित्यः सर्वगतः स्थाणु,-रचलोऽयं सनातनः॥ २४॥**

यो आत्मा अच्छेद्य(काट्न नसकिने), अदाह्य, (जलाउन नसकिने) अक्लेद्य (गलाउन नसकिने)र अशोष्य (सुकाउन नसकिने) छ। त्यसैलै, यो आत्मा नित्य, सर्वव्यापी, अचल, स्थिर छ र सनातन छ॥ २४॥

**अव्यक्तोऽय-मचिन्त्योऽय,-मविकार्योऽय-मुच्यते।**
**तस्मादेवं विदित्वैनं, नानु-शोचितु-मर्हसि॥ २५॥**

यो आत्मा अव्यक्त, अचिन्त्य र विकाररहित छ मनिन्छ। यसर्थ, हे अर्जुन! यो आत्मालाई यस किसिमको तत्त्व जानेर तिमी शोक गर्न योग्य छैनौ अर्थात् तिमीले शोक गर्नु उचित छैन॥ २५॥

**अथ चैनं नित्य-जातं, नित्यं वा मन्यसे मृतम्।**
**तथापि त्वं महाबाहो, नैवं शोचितु-मर्हसि॥ २६॥**

तर यदि तिमीले यो आत्मालाई सधैँ जन्मनेवाला र मर्नेवाला मान्छौ भने पनि हे महाबाहो! तिमीले यसका लागि शोक गर्नु उचित छैन॥ २६॥

**जातस्य हि ध्रुवो मृत्युर्,-ध्रुवं जन्म मृतस्य च।**
**तस्मा-दपरिहार्येऽर्थे, न त्वं शोचितु-मर्हसि॥ २७॥**

किनभने जसले जन्म लिन्छ, उसको मृत्यु निश्चित छ, त्यसरी नै मरेकाको जन्म पनि सुनिश्चित छ। त्यसैकारण नभई नछाड्ने विषयमा तिमीले शोक गर्न योग्य छैन॥ २७॥

**अव्यक्तादीनि भूतानि, व्यक्त-मध्यानि भारत।**
**अव्यक्त-निधनान्येव, तत्र का परिदेवना॥ २८॥**

हे अर्जुन! सम्पूर्ण प्राणीहरू जन्मपूर्व अप्रकट नै थिए र मरेपछि पनि अप्रकट नै रहन्छन्। केवल बीचमा देखिएका मात्र हुन्, यस्तो अवस्थामा पनि केको शोक गर्नु?॥ २८॥

**आश्चर्यवत्-पश्यति कश्चिदेन-**
**माश्चर्य-वद्-वदति तथैव चान्यः।**
**आश्चर्य-वच्चैन-मन्यः शृणोति**
**श्रुत्वा-प्येनं वेद न चैव कश्चित्॥ २९॥**

कुनै महापुरूषले यस आत्मालाई आश्चर्यजनक देख्दछ, त्यसैगरी अर्को महापुरूषले यसको तत्त्वलाई आश्चर्यमय भनी वर्णन गर्दछ भने अर्को कुनै अधिकारी पुरूषले यसलाई आश्चर्यसाथ सुन्दछ र कसैकसैले त सुनेर पनि यसलाई बुझ्दैनन् ॥ २९ ॥

**देही नित्य-मवध्योऽयं, देहे सर्वस्य भारत।**
**तस्मात्-सर्वाणि भूतानि, न त्वं शोचितु-मर्हसि ॥ ३० ॥**

हे अर्जुन! यो आत्मा सबैको शरीरमा सदा अवध्य* छ। यसर्थ, सम्पूर्ण प्राणीहरूका लागि तिमीले शोक गर्नु हुँदैन ॥ ३० ॥

**स्वधर्म-मपि चावेक्ष्य, न विकम्पितु-मर्हसि।**
**धर्म्याद्धि युद्धाच्-छ्रेयोऽन्यत्, क्षत्रियस्य न विद्यते ॥ ३१ ॥**

आफ्नो धर्मलाई हेरेर पनि तिमी डराउन योग्य छैनौ अर्थात् तिमी डराउनुपर्दैन, किनकि क्षत्रियका लागि आफ्नो धर्ममय युद्धभन्दा ठूलो अर्को कुनै कल्याणकारी कर्तव्य छैन ॥ ३१ ॥

**यदृच्छया चोपपन्नं, स्वर्ग-द्वार-मपावृतम्।**
**सुखिनः क्षत्रियाः पार्थ, लभन्ते युद्ध-मीदृशम् ॥ ३२ ॥**

* जसको वध गर्न सकिँदैन।

हे पार्थ! स्वाभाविकरूपमा प्राप्त भएका र खुला भएका स्वर्गका ढोकारूपी यसप्रकारको युद्धलाई भाग्यवान क्षत्रियहरूले मात्रै प्राप्त गर्दछन्॥ ३२॥

**अथ चेत्त्व-मिमं धर्म्यं, सङ्ग्रामं न करिष्यसि।**
**ततः स्वधर्मं कीर्तिं च, हित्वा पाप-मवाप्स्यसि॥ ३३॥**

तर यदि यो धर्ममय युद्ध गरेनौ भने तिमीले स्वधर्म र कीर्तिलाई गुमाउँदै पापलाई प्राप्त गर्नेछौ॥ ३३॥

**अकीर्तिं चापि भूतानि,**
**कथयिष्यन्ति तेऽव्ययाम्।**
**संभावितस्य चाकीर्तिर्,-**
**मरणा-दतिरिच्यते ॥ ३४॥**

साँच्चै सबै जनाले धेरै वर्षसम्म तिम्रो अपकीर्तिको चर्चा गर्नेछन्, जुन अपकीर्ति प्रतिष्ठित पुरूषका लागि मृत्युभन्दा पनि ठूलो हुन्छ॥ ३४॥

**भयाद्-रणा-दुपरतं, मंस्यन्ते त्वां महारथाः।**
**येषां च त्वं बहुमतो, भूत्वा यास्यसि लाघवम्॥ ३५॥**

जसका दृष्टिमा तिमी पहिले निकै सम्मानित भएर पछि अपमानित हुने छौ र तिनै

महारथीहरूले तिमीलाई युद्धको भयले भागेको भन्ने ठान्नेछन्॥ ३५॥

**अवाच्य-वादांश्-च बहून्, वदिष्यन्ति तवाहिताः।**
**निन्दन्तस्-तव सामर्थ्यं, ततो दुःखतरं नु किम्॥ ३६॥**

तिम्रा वैरीहरूले तिम्रो सामर्थ्यको निन्दा गर्दै तिमीलाई भन्न नहुने धेरै कुरा पनि भन्ने छन्, त्योभन्दा अधिक दुःख के हुन्छ होला?॥ ३६॥

**हतो वा प्राप्स्यसि स्वर्गं, जित्वा वा भोक्ष्यसे महीम्।**
**तस्मा-दुत्तिष्ठ कौन्तेय, युद्धाय कृत-निश्चयः॥ ३७॥**

हे अर्जुन! यदि तिमी युद्धमा मारियौ भने स्वर्ग प्राप्त गर्नेछौ, अथवा विजयी भए पृथ्वीको भोग गर्नेछौ। यसकारण यही दृढनिश्चय लिएर युद्धका लागि खडा होऊ॥ ३७॥

**सुख-दुःखे समे कृत्वा, लाभालाभौ जयाजयौ।**
**ततो युद्धाय युज्यस्व, नैवं पाप-मवाप्स्यसि॥ ३८॥**

लाभ-हानि, जय-पराजय र सुख-दुःखलाई समान ठानेर त्यसपछि युद्धका लागि तयार होऊ; यसरी युद्ध गर्दा तिमी पापको भागी हुनुपर्दैन॥ ३८॥

**एषा तेऽभिहिता साङ्ख्ये, बुद्धिर्-योगे त्विमां शृणु ।**
**बुद्ध्या युक्तो यया पार्थ, कर्म-बन्धं प्रहास्यसि ॥ ३९ ॥**

हे पार्थ ! यो बुद्धि तिम्रा लागि ज्ञानयोगको[1] विषयमा ज्ञान बताइयो, अब तिमीले कर्मयोगका[2] बारेमा सुन– जुन बुद्धिले युक्त भई तिमीले कर्मका बन्धनलाई त्याग गर्नेछौ अर्थात् सर्वथा नष्ट गरिदिने छौ ॥ ३९ ॥

**नेहाभिक्रम-नाशोऽस्ति, प्रत्यवायो न विद्यते ।**
**स्वल्प-मप्यस्य धर्मस्य, त्रायते महतो भयात् ॥ ४० ॥**

यस कर्मयोगमा आरम्भको अर्थात् बीजको नाश हुँदैन भने उल्टो फल दिने दोष पनि हुँदैन, जबकि यो कर्मयोगरूपी धर्मको अलिकति पनि साधनले जन्ममृत्युरूपी महान् भयबाट रक्षा गर्दछ ॥ ४० ॥

**व्यवसायात्मिका बुद्धि,-रेकेह कुरु-नन्दन ।**
**बहुशाखा ह्यनन्ताश्-च, बुद्धयोऽव्यव-सायिनाम् ॥ ४१ ॥**

हे अर्जुन! यस कर्मयोगमा निश्चयात्मिका बुद्धि एउटै हुन्छ, तर अस्थिर विचार भएका

---

१-२. अध्याय ३ श्लोक ३ को टिप्पणीमा यसको विस्तार गरिएको छ।

विवेकहीन सकाम मनुष्यका बुद्धिहरू भने निश्चय नै बहुभेदवाला र अनन्त हुन्छन् ॥ ४१ ॥

**यामिमां पुष्पितां वाचं, प्रवदन्त्य-विपश्चितः ।**
**वेद-वाद-रताः पार्थ, नान्य-दस्तीति वादिनः ॥ ४२ ॥**
**कामात्मानः स्वर्ग-परा, जन्म-कर्म-फल-प्रदाम् ।**
**क्रिया-विशेष-बहुलां, भोगैश्वर्य-गतिं प्रति ॥ ४३ ॥**
**भोगैश्वर्य-प्रसक्तानां, तयापहृत-चेतसाम् ।**
**व्यवसायात्मिका बुद्धिः, समाधौ न विधीयते ॥ ४४ ॥**

हे अर्जुन! जो भोगमा तल्लीन भइरहेका छन्, कर्मफलका प्रशंसक वेदवाक्यहरूमा नै प्रीति राख्दछन्, जसका बुद्धिमा स्वर्ग नै परम प्राप्य वस्तु हो र जो स्वर्गभन्दा माथि केही छैन मन्छन्, ती अविवेकीजनले यसप्रकारको जुन पुष्पित अर्थात् देखावटी कुरा गर्छन्, जुन कुरा जन्मरूपी कर्मफल प्रदान गर्ने एवम् भोग तथा ऐश्वर्यमा अति आसक्त छन्, ती मानिसको परमात्मामा निश्चयात्मिका बुद्धि हुँदैन ॥ ४२—४४ ॥

**त्रैगुण्य-विषया वेदा, निस्त्रैगुण्यो भवार्जुन।**
**निर्द्वन्द्वो नित्य-सत्त्वस्थो, निर्योग-क्षेम आत्मवान्॥ ४५॥**

हे अर्जुन! सबै वेदहरू सत्त्व, रज र तम यी तीन गुणको कार्यरूप समस्त भोग र तिनका साधनहरूलाई प्रकाशित गर्नेवाला हुन् । त्यसैले तिमी तीनै गुणको विषयबाट मुक्त भई आशक्तिरहित, हर्ष-शोकादिको द्वन्द्वबाट रहित भई नित्यवस्तु परमात्मामा आश्रित भई योग[1] र क्षेम[2] दुवैको चाहना नगर्ने स्वाधीन अन्तःकरण भएका होऊ॥ ४५॥

**यावानर्थ उदपाने, सर्वतः सम्प्लुतोदके।**
**तावान् सर्वेषु वेदेषु, ब्राह्मणस्य विजानतः॥ ४६॥**

सबैतिरबाट भरिपूर्ण जलाशयलाई प्राप्त गरिसकेपछि मानिसलाई सानो जलाशयको जति प्रयोजन हुन्छ, ब्रह्मलाई तत्त्वसाथ जान्ने ब्राह्मणको लागि समस्त वेदहरूको त्यति नै प्रयोजन रहन्छ॥ ४६॥

**कर्मण्ये-वाधिकारस्-ते, मा फलेषु कदाचन।**
**मा कर्म-फल-हेतुर्-भूर्,-मा ते सङ्गोऽस्त्व-कर्मणि॥ ४७॥**

१. अप्राप्तलाई प्राप्तिको नाम 'योग' हो।
२. प्राप्त वस्तुलाई रक्षा गर्नुको नाम 'क्षेम' हो।

तिम्रो अधिकार कर्म गर्नुमा नै छ, त्यसको फलमा कहिल्यै छैन। यसर्थ, तिमी कर्मफल प्राप्तिका कारण नहोऊ र कर्म नगर्नुमा पनि तिम्रो आसक्ति नहोस्॥ ४७॥

**योगस्थः कुरु कर्माणि, सङ्गं त्यक्त्वा धनञ्जय।**
**सिद्ध्य-सिद्ध्योः समो भूत्वा, समत्वं योग उच्यते॥ ४८॥**

हे धनञ्जय! तिमी आसक्तिलाई त्यागेर सिद्धि र असिद्धिमा समान बुद्धि राखी योगमा स्थित भई कर्तव्यकर्महरू गर; समत्वभाव* नै योग हो॥ ४८॥

**दूरेण ह्यवरं कर्म, बुद्धि-योगाद्-धनञ्जय।**
**बुद्धौ शरण-मन्विच्छ, कृपणाः फल-हेतवः॥ ४९॥**

यो समत्वरूपी बुद्धियोगभन्दा सकाम कर्म अत्यन्तै तुच्छ हुन्छ। यसर्थ, हे धनञ्जय! तिमीले समबुद्धिबाटै रक्षाको उपाय खोज, अर्थात् बुद्धियोगकै आश्रय ग्रहण गर, किनकि फलको कारण बन्नेहरू अत्यन्तै दीन हुन्छन्॥ ४९॥

---

* जुनसुकै कर्म गरे पनि त्यो पूरा हुनु वा नहुनु एवं त्यसको फलमा समभाव रहनुको नाम 'समत्व' हो।

**बुद्धि-युक्तो जहातीह, उभे सुकृत-दुष्कृते।**
**तस्माद्-योगाय युज्यस्व, योगः कर्मसु कौशलम्॥ ५०॥**

समबुद्धिले युक्त पुरूषले पुण्य र पाप दुवै कर्म यही लोकमा परित्याग गर्दछ अर्थात् ती कर्मबन्धनबाट मुक्त हुन्छ । यसर्थ तिमी समत्वरूप योगमा लाग, यही समत्व योग नै कर्ममा कुशलता हो, अर्थात् कर्मबन्धनबाट मुक्त हुने उपाय हो॥ ५०॥

**कर्मजं बुद्धि-युक्ता हि, फलं त्यक्त्वा मनीषिणः।**
**जन्म-बन्ध-विनिर्मुक्ताः, पदं गच्छन्-त्यनामयम्॥ ५१॥**

किनकि समबुद्धिले युक्त ज्ञानीजन कर्मबाट प्राप्त हुने फललाई परित्याग गरेर जन्मरूपी बन्धनबाट मुक्त भई अमृतमय परमपदलाई प्राप्त गर्दछन्॥ ५१॥

**यदा ते मोह-कलिलं, बुद्धिर्-व्यति-तरिष्यति।**
**तदा गन्तासि निर्वेदं, श्रोतव्यस्य श्रुतस्य च॥ ५२॥**

जुन समयमा तिम्रो बुद्धि मोहरूपी दलदलबाट पार लाग्नेछ, त्यस समयमा तिमीले सुनेका र सुन्नमा आउने यस लोक र परलोकसम्बन्धी सबै भोगहरूबाट वैराग्यलाई प्राप्त गर्नेछौ॥ ५२॥

**श्रुति-विप्रतिपन्ना ते, यदा स्थास्यति निश्चला।**
**समाधा-वचला बुद्धिस्,-तदा योग-मवाप्स्यसि ॥ ५३ ॥**

जब विभिन्न वचनहरूको श्रवणद्वारा विचलित बनेको तिम्रो बुद्धि परमात्मामा अचल र भई स्थिर भएर रहनेछ, त्यसै बखतमा तिमीले योगलाई प्राप्त गर्नेछौ अर्थात् तिम्रो परमात्मासित नित्य संयोग हुने छ ॥ ५३ ॥

### *अर्जुन उवाच*

**स्थित-प्रज्ञस्य का भाषा, समाधिस्थस्य केशव।**
**स्थितधीः किं प्रभाषेत, किमासीत व्रजेत किम् ॥ ५४ ॥**

**अर्जुनले भने**—हे केशव! समाधिमा स्थित परमात्मालाई प्राप्त गरेका स्थिरबुद्धि भएका पुरूषको लक्षण कस्तो हुन्छ? कसरी बोल्दछ? कसरी बस्दछ र कसरी हिँड्दछ? ॥ ५४ ॥

### *श्रीभगवानुवाच*

**प्रजहाति यदा कामान्, सर्वान् पार्थ मनोगतान्।**
**आत्मन्ये-वात्मना तुष्टः, स्थित-प्रज्ञस्-तदोच्यते ॥ ५५ ॥**

**श्रीभगवान्ले भन्नुहुन्छ**—हे अर्जुन! जतिबेला यस्तो पुरूषले मनमा रहेका सम्पूर्ण कामनाहरूलाई

रामुरी त्यागिदिन्छ र आत्माद्वारा आत्मामा नै सन्तुष्ट रहन्छ, त्यस बखत उसलाई स्थितप्रज्ञ भनिन्छ॥ ५५ ॥

**दुःखे-ष्वनुद्विग्न-मनाः, सुखेषु विगत-स्पृहः ।**
**वीत-राग-भय-क्रोधः, स्थित-धीर्-मुनि-रुच्यते ॥ ५६ ॥**

दुःख प्राप्त हुँदा जसको मनमा उद्वेग हुँदैन, सुखप्राप्तिमा जो सर्वदा निःस्पृह रहन्छ तथा जसका राग, भय, क्रोध नष्ट भएका छ त्यस्तो मुनिलाई स्थिरबुद्धिवाला भनिन्छ ॥ ५६ ॥

**यः सर्वत्रा-नभिस्नेहस्,-तत्-तत्-प्राप्य शुभाशुभम् ।**
**नाभिनन्दति न द्वेष्टि, तस्य प्रज्ञा प्रतिष्ठिता ॥ ५७ ॥**

जो पुरूष सर्वत्र स्नेहरहित हुँदै तत्तत् शुभ या अशुभ वस्तुलाई प्राप्त गर्दा पनि न प्रसन्न हुन्छ र न द्वेष गर्दछ भने उसको बुद्धि स्थिर हुन्छ॥ ५७ ॥

**यदा संहरते चायं, कूर्मोऽङ्गानीव सर्वशः ।**
**इन्द्रिया-णीन्द्रियार्थेभ्यस्,-तस्य प्रज्ञा प्रतिष्ठिता ॥ ५८ ॥**

जसरी कछुवाले सबैतिरबाट आफ्ना अङ्गलाई संकुचित पार्दछ, त्यसरी नै जब कुनै पुरूष इन्द्रियहरूका विषयहरूबाट आफ्ना इन्द्रियहरूलाई हटाउँछ, तब त्यसलाई स्थिरबुद्धि भएको भन्नुपर्दछ॥ ५८ ॥

**विषया विनिवर्तन्ते, निराहारस्य देहिनः।**
**रस-वर्जं रसोऽप्यस्य, परं दृष्ट्वा निवर्तते॥ ५९॥**

इन्द्रियहरूद्वारा विषयहरू ग्रहण नगर्ने पुरूषका पनि केवल विषय त निवृत्त हुन्छन्, तर तिनमा रहने आसक्ति निवृत्त हुँदैन। यस स्थितप्रज्ञ पुरुषको त आसक्ति पनि परमात्मालाई साक्षात्कार गरी निवृत्त हुन्छ॥ ५९॥

**यततो ह्यपि कौन्तेय, पुरुषस्य विपश्चितः।**
**इन्द्रियाणि प्रमाथीनि, हरन्ति प्रसभं मनः॥ ६०॥**

हे अर्जुन! आसक्तिको नाश नहुनाले यी प्रमथन स्वभाव भएका इन्द्रियहरूले प्रयास गर्दै बुदिमान् पुरुषको मनलाई पनि बलपूर्वक हरण गर्दछन्॥ ६०॥

**तानि सर्वाणि संयम्य, युक्त आसीत मत्परः।**
**वशे हि यस्येन्द्रियाणि, तस्य प्रज्ञा प्रतिष्ठिता॥ ६१॥**

यसर्थ, साधकले ती सम्पूर्ण इन्द्रियहरूलाई वशमा राखेर समाहितचित्त हुँदै मैरै परायण भएर ध्यानमा बसोस्, किनकि जुन पुरूषका इन्द्रियहरू वशमा हुन्छन्, उसको बुद्धि स्थिर हुन्छ॥ ६१॥

**ध्यायतो विषयान् पुंसः, सङ्गस्-तेषूप-जायते।**
**सङ्गात्-सञ्जायते कामः, कामात्-क्रोधोऽभि-जायते ॥ ६२ ॥**

विषयहरूको चिन्तन गर्ने पुरूषको तिनै विषयमा आसक्ति पैदा हुन्छ, आसक्तिबाट ती विषयप्रति कामना पैदा हुन्छ र कामना मा विघ्न हुँदा क्रोध उत्पन्न हुन्छ॥ ६२ ॥

**क्रोधाद्-भवति सम्मोहः, सम्मोहात्-स्मृति-विभ्रमः ।**
**स्मृति-भ्रंशाद्-बुद्धि-नाशो, बुद्धि-नाशात्-प्रणश्यति ॥ ६३ ॥**

क्रोधका कारण अत्यन्त मूर्खताभाव उत्पन्न हुन्छ, मूर्खताभावका कारण स्मृतिमा भ्रम हुन जान्छ, स्मृतिमा भ्रम उत्पन्न हुँदा बुद्धि अर्थात् ज्ञानशक्तिको नाश हुन्छ र बुद्धिको नाश भएपछि त्यस्तो पुरूष आफ्नो स्थितिबाट गिर्दछ॥ ६३ ॥

**राग-द्वेष-वियुक्तैस्-तु, विषया-निन्द्रियैश्-चरन्।**
**आत्म-वश्यैर्-विधेयात्मा, प्रसाद-मधि-गच्छति ॥ ६४ ॥**

परन्तु जसको अन्तःकरण आफ्नो अधीनमा छ, त्यस्तो पुरूषले आफ्नो नियन्त्रणमा रहेका रागद्वेषबाट मुक्त इन्द्रियद्वारा विषयमा विचरण गर्दै अन्तःकरणको प्रसन्नतालाई प्राप्त गर्दछ॥ ६४ ॥

**प्रसादे सर्व-दुःखानां, हानि-रस्योप-जायते।**
**प्रसन्न-चेतसो ह्याशु, बुद्धिः पर्यव-तिष्ठते॥ ६५॥**

अन्तःकरणमा प्रसन्नता भएपछि उसमा सम्पूर्ण दुःखहरूको अभाव हुन जान्छ र त्यस प्रसन्नचित्त भएको कर्मयोगीको बुद्धि छिटै सबै-तिरबाट हटेर एकमात्र परमात्मामा नै राम्ररी स्थिर हुन जान्छ॥ ६५॥

**नास्ति बुद्धि-रयुक्तस्य, न चायुक्तस्य भावना।**
**न चाभावयतः शान्ति,-रशान्तस्य कुतः सुखम्॥ ६६॥**

मन र इन्द्रियलाई नियन्त्रण गर्न नसक्ने पुरूषको निश्चयात्मिका बुद्धि हुँदैन र त्यस अयुक्त मनुष्यको अन्तःकरणमा भावना पनि हुँदैन। भावनाहीन मनुष्यले शान्ति पाउन सक्तैन। शान्तिरहित मनुष्यलाई सुख कसरी मिल्छ र?॥ ६६॥

**इन्द्रियाणां हि चरतां, यन्मनोऽनु-विधीयते।**
**तदस्य हरति प्रज्ञां, वायुर्-नाव-मिवाम्भसि॥ ६७॥**

किनकि जसरी पानी माथि हिँडिरहने डुँगालाई हावाले हल्लाइदिन्छ, त्यसैगरी विषयहरूमा विचरण गर्दै गरेका इन्द्रियहरूमध्ये मन जुन इन्द्रियसँग रहन्छ, त्यो एउटै इन्द्रियले त्यस अयुक्त पुरूषको बुद्धिलाई हरण गर्दछ॥ ६७॥

**तस्माद्-यस्य महाबाहो, निगृहीतानि सर्वशः ।**
**इन्द्रिया-णीन्द्रियार्थेभ्यस्,-तस्य प्रज्ञा प्रतिष्ठिता ॥ ६८ ॥**

यसर्थ, हे महाबाहो! जुन पुरूषका इन्द्रियहरू इन्द्रियका विषयहरूबाट सबै प्रकारले नियन्त्रण गरिएका हुन्छन्, त्यसैको बुद्धि स्थिर हुन्छ ॥ ६८ ॥

**या निशा सर्व-भूतानां, तस्यां जागर्ति संयमी ।**
**यस्यां जाग्रति भूतानि, सा निशा पश्यतो मुनेः ॥ ६९ ॥**

सम्पूर्ण प्राणीहरूका लागि जुन रात्रि समान छ, त्यस नित्य परमानन्दको प्राप्तिमा स्थितप्रज्ञ योगी जागा रहन्छ भने जुन नाशवान् सांसारिक सुख प्राप्तिमा सबै प्राणीहरू जागा रहन्छन, परमात्माको तत्त्वलाई बुझेका मुनिका लागि त्यो रात्रि-समान छ ॥ ६९ ॥

**आपूर्यमाण-मचल-प्रतिष्ठं**
**समुद्र-मापः प्रविशन्ति यद्वत् ।**
**तद्वत् कामा यं प्रविशन्ति सर्वे**
**स शान्ति-माप्नोति न काम-कामी ॥ ७० ॥**

जसरी नित्य परिपूर्ण भएर पनि अचलभावले रहेको समुद्रमा विभिन्न नदीनालाहरूको पानी समाविष्ट भई त्यसैमा मिल्दछ, त्यसरी नै समस्त विषयका

चाहनाहरू कुनै पनि प्रकारका विकार उत्पन्न नगरी जुन पुरूषमा समावेश हुन्छन्, त्यही पुरूषले शान्ति प्राप्त गर्दछ, तर विषयभोग चाहनेवाला पुरूषले भने शान्ति पाउन सक्तैन॥ ७० ॥

**विहाय कामान् यः सर्वान्, पुमांश्-चरति निःस्पृहः ।**
**निर्ममो निरहङ्कारः, स शान्ति-मधि-गच्छति ॥ ७१ ॥**

जुन पुरूष सम्पूर्ण कामनाहरूलाई त्यागेर ममतारहित, अहङ्काररहित र स्पृहारहित भई विचरण गर्दछ, त्यही पुरूषले परमशान्ति प्राप्त गर्दछ॥ ७१ ॥

**एषा ब्राह्मी स्थितिः पार्थ, नैनां प्राप्य विमुह्यति ।**
**स्थित्वास्या-मन्त-कालेऽपि, ब्रह्म-निर्वाण-मृच्छति ॥ ७२ ॥**

हे अर्जुन! यो ब्रह्मलाई प्राप्त गरेको पुरुषको स्थिति हो। यसलाई पाएर योगी कहिल्यै मोहित हुँदैन र अन्तिम समयमा पनि यही ब्राह्मी स्थितिमा स्थित भएर ब्रह्मानन्दलाई प्राप्त गर्दछ॥ ७२ ॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, साङ्ख्य-योगो नाम द्वितीयोऽध्यायः ॥ २ ॥

~~o~~

ॐ श्रीपरमात्मने नमः

# अथ तृतीयोऽध्यायः

## अर्जुन उवाच

**ज्यायसी चेत् कर्मणस्-ते, मता बुद्धिर्-जनार्दन।**
**तत्-किं कर्मणि घोरे मां, नियोजयसि केशव॥ १॥**

**अर्जुनले भने**—हे जनार्दन! यदि कर्मयोगभन्दा ज्ञान श्रेष्ठ हो भन्ने हजुरको विचार छ भने फेरि हे केशव! मलाई भयङ्कर कर्ममा किन लगाउनुहुन्छ?॥ १॥

**व्या-मिश्रेणेव वाक्येन, बुद्धिं मोहयसीव मे।**
**तदेकं वद निश्चित्य, येन श्रेयोऽह-माप्नुयाम्॥ २॥**

हजुरले धेरै कुराको सम्मिश्रण भएको वचनले मेरो बुद्धिलाई भ्रमित पारिरहनु भएको छ। त्यसैले त्यही एउटा कुरा निश्चय गरेर आज्ञा होस्, जसबाट मै कल्याण प्राप्त गरूँ॥ २॥

## श्रीभगवानुवाच

**लोकेऽस्मिन् द्विविधा निष्ठा, पुरा प्रोक्ता मयानघ।**
**ज्ञान-योगेन साङ्ख्यानां, कर्म-योगेन योगिनाम्॥ ३॥**

**श्रीभगवान्ले भन्नुहुन्छ**—हे निष्पाप अर्जुन! यस लोकमा दुई प्रकारका निष्ठा* मैले पहिले

* साधनाको परिपक्व अवस्था अर्थात् पराकाष्ठाको नाम 'निष्ठा' हो।

बताएँ। तीमध्ये ज्ञानयोग[१] द्वारा साङ्ख्ययोगीहरूको निष्ठा र कर्मयोग[२] द्वारा कर्मयोगीहरूको निष्ठा बताइएको छ॥ ३॥

**न कर्मणा-मनारम्भान्,-नैष्कर्म्यं पुरुषोऽश्नुते।**
**न च सन्न्यसना-देव, सिद्धिं समधि-गच्छति॥ ४॥**

मनुष्यले न त कर्मलाई सुरु नगरी निष्कर्मतालाई* अर्थात् योगनिष्ठालाई प्राप्त गर्दछ, न कर्महरूको केवल त्याग मात्रले सिद्धि अर्थात् साङ्ख्यनिष्ठालाई नै प्राप्त गर्दछ॥ ४॥

**न हि कश्चित् क्षणमपि, जातु तिष्ठ-त्यकर्म-कृत्।**
**कार्यते ह्यवशः कर्म, सर्वः प्रकृतिजैर्-गुणैः॥ ५॥**

---

१. मायाबाट उत्पन्न भएका सम्पूर्ण गुणहरू नै गुणहरूमा व्यवहृत हुन्छन्, यस्तो सम्झिएर तथा मन, इन्द्रिय र शरीरद्वारा हुने सम्पूर्ण क्रियाहरूमा कर्तापनको अभिमानले रहित भएर सर्वव्यापी सच्चिदानन्दघन परमात्मामा एकाकीभावले स्थित रहनुको नाम 'ज्ञानयोग' हो, यसैलाई 'सन्न्यास', 'साङ्ख्ययोग' आदि नामले सम्बोधन गरिएको छ।

२. फल र आसक्तिलाई त्यागेर भगवदाज्ञानुसार केवल भगवदर्थ समत्व बुद्धिले कर्म गर्नुको नाम 'निष्काम कर्मयोग' हो, यसैलाई 'समत्वयोग', 'बुद्धियोग', 'कर्मयोग', 'तदर्थकर्म', 'मदर्थकर्म', 'मत्कर्म' आदि नामहरूले सम्बोधन गरिएको छ।

३. जुन अवस्थालाई प्राप्त गरेको पुरुषका कर्म अकर्म हुन जान्छन्, अर्थात् फल उत्पन्न गर्न सक्दैनन्, त्यस अवस्थाको नाम 'निष्कर्मता' हो।

निःसन्देह कुनै पनि मानिस क्षणभरमात्र पनि कुनै कर्म नगरी रहन सक्दैन, किनकि सारा मनुष्यसमुदाय प्रकृतिजनित तीनै गुणहरूद्वारा विवश हुँदै कर्म गर्नका लागि बाध्य गरिन्छ॥ ५॥

**कर्मेन्द्रियाणि संयम्य, य आस्ते मनसा स्मरन्।**
**इन्द्रियार्थान्-विमूढात्मा, मिथ्याचारः स उच्यते॥ ६॥**

मूढ बुद्धि भएको जो पुरूष कर्मेन्द्रियलाई नियन्त्रण गरेर मनमनै इन्द्रियका विषयको चिन्तन गरिरहन्छ, त्यो पुरूषलाई मिथ्याचारी अर्थात् दम्भी मानिन्छ॥ ६॥

**यस्-त्विन्द्रियाणि मनसा, नियम्या-रभतेऽर्जुन।**
**कर्मेन्द्रियैः कर्म-योग,-मसक्तः स विशिष्यते॥ ७॥**

हे अर्जुन! जुन पुरूषले मनद्वारा इन्द्रियलाई वशमा राखेर अनासक्त भई समस्त इन्द्रियद्वारा कर्मयोगको आचरण गर्दछ, त्यही श्रेष्ठ हो॥ ७॥

**नियतं कुरु कर्म त्वं, कर्म ज्यायो ह्यकर्मणः।**
**शरीर-यात्रापि च ते, न प्रसिद्ध्ये-दकर्मणः॥ ८॥**

तिमी शास्त्रविहित कर्म गर; किनकि कर्म नगर्नुभन्दा कर्म गर्नु श्रेष्ठ हो। कर्म नगर्नाले तिम्रो शरीरको निर्वाह पनि सिद्ध हुँदैन॥ ८॥

**यज्ञार्थात् कर्मणोऽन्यत्र, लोकोऽयं कर्म-बन्धनः।**
**तदर्थं कर्म कौन्तेय, मुक्त-सङ्गः समाचर॥ ९॥**

यज्ञका लागि गरिने कर्मभन्दा अतिरिक्त अन्य कर्महरूमा लागेर नै यो मनुष्य समुदाय कर्महरूले बाँधिन्छ। यसर्थ, हे अर्जुन! तिमी आसक्तिले रहित भएर त्यस यज्ञका लागि नै राम्ररी कर्तव्यकर्म निर्वाह गर॥ ९॥

**सह-यज्ञाः प्रजाः सृष्ट्वा, पुरोवाच प्रजापतिः।**
**अनेन प्रसविष्यध्व,-मेष वोऽस्त्विष्ट-कामधुक्॥ १०॥**

प्रजाका स्वामी ब्रह्मामाजीले सृष्टिको आदिमा यज्ञसहित प्रजाहरू सृष्टि गरेर भन्नुभयो- तिमीहरू यस यज्ञद्वारा समृद्धि लाभ गर, यो यज्ञ तिमीहरूको अभीष्ट कामनाहरू परिपूर्ति गर्ने बनोस्॥ १०॥

**देवान्-भावयतानेन, ते देवा भावयन्तु वः।**
**परस्परं भावयन्तः, श्रेयः पर-मवाप्स्यथ॥ ११॥**

तिमीहरू यस यज्ञद्वारा देवताहरूलाई उन्नत तुल्याऊ र देवताहरूले पनि तिमीहरूको समुन्नति गरून्। यसप्रकार, दुवैले एकले अर्कालाई उन्नत तुल्याउँदै परमकल्याण प्राप्त गर्ने छौ॥ ११॥

इष्टान्-भोगान्-हि वो देवा, दास्यन्ते यज्ञ-भाविताः ।
तैर्-दत्ता-नप्रदायैभ्यो, यो भुङ्क्ते स्तेन एव सः ॥ १२ ॥

यज्ञद्वारा बढाइएका देवताहरूले नमागीकनै तिमीहरूलाई निश्चय नै इच्छा लागेका भोग्य वस्तुहरू दिनेछन्, यसप्रकार देवताहरूद्वारा प्रदत्त भोग्यवस्तुहरू यी देवताहरूलाई समर्पण नगरी जो पुरूष आफूमात्र उपभोग गर्दछ, त्यो अवश्य नै चोर हो ॥ १२ ॥

यज्ञ-शिष्टाशिनः सन्तो, मुच्यन्ते सर्व-किल्बिषैः ।
भुञ्जते ते त्वघं पापा, ये पचन्-त्यात्म-कारणात् ॥ १३ ॥

जो श्रेष्ठपुरूष यज्ञ गरेर शेष रहेको अन्न भोजन गर्दछन्, तिनीहरू सबै पापहरूबाट मुक्त हुन्छन् तर जो आफ्नो शरीर पोषणका लागि मात्र अन्न पकाउँछन्, ती पापीहरूले त पाप मात्रै भोग्दछन् ॥ १३ ॥

अन्नाद्-भवन्ति भूतानि, पर्जन्या-दन्न-सम्भवः ।
यज्ञाद्-भवति पर्जन्यो, यज्ञः कर्म-समुद्भवः ॥ १४ ॥
कर्म ब्रह्मोद्-भवं विद्धि, ब्रह्माक्षर-समुद्-भवम् ।
तस्मात् सर्वगतं ब्रह्म, नित्यं यज्ञे प्रतिष्ठितम् ॥ १५ ॥

समस्त प्राणीहरू अन्नबाट उत्पन्न हुन्छन्, वर्षाबाट अन्न पैदा हुन्छ, यज्ञबाट वृष्टि हुन्छ, यज्ञ विहितकर्मबाट उत्पत्ति हुन्छ। कर्म समुदायलाई तिमी वेदबाट उत्पन्न र वेदलाई अविनाशी परमात्मा बाट उत्पन्न भएको बुझ। त्यसैले, सर्वव्यापक परमअक्षर परमात्मा सधैँ यज्ञमा प्रतिष्ठित हुन्छ॥ १४-१५ ॥

**एवं प्रवर्तितं चक्रं, नानु-वर्तयतीह यः।**
**अघायु-रिन्द्रिया-रामो, मोघं पार्थ स जीवति॥ १६॥**

हे पार्थ! जसले यस लोकमा परम्परादेखि चल्दै आएको सृष्टिचक्रको अनुसरण गर्दैन अर्थात् कर्तव्यपालन गर्दैन, इन्द्रियहरूद्वारा विषयभोगमा रमण गर्ने पापमय जीवन भएको पुरूष बाँच्नु व्यर्थ हुन्छ॥ १६ ॥

**यस्त्वात्म-रति-रेव स्या,-दात्म-तृप्तश्-च मानवः।**
**आत्मन्येव च सन्तुष्टस्,-तस्य कार्यं न विद्यते॥ १७॥**

परन्तु जुन मनुष्य आत्मामै रमण गर्ने र आत्मामै तृप्त तथा सन्तुष्ट हुने खालको छ, उसका लागि कुनै पनि कर्तव्य रहँदैन॥ १७ ॥

**नैव तस्य कृतेनार्थो, नाकृतेनेह कश्चन।**
**न चास्य सर्व-भूतेषु, कश्चिदर्थ-व्यपाश्रयः ॥ १८ ॥**

त्यस महापुरूषलाई यस विश्वमा न त कर्म गर्नुको कुनै प्रयोजन रहन्छ, न कर्म नगर्नुको नै कुनै प्रयोजन रहन्छ। तथा, सम्पूर्ण प्राणीहरूमा यसको थोरै मात्र पनि स्वार्थको सम्बन्ध रहँदैन ॥ १८ ॥

**तस्मा-दसक्तः सततं, कार्यं कर्म समाचर।**
**असक्तो ह्याचरन् कर्म, परमाप्नोति पूरुषः ॥ १९ ॥**

यसर्थ, तिमी निरन्तर आसक्तिदेखि पर रहेर सधैँ कर्तव्यकर्मलाई उचित रीतिले गर्दै गर, किनकि आसक्तिबाट रहित भएर कर्म गर्दै गरेको मनुष्यले परमात्मालाई प्राप्त गर्दछ ॥ १९ ॥

**कर्मणैव हि संसिद्धि, -मास्थिता जनकादयः।**
**लोक-सङ्ग्रह-मेवापि, सम्पश्यन् कर्तु-मर्हसि ॥ २० ॥**

जनकादि ज्ञानीजनले पनि आसक्तिरहित कर्मद्वारा नै परम सिद्धिलाई प्राप्त गरेका थिए। यसर्थ, लोकसङ्ग्रहलाई विचार गर्दा पनि तिमी कर्म गर्नका लागि नै योग्य छौ अर्थात् तिमीले कर्म गर्नु नै उचित हुन्छ ॥ २० ॥

**यद्-यदाचरति श्रेष्ठस्,-तत्-तदेवेतरो जनः।**
**स यत्-प्रमाणं कुरुते, लोकस्-तदनुवर्तते॥ २१॥**

श्रेष्ठ पुरूषले जे-जस्तो आचरण गर्दछ, अन्यले पनि त्यस्तै आचरण गर्दछन्। उसले जस्तो प्रमाण बनाउँछ, समस्त मनुष्यसमुदायले त्यसैअनुसार व्यवहार गर्न थाल्दछ*॥ २१॥

**न मे पार्थास्ति कर्तव्यं, त्रिषु लोकेषु किञ्चन।**
**नानवाप्त-मवाप्तव्यं, वर्त एव च कर्मणि॥ २२॥**

हे अर्जुन! तीनवटै लोकहरूमा मेरा लागि न कुनै कर्तव्य छ, न कुनै प्राप्त गर्नु पर्ने वस्तु अप्राप्त नै छ, तैपनि म आफ्नो कर्तव्यकर्ममा लागि नै रहेको छु॥ २२॥

**यदि ह्यहं न वर्तेयं, जातु कर्मण्य-तन्द्रितः।**
**मम वर्त्मानु-वर्तन्ते, मनुष्याः पार्थ सर्वशः॥ २३॥**

किनकि यदि म सावधान भई कदाचित् कर्तव्यकर्ममा लागिनँ भने हे पार्थ! ठूलो हानि हुन सक्छ, किनभने सबै प्रकारले मानिसहरूले मेरै मार्गको अनुसरण गर्दछन्॥ २३॥

* यहाँ क्रियामा एकवचन छ, तर 'लोक' शब्द समुदायवाचक हुनाले भाषामा बहुवचनको क्रिया लेखिएको छ।

**उत्सीदेयु-रिमे लोका, न कुर्यां कर्म चेदहम्।**
**सङ्करस्य च कर्ता स्या,-मुप-हन्या-मिमाः प्रजाः॥ २४॥**

यसर्थ, यदि मैले कर्म गर्न छोडिदिएँ भने यी सबै मनुष्य नष्टभ्रष्ट हुनेछन्, अनि म वर्णसङ्करको कारक हुने छु र समस्त प्रजाको विनाशक पनि बन्ने छु॥ २४॥

**सक्ताः कर्मण्य-विद्वांसो,**
**यथा कुर्वन्ति भारत।**
**कुर्याद्-विद्वांस्-तथा-सक्तश्,-**
**चिकीर्षुर्-लोक-सङ्ग्रहम् ॥ २५॥**

हे भरतवंशी अर्जुन! कर्ममा आसक्त भएका अज्ञानीहरूले जुन विधिले कर्म गर्दछन्, विद्वान्ले पनि लोकसङ्ग्रह गर्ने चाहना लिई आसक्तिरहित भई त्यसैअनुसार कर्म गरून्॥ २५॥

**न बुद्धि-भेदं जनये,-दज्ञानां कर्म-सङ्गिनाम्।**
**जोषयेत्-सर्व-कर्माणि, विद्वान् युक्तः समाचरन्॥ २६॥**

परमात्मामा समाहित चित्त भएको युक्त ज्ञानीपुरूषले शास्त्रविहितकर्ममा आसक्त भएका अज्ञानीहरूको बुद्धिमा भ्रम उत्पन्न नगराओस्,

अर्थात् उनीहरूले गरिरहेको कर्मप्रति अश्रद्धा उत्पन्न नगराओस्, बरू यस्तो ज्ञानी पुरूषले समस्त कर्म उचित तरिकाले गर्दै अरूलाई पनि कर्म गर्न लगाओस्॥ २६ ॥

**प्रकृतेः क्रियमाणानि, गुणैः कर्माणि सर्वशः ।**
**अहङ्कार-विमूढात्मा, कर्ताह-मिति मन्यते॥ २७॥**

वास्तवमा सम्पूर्ण कर्म सबै प्रकारले प्रकृतिका गुणहरूद्वारा गरिन्छन्, तापनि जसको अन्तःकरण अहङ्कारले मोहित भइरहेको छ, त्यस्तो अज्ञानीले 'म कर्ता हुँ' भन्ने ठान्दछ॥ २७॥

**तत्त्व-वित्तु महाबाहो, गुण-कर्म-विभागयोः ।**
**गुणा गुणेषु वर्तन्त, इति मत्वा न सज्जते॥ २८॥**

परन्तु हे महाबाहो! गुणविभाग र कर्मविभागका[१] तत्त्वलाई[२] जान्ने ज्ञानयोगी सम्पूर्ण गुणैगुणमा रहेका

१. त्रिगुणात्मक मायाका कार्यरूप पाँच महाभूत र मन, बुद्धि, अहंकार तथा पाँच ज्ञानेन्द्रिय, पाँच कर्मेन्द्रिय एवं पाँच विषय—यी सबै समुदायको नाम 'गुणविभाग' हो भने यिनका परस्परका चेष्टाहरूको नाम 'कर्मविभाग' हो।

२. उपर्युक्त 'गुणविभाग' र 'कर्मविभाग'बाट आत्मालाई पृथक् अर्थात् निर्लेप जान्नु नै यिनका तत्त्वलाई जान्नु हो।

हुन्छन् भन्ने मानेर तिनमा आसक्त हुँदैन॥ २८॥

**प्रकृतेर्-गुण-सम्मूढाः, सज्जन्ते गुण-कर्मसु।**
**तानकृत्स्न-विदो मन्दान्, कृत्स्न-विन्-न विचालयेत्॥ २९॥**

प्रकृतिका गुणहरूले अत्यन्त मोहित भएका मनुष्यहरू गुणका कर्महरूमा आसक्त रहन्छन्, ती राम्रोसित नबुझ्ने मन्दबुद्धि अज्ञानीहरूलाई पूर्णतः बुझ्ने ज्ञानीहरूले विचलित नगरून्॥ २९॥

**मयि सर्वाणि कर्माणि, सन्न्यस्या-ध्यात्म-चेतसा।**
**निराशीर्-निर्ममो भूत्वा, युध्यस्व विगत-ज्वरः॥ ३०॥**

म अन्तर्यामी परमात्मामा लागेको चित्तले समस्त कर्महरूलाई म परमेश्वरमा नै समर्पण गरेर आशारहित, ममतारहित र सन्तापरहित भई युद्ध गर॥ ३०॥

**ये मे मत-मिदं नित्य,-मनुतिष्ठन्ति मानवाः।**
**श्रद्धा-वन्तोऽन-सूयन्तो, मुच्यन्ते तेऽपि कर्मभिः॥ ३१॥**

जुन मनुष्यले ईर्ष्या वा द्वेष नलिई श्रद्धा र विश्वासयुक्त भएर मेरो यो उपदेशको अनुसरण गर्दछन् तिनीहरू सम्पूर्ण कर्मका वन्धनहरूबाट छुट्दछन्॥ ३१॥

**ये त्वे-तदभ्य-सूयन्तो, नानु-तिष्ठन्ति मे मतम्।**
**सर्वज्ञान-विमूढांस्-तान्, विद्धि नष्टा-नचेतसः ॥ ३२ ॥**

परन्तु जो मानिस मलाई दोषारोपण गर्दै मेरो यो मतलाई अनुसरण गर्दैनन्, ती पटमूर्खहरूलाई सम्पूर्ण ज्ञानमा मोहित बनेका र नष्ट भएका जान ॥ ३२ ॥

**सदृशं चेष्टते स्वस्याः, प्रकृतेर्-ज्ञानवानपि।**
**प्रकृतिं यान्ति भूतानि, निग्रहः किं करिष्यति ॥ ३३ ॥**

ज्ञानीपुरूष पनि आफ्नो प्रकृति अनुरूप नै चेष्टा गर्दछन्, समग्र प्राणीहरू प्रकृतिमै प्राप्त हुन्छन्, त्यसैले यहाँ कसैको हठले के गर्दछ र? ॥ ३३ ॥

**इन्द्रियस्ये-न्द्रियस्यार्थे, राग-द्वेषौ व्यवस्थितौ।**
**तयोर्-न वश-मागच्छेत्, तौ ह्यस्य परि-पन्थिनौ ॥ ३४ ॥**

अर्थमा अर्थात् सबै इन्द्रियहरूका भोगमा स्थित जो राग-द्वेष छन्, मनुष्य तिनका वशमा पर्नु हुँदैन, किनभने ती दुवै कल्याणमार्गमा विघ्न गराउने महान् शत्रु हुन् ॥ ३४ ॥

**श्रेयान् स्वधर्मो विगुणः, पर-धर्मात् स्वनुष्ठितात्।**
**स्वधर्मे निधनं श्रेयः, पर-धर्मो भयावहः ॥ ३५ ॥**

राम्रो आचरणबाट पालना गरिएको अरूको धर्मभन्दा गुणरहित भए पनि आफ्नो धर्म अतिउत्तम छ, आफ्नो धर्ममा रहेर मर्नु पनि कल्याणकारक नै हुन्छ, अर्काको धर्म भय प्रदान गर्ने हुन्छ॥ ३५॥

### अर्जुन उवाच

**अथ केन प्रयुक्तोऽयं, पापं चरति पूरुषः।**
**अनिच्छन्-नपि वार्ष्णेय, बलादिव नियोजितः॥ ३६॥**

**अर्जुनले भने**—हे कृष्ण! त्यसोभए यो मानिस आफूले नचाहँदा नचाहँदै पनि जबर्जस्ती लगाइएजस्तै गरी कसद्वारा प्रेरित भएर पापको आचरण गर्दछ?॥ ३६॥

### श्रीभगवानुवाच

**काम एष क्रोध एष, रजो-गुण-समुद्भवः।**
**महाशनो महा-पाप्मा, विद्ध्येन-मिह वैरिणम्॥ ३७॥**

**श्रीभगवान्‌ले भन्नुभयो**—रजोगुणले उत्पन्न भएको यो काम नै क्रोध हो, यो सारै खन्चुवा अर्थात् भोगहरूले कहिल्यै नअघाउने खालको र सारै पापी छ, यस विषयमा यसैलाई तिमीले शत्रु भन्ने ठान॥ ३७॥

**धूमे-नाव्रियते वह्निर्,-यथादर्शो मलेन च।**
**यथोल्बे-नावृतो गर्भस्,-तथा तेनेद-मावृतम्॥ ३८॥**

जसरी धुँवाका कारण आगो र मैलोका कारण ऐना ढाकिन्छ, अथवा जसरी सालनालका कारण गर्भ ढाकिन्छ, त्यसैगरी त्यो काम र क्रोधका कारण यो ज्ञान ढाकिएको छ॥ ३८॥

**आवृतं ज्ञान-मेतेन, ज्ञानिनो नित्य-वैरिणा।**
**काम-रूपेण कौन्तेय, दुष्पूरे-णानलेन च॥ ३९॥**

हे अर्जुन! यो अग्निसमान कहिल्यै पूर्ण नहुने कामरूपी ज्ञानीहरूको नित्य वैरीद्वारा मनुष्यको ज्ञान ढाकिएको छ॥ ३९॥

**इन्द्रियाणि मनो बुद्धि,-रस्याधिष्ठान-मुच्यते।**
**एतैर्-विमोह-यत्येष, ज्ञान-मावृत्य देहिनम्॥ ४०॥**

इन्द्रियहरू, मन र बुद्धि यी सबै कामभावका वासस्थान हुन्। यो कामले यी मन, बुद्धि र इन्द्रियहरूका माध्यमले नै ज्ञानलाई आच्छादित गर्दै जीवात्मालाई मोहित तुल्याउँदछ॥ ४०॥

**तस्मात्-त्वमिन्द्रिया-ण्यादौ, नियम्य भरतर्षभ।**
**पाप्मानं प्रजहि ह्येनं, ज्ञान-विज्ञान-नाशनम्॥ ४१॥**

यसर्थ, हे अर्जुन! तिमी पहिला इन्द्रियहरूलाई वशमा गरेर यो ज्ञान र विज्ञानलाई नाश गर्ने विशाल पापी कामलाई अवश्य नै बलपूर्वक नष्ट गर ॥ ४१ ॥

**इन्द्रियाणि पराण्याहु,-रिन्द्रियेभ्यः परं मनः।**
**मनसस्-तु परा बुद्धिर्,-यो बुद्धेः परतस्-तु सः ॥ ४२ ॥**

इन्द्रियहरूलाई स्थूल शरीरभन्दा पर अर्थात् श्रेष्ठ, बलवान् र सूक्ष्म मानिन्छ। मन इन्द्रियहरूभन्दा पर छ, मनभन्दा पनि पर बुद्धि छ, परन्तु जो बुद्धिभन्दा पनि ज्यादै पर छ, त्यो आत्मा हो ॥ ४२ ॥

**एवं बुद्धेः परं बुद्ध्वा, संस्तभ्यात्मान-मात्मना।**
**जहि शत्रुं महाबाहो, काम-रूपं दुरासदम् ॥ ४३ ॥**

यसप्रकार, बुद्धिदेखि पर सुक्ष्म एवं सबै प्रकारबाट बलवान् र श्रेष्ठ आत्मालाई जानेर फेरि बुद्धिद्वारा मनलाई वशमा गरेर हे महाबाहो! आफ्नो शक्ति स्मरण गरी तिमीले यस दुर्जय कामरूप शत्रुलाई मार ॥ ४३ ॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, कर्म-योगो नाम तृतीयोऽध्यायः ॥ ३ ॥

~~~०~~~
~~~

ॐ श्रीपरमात्मने नमः

# अथ चतुर्थोऽध्यायः

## श्रीभगवानुवाच

**इमं विवस्वते योगं, प्रोक्तवानह-मव्ययम्।**
**विवस्वान्-मनवे प्राह, मनु-रिक्ष्वाकवेऽब्रवीत्॥ १॥**

**श्रीभगवान्‌ले भन्नुभयो—** मैले यस अविनाशी योग सूर्यलाई बताएको थिएँ, सूर्यले आफ्ना पुत्र वैवस्वत मनुलाई बताउनुभयो, मनुले आफ्ना पुत्र राजा इक्ष्वाकुलाई बताउनुभयो॥ १॥

**एवं परम्परा-प्राप्त,-मिमं राजर्षयो विदुः।**
**स कालेनेह महता, योगो नष्टः परन्-तप॥ २॥**

हे परंतप अर्जुन! यसरी परम्परामार्फत प्राप्त यस योगलाई राजर्षिहरूले बुझे, तर त्यसपछि यो योग लामो समयसम्म यो पृथ्वीलोकमा लुप्तप्रायः भएर रह्यो॥ २॥

**स एवायं मया तेऽद्य, योगः प्रोक्तः पुरातनः।**
**भक्तोऽसि मे सखा चेति, रहस्यं ह्येत-दुत्तमम्॥ ३॥**

तिमी मेरा भक्त र प्रिय मित्र हौ, त्यसैले परम्पराबाट प्राप्त त्यही पुरातन योग अहिले मैले तिमीलाई बताएँ, किनभने यो योग अतिउत्तम, रहस्यपूर्ण र गोपनीय छ॥ ३॥

### अर्जुन उवाच

**अपरं भवतो जन्म, परं जन्म विवस्वतः।**
**कथ-मेतद्-विजानीयां, त्वमादौ प्रोक्त-वानिति॥ ४॥**

**अर्जुनले भने**—हजुरको जन्म त अर्वाचीन अर्थात् अहिलेको हो तर सूर्यको जन्म धेरै अघि नै भएको थियो, अर्थात् कल्पको सुरूमै भएको थियो। अनि मैले यो कुरालाई कसरी बुझूँ कि तपाईंले नै कल्पको सुरूआतमा सूर्यसित यो योग भन्नुभएको थियो?॥ ४॥

### श्रीभगवानुवाच

**बहूनि मे व्यतीतानि, जन्मानि तव चार्जुन।**
**तान्यहं वेद सर्वाणि, न त्वं वेत्थ परन्-तप॥ ५॥**

**श्रीभगवान्‌ले भन्नुभयो**—हे परंतप अर्जुन! मेरा र तिम्रा धेरै नै जन्म भइसके। तिमीले ती सबै जान्दैनौ, तर म जान्दछु॥ ५॥

**अजोऽपि सन्-नव्ययात्मा, भूताना-मीश्वरोऽपि सन्।**
**प्रकृतिं स्वा-मधिष्ठाय, सम्भवा-म्यात्म-मायया॥ ६॥**

म अविनाशीस्वरूप अजन्मा र सबै प्राणीको

ईश्वर भए पनि आफ्नो प्रकृतिलाई अधीनमा राखेर आफ्नै योगमायाका बलमा प्रकट हुन्छु ॥ ६ ॥

**यदा यदा हि धर्मस्य, ग्लानिर्-भवति भारत।**
**अभ्युत्थान-मधर्मस्य, तदात्मानं सृजाम्यहम् ॥ ७ ॥**

हे भरतवंशी अर्जुन! जबजब धर्मको हानि र अधर्मको वृद्धि हुन्छ, तबतब नै मैले आफ्नो रूपको रचना गर्दछु, अर्थात् साकाररूपमा मानिसका अगाडि प्रकट हुन्छु ॥ ७ ॥

**परित्राणाय साधूनां, विनाशाय च दुष्कृताम्।**
**धर्म-संस्थाप-नार्थाय, सम्भवामि युगे युगे ॥ ८ ॥**

साधु पुरूषहरूको उद्धार गर्न, पापकर्म गर्नेहरूको विनाश गर्न र धर्मको समुचित स्थापना गर्नका लागि म युगयुगमा प्रकट हुने गर्दछु ॥ ८ ॥

**जन्म कर्म च मे दिव्य,-मेवं यो वेत्ति तत्त्वतः।**
**त्यक्त्वा देहं पुनर्जन्म, नैति मामेति सोऽर्जुन ॥ ९ ॥**

हे अर्जुन! मेरा जन्म र कर्म दिव्य अर्थात् निर्मल र अलौकिक छन् भन्ने कुरालाई जुन

मानिसले तत्त्वपूर्वक* जान्दछ, उसले आफ्नो शरीरलाई त्यागेपछि फेरि जन्म लिनु पर्दैन, बरु मलाई नै प्राप्त गर्दछ ॥ ९ ॥

**वीतराग-भय-क्रोधा, मन्मया मामुपाश्रिताः ।**
**बहवो ज्ञान-तपसा, पूता मद्-भाव-मागताः ॥ १० ॥**

पहिला पनि जसका राग, भय एवं क्रोध नष्ट भएका थिए र जो ममा अनन्यप्रेमपूर्वक स्थित रहन्थे, यस्ता ममा आश्रित रहने धेरै भक्तहरूले उपर्युक्त ज्ञानरूपी तपद्वारा पवित्र भएर मेरो स्वरूपलाई प्राप्त गरेका छन् ॥ १० ॥

**ये यथा मां प्रपद्यन्ते, तांस्-तथैव भजाम्यहम् ।**
**मम वर्त्मानु-वर्तन्ते, मनुष्याः पार्थ सर्वशः ॥ ११ ॥**

---

* सर्वशक्तिमान् सच्चिदानन्दघन परमात्मा अज, अविनाशी र सर्वभूतहरूका परम गति तथा परम आश्रय हुनुहुन्छ; उहाँ केवल धर्मलाई स्थापना गर्न र संसारको उद्धार गर्नका लागि नै आफ्नो योगमायाको सहारामा सगुणरूप भएर प्रकट हुनुहुन्छ। यसर्थ, परमेश्वरसमान सुहृद्, प्रेमी र पतितपावन अर्को कोही छैन भन्ने जानेर जो पुरुषले परमेश्वरको अनन्य प्रेमसाथ निरन्तर चिन्तन गर्दै आसक्तिरहित भएर संसारमा रहन्छ, उसैले उहाँलाई तत्त्वसाथ जान्दछ।

हे अर्जुन! जुन भक्तले मलाई जसरी भज्दछन्, म पनि तिनलाई त्यसरी नै भज्दछु, किनकि बुद्धिमान् मानिसले सबै किसिमले मेरै मार्गको अनुसरण गर्दछन्॥ ११॥

**काङ्क्षन्तः कर्मणां सिद्धिं, यजन्त इह देवताः।**
**क्षिप्रं हि मानुषे लोके, सिद्धिर्-भवति कर्मजा॥ १२॥**

यस मनुष्यलोकमा कर्मका फललाई चाहने मानिसहरूले देवताको पूजा गर्ने गर्दछन्, किनकि तिनलाई कर्महरूद्वारा उत्पन्न हुने सिद्धि शीघ्र प्राप्त हुन्छ॥ १२॥

**चातुर्-वर्ण्यं मया सृष्टं, गुण-कर्म-विभागशः।**
**तस्य कर्तार-मपि मां, विद्ध्य-कर्तार-मव्ययम्॥ १३॥**

गुण र कर्महरूको विभागका साथमा ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र-यी चार वर्णहरूको समूह मद्वारा रचना गरिएको छ। यसप्रकार, त्यस सृष्टि-रचनादि कर्महरूको कर्ता भएर पनि म अविनाशी परमेश्वरलाई तिमीले वास्तवमा अकर्ता नै जान॥ १३॥

**न मां कर्माणि लिम्पन्ति, न मे कर्म-फले स्पृहा।**
**इति मां योऽभि-जानाति, कर्मभिर्-न स बध्यते॥ १४॥**

कर्मका फलमा मेरो कुनै स्पृहा छैन, यसर्थ मलाई कर्महरूले लिप्त गर्दैनन् भनेर जसले मलाई तत्त्वसाथ जान्दछ, ऊ पनि कर्महरूले बाँधिदैन॥ १४॥

**एवं ज्ञात्वा कृतं कर्म, पूर्वै-रपि मुमुक्षुभिः।**
**कुरु कर्मैव तस्मात्त्वं, पूर्वैः पूर्वतरं कृतम्॥ १५॥**

पूर्वकालमा मुमुक्षुहरूले पनि यसैगरी जानेर कर्म गरेका थिए। यसर्थ, तिमीले पनि पूर्वजहरूद्वारा सधैँ गरिँदै आएको कर्म नै गर॥ १५॥

**किं कर्म किम-कर्मेति, कवयोऽप्यत्र मोहिताः।**
**तत्ते कर्म प्रवक्ष्यामि, यज्-ज्ञात्वा मोक्ष्यसेऽशुभात्॥ १६॥**

कर्म के हो? र अकर्म के हो? भन्ने यस विषयमा निर्णय गर्न ठूला-ठूला विद्वान्पुरूषहरू पनि मोहित हुन्छन्। यसर्थ, म तिमीलाई त्यो कर्मतत्त्व राम्रोसित बुझाएर भन्छु, जसलाई जानेर तिमी अशुभबाट अर्थात् कर्मबन्धनबाट मुक्त हुनेछौ॥ १६॥

**कर्मणो ह्यपि बोद्धव्यं, बोद्धव्यं च विकर्मणः।**
**अकर्मणश्च बोद्धव्यं, गहना कर्मणो गतिः॥ १७॥**

कर्मको स्वरूप पनि जान्नुपर्दछ, अकर्मको स्वरूप पनि जान्नुपर्दछ र विकर्मको स्वरूप पनि जान्नुपर्दछ, किनकि कर्मको गति गहन छ॥ १७॥

**कर्मण्यकर्म यः पश्येदकर्मणि च कर्म यः।**
**स बुद्धिमान् मनुष्येषु, स युक्तः कृत्स्न-कर्म-कृत्॥ १८॥**

जुन मानिसले कर्ममा अकर्म देख्दछ र अकर्ममा कर्म देख्दछ, ऊ मनुष्यहरूमा बुद्धिमान् हो र त्यस्तो योगी समस्त कर्महरूलाई गर्नेवाला हो॥ १८॥

**यस्य सर्वे समारम्भाः, काम-सङ्कल्प-वर्जिताः।**
**ज्ञानाग्नि-दग्ध-कर्माणं, तमाहुः पण्डितं बुधाः॥ १९॥**

जसका सम्पूर्ण शास्त्रसम्मत कर्म बिनाकामना र सङ्कल्पका हुन्छन् तथा जसका समस्त कर्म ज्ञानरूप अग्निद्वारा भस्म भएका छन्, त्यस महापुरूषलाई ज्ञानीजनले पनि पण्डित भन्दछन्॥ १९॥

**त्यक्त्वा कर्म-फलासङ्गं, नित्य-तृप्तो निराश्रयः।**
**कर्मण्यभि-प्रवृत्तोऽपि, नैव किञ्चित्-करोति सः॥ २०॥**

जो पुरूष समस्त कर्महरूमा र तिनका फलमा आसक्तिलाई सर्वथा त्याग गरेर संसारको आश्रयदेखि

रहित भएको छ र परमात्मामा नित्य तृप्त छ, उसले कर्महरूमा संलग्न भएर पनि वास्तवमा केही पनि गर्दैन ॥ २० ॥

**निराशीर्-यत-चित्तात्मा, त्यक्त-सर्व-परिग्रहः ।**
**शारीरं केवलं कर्म, कुर्वन्-नाप्नोति किल्बिषम् ॥ २१ ॥**

जसको अन्तःकरण र इन्द्रियसहित शरीर जितिएको छ र जसले समस्त भोगका सामग्रीको परित्याग गरेको छ, त्यस्तो आशारहित पुरूष केवल शरीरसम्बन्धी कर्म गरिरहँदा पनि पाप-हरूलाई प्राप्त गर्दैन ॥ २१ ॥

**यदृच्छा-लाभ-सन्तुष्टो, द्वन्द्वातीतो विमत्सरः ।**
**समः सिद्धा-वसिद्धौ च, कृत्वापि न निबध्यते ॥ २२ ॥**

जो इच्छा नगरी स्वतः प्राप्त भएको वस्तुमा सन्तुष्ट रहन्छ, जसमा डाह, ईर्ष्यादि केही पाइँदैन, जो हर्षशोकादि द्वन्द्वहरूबाट मुक्त छ, जो कुनै कार्यको सिद्धि वा असिद्धि दुवैमा सम रहने कर्मयोगी कुनै कर्म गरेर पनि बन्धनमा पर्दैन ॥ २२ ॥

**गत-सङ्गस्य मुक्तस्य, ज्ञाना-वस्थित-चेतसः ।**
**यज्ञा-याचरतः कर्म, समग्रं प्रविलीयते ॥ २३ ॥**

जसको आसक्ति सर्वथा नष्ट भएको छ, जो

देहाभिमान र ममताले रहित भएको छ, जसको चित्त निरन्तर परमात्माको ज्ञानमा स्थित रहन्छ, यस्तो केवल यज्ञसम्पादनका लागि कर्म गर्ने मनुष्यका सम्पूर्ण कर्महरू ठीक ढङ्गले विलीन भएर जान्छन्॥ २३॥

**ब्रह्मार्पणं ब्रह्म हविर्,-ब्रह्माग्नौ ब्रह्मणा हुतम्।**
**ब्रह्मैव तेन गन्तव्यं, ब्रह्म-कर्म-समाधिना॥ २४॥**

यज्ञमा अर्पण गर्ने स्रुवा(सुरो) आदि पनि ब्रह्म हो, हवन गर्न योग्य द्रव्य पनि ब्रह्म हो र ब्रह्मरूप कर्ताद्वारा ब्रह्मरूप अग्निमा आहुति दिनुरूपी हवनक्रिया पनि ब्रह्म हो, त्यस ब्रह्मकर्ममा स्थित रहने योगी-द्वारा प्राप्त गर्न योग्य फल पनि ब्रह्म नै हो॥ २४॥

**दैव-मेवापरे यज्ञं, योगिनः पर्युपासते।**
**ब्रह्माग्ना-वपरे यज्ञं, यज्ञेनैवोप-जुह्वति॥ २५॥**

अन्य योगीजनहरू देवताहरूका पूजनरूपी यज्ञकै अनेक किसिमले अनुष्ठान गर्दछन् भने अर्काथरी योगीजन परब्रह्म परमात्मारूपी अग्निमा अभेददर्शनरूपी यज्ञद्वारा नै आत्मरूपी यज्ञको हवन गर्ने गर्दछन्*॥ २५॥

* परब्रह्म परमात्मामा ज्ञानद्वारा एकीभावले स्थित हुनु नै ब्रह्मरूपी अग्निमा यज्ञद्वारा यज्ञलाई हवन गर्नु हो।

**श्रोत्रादी-नीन्द्रिया-ण्यन्ये, संयमाग्निषु जुह्वति।**
**शब्दादीन्-विषया-नन्य, इन्द्रियाग्निषु जुह्वति॥ २६॥**

अन्य योगीजनले श्रोत्र आदि समस्त इन्द्रिय-हरूलाई संयमरूपी अग्निहरूमा हवन गर्दछन् भने अर्काथरी योगीहरू शब्दादि समस्त विषयहरूलाई इन्द्रियरूपी अग्निहरूमा हवन गर्ने गर्दछन्॥ २६॥

**सर्वाणीन्द्रिय-कर्माणि, प्राण-कर्माणि चापरे।**
**आत्म-संयम-योगाग्नौ, जुह्वति ज्ञान-दीपिते॥ २७॥**

अन्य योगीजन इन्द्रियका समस्त कर्महरूलाई र प्राणका समस्त क्रियाहरूलाई ज्ञानद्वारा प्रज्वलित आत्मसंयमरूपी अग्निमा हवन गर्दछन्*॥ २७॥

**द्रव्य-यज्ञास्-तपो-यज्ञा, योग-यज्ञास्-तथापरे।**
**स्वाध्याय-ज्ञान-यज्ञाश्-च, यतयः संशित-व्रताः॥ २८॥**

कति पुरूष द्रव्यसम्बन्धी यज्ञ गर्नेखाले छन्, कति तपस्यारूपी यज्ञ गर्नेहरू छन्, कति योगरूपी यज्ञ गर्नेहरू छन् भने अन्य कति अहिंसादि तीक्ष्ण

* सच्चिदानन्दघन परमात्माबाहेक अन्य कसैको पनि चिन्तन नगर्नु नै ती सबैलाई हवन गर्नु हो।

व्रतहरूले युक्त यत्नशील पुरूषहरू स्वाध्यायरूपी ज्ञानयज्ञ गर्नेखाले छन्॥ २८॥

**अपाने जुह्वति प्राणं, प्राणेऽपानं तथापरे।**
**प्राणापान-गती रुद्ध्वा, प्राणायाम-परायणाः॥ २९॥**
**अपरे नियताहाराः, प्राणान् प्राणेषु जुह्वति।**
**सर्वेऽप्येते यज्ञ-विदो, यज्ञ-क्षपित-कल्मषाः॥ ३०॥**

कति योगीले अपानवायुमा प्राणवायुलाई हवन गर्ने गर्दछन्, त्यस्तै कति योगीहरूले प्राणवायुमा अपानवायुलाई हवन गर्दछन्। त्यस्तै, कति नियमित आहार* गर्ने प्राणायामपरायण पुरूषहरू भने प्राण र अपानको गतिलाई रोकेर प्राणहरूलाई प्राणहरूमै हवन गर्दछन्। यी सबै प्रकारका साधकहरूले यज्ञहरूद्वारा पापहरूलाई नाश गर्दछन् र यज्ञको महत्त्व जान्दछन्॥ २९-३०॥

**यज्ञ-शिष्टामृत-भुजो, यान्ति ब्रह्म सनातनम्।**
**नायं लोकोऽस्त्य-यज्ञस्य, कुतोऽन्यः कुरु-सत्तम॥ ३१॥**

हे कुरूश्रेष्ठ अर्जुन! यज्ञबाट बाँकी रहेको अमृतको अनुभव गर्ने योगीजनले सनातन परब्रह्म परमात्मालाई प्राप्त गर्दछन्। तर, यज्ञ नगर्ने पुरूषका

* गीता अध्याय ६ श्लोक १७ मा हेर्नुपर्दछ।

लागि त यो मनुष्यलोक पनि सुखदायक छैन भने परलोक झन् कसरी सुखदायक हुन सक्छ र ? ॥ ३१ ॥

**एवं बहुविधा यज्ञा, वितता ब्रह्मणो मुखे।**
**कर्मजान् विद्धि तान् सर्वा,-नेवं ज्ञात्वा विमोक्ष्यसे ॥ ३२ ॥**

यस्ता र अन्य विभिन्न किसिमका यज्ञहरू वेदका वाणीहरूमा विस्तारपूर्वक बताइएका छन्। तिनलाई तिमीले मन, इन्द्रिय र शरीरका क्रियाद्वारा सम्पन्न हुने ठान। यसप्रकार, तत्त्वसाथ जानेर तिनको अनुष्ठानद्वारा तिमी कर्मबन्धनबाट पूर्णतः मुक्त हुनेछौ छौ ॥ ३२ ॥

**श्रेयान्-द्रव्य-मयाद्-यज्ञाज्,-ज्ञान-यज्ञः परन्-तप।**
**सर्वं कर्माखिलं पार्थ, ज्ञाने परि-समाप्यते ॥ ३३ ॥**

हे परंतप अर्जुन! द्रव्यमय यज्ञभन्दा ज्ञानयज्ञ अत्यन्त श्रेष्ठ हुन्छ र सम्पूर्ण किसिमका कर्महरू ज्ञानमै आएर समाप्त हुन्छन् ॥३३ ॥

**तद्-विद्धि प्रणिपातेन, परि-प्रश्नेन सेवया।**
**उपदेक्ष्यन्ति ते ज्ञानं, ज्ञानिनस्-तत्त्व-दर्शिनः ॥ ३४ ॥**

त्यस ज्ञानलाई तिमीले तत्त्वदर्शी ज्ञानीहरू भएनजिक गएर बुझ, उनीहरूलाई उचित तरिकाले

दण्डवत्–प्रणाम गर्नाले, उनीहरूको सेवा गर्नाले र कपट त्यागेर सरलतापूर्वक प्रश्न गर्नाले परमात्म-तत्त्वलाई विशिष्ट किसिमले जानेका ती ज्ञानी महात्माहरूले तिमीलाई त्यस तत्त्वज्ञानको उपदेश प्रदान गर्ने छन्॥ ३४॥

**यज्–ज्ञात्वा न पुनर्मोह,–मेवं यास्यसि पाण्डव।**
**येन भूतान्यशेषेण, द्रक्ष्यस्यात्–मन्यथो मयि॥ ३५॥**

जुन ज्ञान पाएपछि तिमी फेरि अहिले झैँ यस्तो मोहमा पर्नेछैनौ। हे अर्जुन! जुन ज्ञानद्वारा निःशेषभावले सम्पूर्ण प्राणीहरूलाई सर्वप्रथम तिमी आफ्नो[1] अन्तरात्मामा देख्नेछौ, त्यसपछि म वासुदेव परमात्मा परमेश्वरमा देख्नेछौ[2]॥ ३५॥

**अपि चेदसि पापेभ्यः, सर्वेभ्यः पाप–कृत्तमः।**
**सर्वं ज्ञान–प्लवेनैव, वृजिनं सन्तरिष्यसि॥ ३६॥**

यदि तिमी अन्य सम्पूर्ण पापीहरूभन्दा पनि धेरै पाप गर्नेवाला छौ भने पनि तिमी ज्ञानरूपी डुँगाको सहारामा निःसन्देह सम्पूर्ण पापरूपी समुद्रबाट राम्रोसँग पार हुन सक्नेछौ॥ ३६॥

१. गीता अ० ६ श्लोक २९ मा हेर्नुस्।
२. गीता अ० ६ श्लोक ३० मा हेर्नुस्।

**यथैधांसि समिद्धोऽग्निर्, -भस्मसात् कुरुतेऽर्जुन।**
**ज्ञानाग्निः सर्व-कर्माणि, भस्मसात् कुरुते तथा ॥ ३७ ॥**

किनकि हे अर्जुन! जसरी प्रज्ज्वलित अग्निले दाउरालाई खरानी बनाइदिन्छ, त्यसैगरी ज्ञानरूपी अग्निले पनि सम्पूर्ण कर्मलाई भस्ममय गरिदिन्छ॥ ३७॥

**न हि ज्ञानेन सदृशं, पवित्र-मिह विद्यते।**
**तत्-स्वयं योग-संसिद्धः, काले-नात्मनि विन्दति ॥ ३८ ॥**

निश्चय नै यस लोकमा ज्ञानसमान पवित्र पार्ने अरू केही छैन। जसले योगद्वारा सिद्धि प्राप्त गरिसकेको छ, त्यस्तो पुरूषले समय आएपछि स्वयं आफैं नै आफ्नो आत्मामा अनुभूति गर्ने छ॥ ३८॥

**श्रद्धावाँल्-लभते ज्ञानं, तत्परः संयतेन्द्रियः।**
**ज्ञानं लब्ध्वा परां शान्ति,-मचिरेणाधि-गच्छति ॥ ३९ ॥**

यस जितेन्द्रिय, साधनापरायण एवं श्रद्धावान् मनुष्यले ज्ञानलाई प्राप्त गर्दछ र ज्ञानलाई प्राप्त गरेर उसले अविलम्ब तत्काल भगवत्प्राप्तिरूपी परम शान्तिलाई प्राप्त गर्दछ॥ ३९ ॥

**अज्ञश्चा-श्रद्-दधानश्च, संशयात्मा विनश्यति।**
**नायं लोकोऽस्ति न परो, न सुखं संशयात्मनः ॥ ४० ॥**

विवेकहीन र श्रद्धारहित संशययुक्त मानिस

परमार्थदेखि अवश्य पनि भ्रष्ट भएर जान्छ। यस्तो संशययुक्त मनुष्यका लागि न त यो लोक छ, न त परलोक छ र न त सुख नै छ॥ ४० ॥

**योग-सन्न्यस्त-कर्माणं, ज्ञान-सञ्छिन्न-संशयम्।**
**आत्मवन्तं न कर्माणि, निबध्नन्ति धनञ्जय॥ ४१ ॥**

हे धनञ्जय! जसले कर्मयोगको विधिले समस्त कर्महरूलाई परमात्मामा अर्पण गरिदिएको छ र जसले विवेकद्वारा समस्त संशयहरूको नाश गरिदिएको छ, यस्तो अन्तःकरण भएको पुरूषलाई कर्महरूले बाँध्दैनन्॥ ४१ ॥

**तस्मा-दज्ञान-सम्भूतं, हृत्स्थं ज्ञानासि-नात्मनः।**
**छित्त्वैनं संशयं योग,-मातिष्ठो-त्तिष्ठ भारत॥ ४२ ॥**

यसैले, हे भरतवंशी अर्जुन! तिमीले हृदयमा स्थित यस अज्ञानजनित आफ्नो संशयलाई विवेक-ज्ञानरूपी तरवारका माध्यमले छेदन गरेर समत्वरूपी कर्मयोगमा स्थित होऊ र युद्धका लागि उठ॥ ४२ ॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, ज्ञान-कर्म-सन्न्यास-योगो नाम चतुर्थोऽध्यायः॥ ४॥

~~०~~

ॐश्रीपरमात्मने नमः

# अथ पञ्चमोऽध्यायः

## अर्जुन उवाच

**सन्न्यासं कर्मणां कृष्ण, पुनर्-योगं च शंससि।**
**यच्छ्रेय एतयो-रेकं, तन्-मे ब्रूहि सुनिश्चितम्॥ १ ॥**

**अर्जुनले भने**—हे कृष्ण! हजुर कर्महरूको परित्याग र फेरी कर्मयोगको पनि प्रशंसा गर्नुहुन्छ। यसर्थ, यी दुईमध्ये मेरो लागि जुनचाहिँ उचित र निश्चितरूपमा कल्याणकारक साधन हो, त्यो मलाई बताउनुहोस्॥ १ ॥

## श्रीभगवानुवाच

**सन्न्यासः कर्म-योगश्च, निःश्रेयस-करावुभौ।**
**तयोस्तु कर्म-सन्न्यासात्, कर्मयोगो विशिष्यते॥ २ ॥**

**श्रीभगवान्ले भन्नुभयो**—कर्मसंन्यास र कर्मयोग— यी दुवै परम कल्याणकारक छन्, तर ती दुईमध्ये पनि कर्मसंन्यासभन्दा कर्मयोग साधनामा सुगम हुनाले श्रेष्ठ छ॥ २ ॥

**ज्ञेयः स नित्य-सन्न्यासी, यो न द्वेष्टि न काङ्क्षति।**
**निर्द्वन्द्वो हि महाबाहो, सुखं बन्धात् प्रमुच्यते॥ ३ ॥**

हे अर्जुन! जुन पुरूषले न कसैसित द्वेष गर्दछ

र न कसैको आकाङ्क्षा नै गर्दछ, त्यस्तो कर्मयोगी साधैँ संन्यासी नै मान्न योग्य हुन्छ, किनकि रागद्वेषादि द्वन्द्वहरूले रहित पुरूष सुखपूर्वक संसारिकबन्धनबाट मुक्त हुन्छ॥ ३॥

**साङ्ख्य-योगौ पृथग्-बालाः, प्रवदन्ति न पण्डिताः।**
**एक-मप्या-स्थितः सम्य,-गुभयोर्-विन्दते फलम्॥ ४॥**

उपर्युक्त संन्यास र कर्मयोगलाई मूर्खहरूले पृथक्-पृथक् फल दिनेवाला भनेर भन्दछन्, पण्डितहरूले होइन; किनकि दुईमध्ये एउटामा पनि सम्यक् प्रकारले स्थित पुरूषले दुवैमा फलरूपी परमात्मालाई नै प्राप्त गर्दछ॥ ४॥

**यत्-साङ्ख्यैः प्राप्यते स्थानं, तद्योगै-रपि गम्यते।**
**एकं साङ्ख्यं च योगं च, यः पश्यति स पश्यति॥ ५॥**

ज्ञानयोगीहरूद्वारा जुन परमधाम प्राप्त गरिन्छ, कर्मयोगीहरूद्वारा पनि त्यही प्राप्त गर्ने गरिन्छ। यसर्थ, जुन पुरूषले ज्ञानयोग र कर्मयोगलाई फलरूपमा समान देख्दछ, उसैले यथार्थ देख्दछ॥ ५॥

**सन्न्यासस्तु महाबाहो, दुःख-माप्तु-मयोगतः।**
**योग-युक्तो मुनिर्-ब्रह्म, नचिरेणाधि-गच्छति॥ ६॥**

परन्तु हे अर्जुन! कर्मयोगविना संन्यास अर्थात्

मन, इन्द्रिय र शरीरद्वारा हुने सम्पूर्ण कर्महरूमा कर्तापनको त्याग प्राप्त गर्न कठिन छ र भगवत्स्वरूपलाई मनन गर्ने कर्मयोगीले भने परब्रह्म परमात्मालाई शीघ्र नै प्राप्त गर्दछ॥ ६॥

**योग-युक्तो विशुद्धात्मा, विजितात्मा जितेन्द्रियः।**
**सर्व-भूतात्म-भूतात्मा, कुर्वन्-नपि न लिप्यते॥ ७॥**

जसको मन आफ्नो वशमा छ, जो विशुद्ध अन्तःकरण भएको तथा जितेन्द्रिय छ र सम्पूर्ण प्राणीका आत्मारूपी परमात्मा नै जसको आत्मा छ, यस्तो कर्मयोगी कर्म गरिरहँदा पनि कर्ममा लिप्त हुँदैन॥ ७॥

**नैव किञ्चित् करोमीति,**
**युक्तो मन्येत तत्त्व-वित्।**
**पश्यञ्-शृण्वन्-स्पृशञ्-जिघ्रन्,**
**नश्नन्-गच्छन्-स्वपञ्-श्वसन्॥ ८॥**
**प्रलपन्-विसृजन्-गृह्णन्,-नुन्मिषन्-निमिषन्-नपि।**
**इन्द्रिया-णीन्द्रियार्थेषु, वर्तन्त इति धारयन्॥ ९॥**

तत्त्व जान्ने साङ्ख्ययोगी त हेर्दा, सुन्दा, स्पर्श गर्दा, सुँघ्दा, खाँदा, हिँड्दा, सुत्दा, सास लिँदा, बोल्दा, त्याग गर्दा, ग्रहण गर्दा र आँखा खोल्दा

र चिम्लँदा पनि सबै इन्द्रियहरू आ-आफ्ना इन्द्रियका विषयहरूमा प्रवृत्त भइरहेको हुन्छ भन्ने यस्तो विचार गरेर म आफू स्वयम् केही पनि गर्दिनँ भन्ने ठान॥ ८-९ ॥

**ब्रह्मण्याधाय कर्माणि, सङ्गं त्यक्त्वा करोति यः।**
**लिप्यते न स पापेन, पद्म-पत्र-मिवाम्भसा ॥ १० ॥**

जो पुरूष सबै कर्म परमात्मामा अर्पण गरेर र आसक्ति त्याग गरी कर्म गर्दछ त्यो पुरूष जलमा कमल-पत्र निर्लिप्त रहे सरि पापले लिप्त हुँदैन॥ १० ॥

**कायेन मनसा बुद्ध्या, केवलै-रिन्द्रियै-रपि।**
**योगिनः कर्म कुर्वन्ति, सङ्गं त्यक्त्वात्म-शुद्धये ॥ ११ ॥**

यसकारण कर्मयोगी ममत्वबुद्धिदेखि रहित भई इन्द्रिय, शरीर, मन र बुद्धिद्वारा पनि आसक्तिलाई त्यागेर केवल अन्तःकरणको शुद्धिका लागि कर्म गर्दछन्॥ ११ ॥

**युक्तः कर्म-फलं त्यक्त्वा, शान्ति-माप्नोति नैष्ठिकीम्।**
**अयुक्तः काम-कारेण, फले सक्तो निबध्यते ॥ १२ ॥**

कर्मयोगीले कर्मका फललाई त्यागेर भगवत्प्राप्तिरूपी शान्तिलाई प्राप्त गर्दछ, तर सकाम पुरूष कामको प्रेरणाले फलमा आसक्त भएर बाँधिन्छ॥ १२ ॥

**सर्व-कर्माणि मनसा, सन्न्यस्यास्ते सुखं वशी।**
**नव-द्वारे पुरे देही, नैव कुर्वन् न कारयन्॥ १३॥**

अन्तःकरण जसको वशमा छ, त्यस्तो साङ्ख्य-योगको आचरण गर्ने पुरूष न गर्दै र न गराउँदै पनि नौ द्वार भएको शरीररूपी घरमा सबै कर्महरूलाई मनैदेखि त्यागेर आनन्दपूर्वक सच्चिदानन्दघन परमात्माको स्वरूपमा स्थित रहन्छ॥ १३॥

**न कर्तृत्वं न कर्माणि, लोकस्य सृजति प्रभुः।**
**न कर्म-फल-संयोगं, स्वभावस्तु प्रवर्तते॥ १४॥**

परमेश्वरले मनुष्यका न त कर्तापनको, न कर्महरूको र न कर्मफलका संयोगको नै रचना गर्दछन्; तर स्वभावले नै काम गरिरहेको हुन्छ॥ १४॥

**नादत्ते कस्यचित्-पापं, न चैव सुकृतं विभुः।**
**अज्ञाने-नावृतं ज्ञानं, तेन मुह्यन्ति जन्तवः॥ १५॥**

सर्वव्यापी परमात्मा न कसैका पापकर्म र न कसैका शुभकर्म नै ग्रहण गर्दछन्, तर अज्ञानरूपी मायाद्वारा ज्ञान ढाकिएको छ, त्यसैले सबै अज्ञानी मानिस मोहित भइरहेका छन्॥ १५॥

**ज्ञानेन तु तदज्ञानं, येषां नाशित-मात्मनः।**
**तेषा-मादित्यवज्-ज्ञानं, प्रकाशयति तत्-परम्॥ १६॥**

तर जसको त्यो अज्ञान परमात्माको तत्त्वज्ञानद्वारा नष्ट गरिएको छ, तिनको त्यो ज्ञानले सूर्यले झैँ त्यस सच्चिदानन्दघन परमात्मालाई प्रकाशित गरिदिन्छ॥ १६॥

**तद्-बुद्धयस्-तदात्मानस्,-तन्-निष्ठास्-तत्-परायणाः।**
**गच्छन्त्य-पुनरावृत्तिं, ज्ञान-निर्धूत-कल्मषाः॥ १७॥**

जसको मन तद्रूप भइरहेको छ, जसको बुद्धि तद्रूप भइरहेको छ र सच्चिदानन्दघन परमात्मामा नै जसको निरन्तर एकै भावको स्थिति छ, यस्ता तत्परायण पुरुषहरूले ज्ञानका माध्यमले पापरहित भएर पुनः जन्मनु-मर्नु नपर्ने परमगति प्राप्त गर्दछन्॥ १७॥

**विद्या-विनय-सम्पन्ने, ब्राह्मणे गवि हस्तिनि।**
**शुनि चैव श्वपाके च, पण्डिताः समदर्शिनः॥ १८॥**

ती ज्ञानीजन विद्या र विनययुक्त ब्राह्मणमा तथा गाई, हात्ती, कुकुर र चण्डालहरूमा समेत समदर्शी* हुन्छन्॥ १८॥

* यसको विस्तार गीता अध्याय ६ श्लोक ३२ को टिप्पणीमा हेर्नुपर्दछ।

**इहैव तैर्-जितः सर्गो, येषां साम्ये स्थितं मनः ।**
**निर्दोषं हि समं ब्रह्म, तस्माद्-ब्रह्मणि ते स्थिताः ॥ १९ ॥**

जसको मन समभावमा स्थित छ, उनीहरूद्वारा यसै जीवित अवस्थामा नै सम्पूर्ण संसार जितिसकिएको छ, किनकि सच्चिदानन्दघन परमात्मा निर्दोष र सम छन्, यसबाट उनीहरू सच्चिदानन्दघन परमात्मामा नै स्थित छन् ॥ १९ ॥

**न प्रहृष्येत्-प्रियं प्राप्य, नोद्विजेत्-प्राप्य चाप्रियम् ।**
**स्थिर-बुद्धि-रसम्मूढो, ब्रह्म-विद्-ब्रह्मणि स्थितः ॥ २० ॥**

जुन पुरूष प्रियलाई प्राप्त गरेर हर्षित हुँदैन र अप्रियलाई प्राप्त गरेर उद्विग्न हुँदैन, त्यस्तो स्थिरबुद्धि, संशयरहित, ब्रह्मवेत्ता पुरूष सच्चिदानन्दघन परब्रह्म परमात्मामा एकीभावले नित्य स्थित हुन्छ ॥ २० ॥

**बाह्य-स्पर्शे-ष्वसक्तात्मा, विन्द-त्यात्मनि यत्-सुखम् ।**
**स ब्रह्म-योग-युक्तात्मा, सुख-मक्षय-मश्नुते ॥ २१ ॥**

बाहिरका विषयमा आसक्तिरहित अन्तःकरण भएको साधकले आत्मामा स्थित जुन ध्यानजनित सात्त्विक आनन्द छ, त्यसलाई प्राप्त गर्दछ र त्यसपछि त्यही सच्चिदानन्दघन परब्रह्म परमात्माको ध्यानरूपी योगमा अभिन्नभावले स्थित पुरूषले अक्षय आनन्दलाई अनुभव गर्दछ ॥ २१ ॥

**ये हि संस्पर्शजा भोगा, दुःख-योनय एव ते।**
**आद्यन्त-वन्तः कौन्तेय, न तेषु रमते बुधः ॥ २२ ॥**

यी इन्द्रिय तथा विषयका संयोगले उत्पन्न हुने जुन सबै भोग छन्, यद्यपि विषयी पुरूषहरूलाई सुखरूपी आभास हुन्छन्, तापनि दुःखकै कारण हुन्छन् र आदि अन्त भएका अर्थात् अनित्य छन्। यसर्थ, हे अर्जुन! बुद्धिमान् विवेकी पुरूष तिनमा रमाउँदैन॥ २२ ॥

**शक्नोती-हैव यः सोढुं, प्राक्-शरीर-विमोक्षणात्।**
**काम-क्रोधोद्-भवं वेगं, स युक्तः स सुखी नरः ॥ २३ ॥**

जुन साधक यस मनुष्यशरीरमा, शरीरको नाश हुनुभन्दा पहिले-पहिले नै कामक्रोधद्वारा उत्पन्न हुने वेगलाई सहन गर्न समर्थ हुन्छ, त्यही पुरूष योगी हो र उही सुखी हो॥ २३ ॥

**योऽन्तः-सुखोऽन्तरा-रामस्,-तथान्तर्-ज्योतिरेव यः।**
**स योगी ब्रह्म-निर्वाणं, ब्रह्म-भूतोऽधि-गच्छति ॥ २४ ॥**

जुन पुरूष अन्तरात्मामा नै सुखको अनुभूति गर्दछ, जो अन्तरात्मा नै रमण गर्छ, जो आत्मामा नै ज्ञान भएको छ, त्यस सच्चिदानन्दघन परब्रह्म परमात्मासित एकैभावलाई प्राप्त साङ्ख्ययोगीले शान्त ब्रह्मलाई प्राप्त गर्दछ॥ २४ ॥

**लभन्ते ब्रह्म-निर्वाण,-मृषयः क्षीण-कल्मषाः।**
**छिन्न-द्वैधा यतात्मानः, सर्व-भूत-हिते रताः ॥ २५ ॥**

जसका सबै पाप नष्ट भएर गएका छन्, जसका सबै संशय ज्ञानका माध्यमले निवृत्त भएर गएका छन्, जो सम्पूर्ण प्राणीमात्रको हितमा संलग्न छन् र जसको जितिएको मन निश्चलभावले परमात्मामा स्थित छ, त्यस्ता ब्रह्मवेत्ता पुरूषले शान्त ब्रह्मलाई प्राप्त गर्दछन् ॥ २५ ॥

**काम-क्रोध-वियुक्तानां, यतीनां यत-चेतसाम्।**
**अभितो ब्रह्म-निर्वाणं, वर्तते विदि-तात्मनाम् ॥ २६ ॥**

कामक्रोधले रहित, जितिएको चित्त भएको, परब्रह्म परमात्मालाई साक्षात्कार गरेको ज्ञानी पुरूषका लागि सम्पूर्ण दृष्टिले शान्त परब्रह्म परमात्मा नै परिपूर्ण हुनुहुन्छ ॥ २६ ॥

**स्पर्शान् कृत्वा बहिर्-बाह्यांश्,-चक्षुश्-चैवान्तरे भ्रुवोः।**
**प्राणा-पानौ समौ कृत्वा, नासा-भ्यन्तर-चारिणौ ॥ २७ ॥**
**यतेन्द्रिय-मनो-बुद्धिर्,-मुनिर्-मोक्ष-परायणः।**
**विगतेच्छा-भय-क्रोधो, यः सदा मुक्त एव सः ॥ २८ ॥**

बाहिरी विषयभोगहरूलाई चिन्तन नगरीकन

बाहिरै निकालेर र आँखाको दृष्टिलाई भृकुटीका बीचमा केन्द्रित गरेर तथा नाकमा विचरण गर्ने प्राण र अपानवायुलाई सम राखेर इन्द्रिय, मन र बुद्धिलाई वशमा राख्ने, इच्छा, भय र क्रोधशून्य मोक्षपरायण जो मुनि* छ, त्यो सदा मुक्त नै रहन्छ॥२७-२८॥

**भोक्तारं यज्ञ-तपसां, सर्व-लोक-महेश्वरम्।**
**सुहृदं सर्व-भूतानां, ज्ञात्वा मां शान्ति-मृच्छति॥ २९॥**

मेरो भक्तले मलाई सबै यज्ञ र तपहरूलाई भोग्नेवाला, सम्पूर्ण लोकहरूमा ईश्वरहरूको पनि ईश्वर तथा सम्पूर्ण भूतप्राणीहरूको सुहृद् अर्थात् स्वार्थरहित दयालु र प्रेमीका रूपमा तत्त्वपूर्वक जानेर शान्ति प्राप्त गर्दछ॥ २९॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, कर्म-सन्न्यास-योगो नाम पञ्चमोऽध्यायः॥ ५॥

~~०~~

---

* परमेश्वरको स्वरूपलाई निरन्तर मनन गर्नेवाला।

ॐ श्रीपरमात्मने नमः

# अथ षष्ठोऽध्यायः

## श्रीभगवानुवाच

**अनाश्रितः कर्मफलं, कार्यं कर्म करोति यः।**
**स सन्न्यासी च योगी च, न निरग्निर्-न चाक्रियः॥ १॥**

**श्रीभगवान्‌ले भन्नुहुन्छ—** जुन पुरूषले कर्मफलको आश्रय नलिईकन कर्तव्यकर्म गर्दछ, त्यो सन्न्यासी हो र योगी पनि हो। तर खालि अग्निकर्म त्याग गर्नाले मात्र सन्न्यासी हुँदैन र केवल क्रियाहरू त्याग गर्नाले मात्र पनि योगी हुँदैन ॥ १ ॥

**यं सन्न्यास-मिति प्राहुर्,-योगं तं विद्धि पाण्डव।**
**न ह्य-सन्न्यस्त-सङ्कल्पो, योगी भवति कश्चन॥ २॥**

हे अर्जुन! जसलाई संन्यास[1] भनेर भनिन्छ, त्यसैलाई तिमीले योग[2] भनेर जान; किनकि सङ्कल्पहरूको त्याग नगर्ने कुनै पनि पुरूष योगी हुन सक्दैन॥ २॥

**आरुरुक्षोर्-मुनेर्-योगं, कर्म कारण-मुच्यते।**
**योगारूढस्य तस्यैव, शमः कारण-मुच्यते॥ ३॥**

योगमा आरूढ हुने इच्छा गर्ने मननशील

---

१-२. गीता अध्याय ३ श्लोक ३ को टिप्पणीमा यसको अर्थ स्पष्ट लेखिएको छ।

पुरूषका लागि योगको प्राप्तिमा निष्काम कर्म गर्नुलाई नै हेतु भनेर भनिन्छ र योगारूढ भएपछि त्यस योगारूढ पुरूषको जुन सर्वसङ्कल्पहरूको अभाव हुन्छ, त्यही कल्याणमा हेतु भनेर भनिन्छ॥ ३ ॥

**यदा हि नेन्द्रियार्थेषु, न कर्मस्वनु-षज्जते।**
**सर्व-सङ्कल्प-सन्न्यासी, योगारूढस्-तदोच्यते॥ ४ ॥**

जुन कालमा न त इन्द्रियहरूका भोगहरूमा र न कर्महरूमा नै आसक्त हुन्छ, त्यस कालमा सर्वसङ्कल्पहरूलाई त्याग गर्ने पुरूषलाई योगारूढ भनेर भनिन्छ॥ ४ ॥

**उद्धरे-दात्म-नात्मानं, नात्मान-मवसादयेत्।**
**आत्मैव ह्यात्मनो बन्धु,-रात्मैव रिपु-रात्मनः॥ ५ ॥**

आफैँद्वारा आफूलाई संसाररूपी समुद्रबाट उद्धार गरोस् र आफूलाई अधोगतिमा नपारोस्, किनकि यस्तो मान्छे आफैँ आफ्नो मित्र र आफैँ आफ्नो शत्रु हो॥ ५ ॥

**बन्धु-रात्मात्मनस्-तस्य, येनात्मै-वात्मना जितः।**
**अनात्मनस्-तु शत्रुत्वे, वर्ते-तात्मैव शत्रुवत्॥ ६ ॥**

जुन जीवात्माद्वारा मन र इन्द्रियसहित शरीर

जितिएको छ, त्यस जीवात्माको त ऊ आफू नै मित्र हो भने जसद्वारा मन र इन्द्रियसहित शरीर जितिएको छैन, त्यसका लागि त ऊ आफैँ नै शत्रु समान शत्रुभावमा रहेको हुन्छ॥ ६ ॥

**जितात्मनः प्रशान्तस्य, परमात्मा समाहितः।**
**शीतोष्ण-सुख-दुःखेषु, तथा मानाप-मानयोः ॥ ७ ॥**

जाडो, गर्मी र सुख-दुःखादि एवं मान र अपमानमा जसका अन्तःकरणका वृत्तिहरू समुचित ढङ्गले शान्त छन्, यस्तो स्वाधीन आत्मा भएका पुरूषको ज्ञानमा सच्चिदानन्दघन परमात्मा सम्यक् प्रकारले स्थित हुनुहुन्छ अर्थात् उसको ज्ञानमा परमात्मासिवाय अन्य केही छँदै छैन॥ ७ ॥

**ज्ञान-विज्ञान-तृप्तात्मा, कूटस्थो विजितेन्द्रियः।**
**युक्त इत्युच्यते योगी, सम-लोष्टाश्म-काञ्चनः ॥ ८ ॥**

ज्ञान र विज्ञानले जुन योगीको अन्तःकरण तृप्त छ, जसको स्थिति विकाररहित छ, जसले इन्द्रियहरू जितेको छ, जसको दृष्टिमा माटो, ढुङ्गो र सुन समान छन्, त्यही योगी युक्त हो, अर्थात् त्यही योगी भगवत्प्राप्त हो भनी बताइन्छ ॥ ८ ॥

**सुहृन्-मित्रार्-युदासीन,-मध्यस्थ-द्वेष्य-बन्धुषु।**
**साधुष्वपि च पापेषु, सम-बुद्धिर्-विशिष्यते॥ ९॥**

सुहृद्[१], मित्र, वैरी, उदासीन[२], मध्यस्थ[३], द्वेष्य र बन्धुहरूमा, धर्मात्माहरूमा र पापीहरूमा पनि समानभाव राख्ने मानिस अत्यन्त श्रेष्ठ हुन्छ॥ ९॥

**योगी युञ्जीत सतत,-मात्मानं रहसि स्थितः।**
**एकाकी यत-चित्तात्मा, निराशी-रपरिग्रहः॥ १०॥**

मन र इन्द्रियहरूसहित शरीरलाई वशमा राख्ने, आशारहित र सङ्ग्रहरहित योगी एक्लै एकान्त स्थानमा स्थित भएर आत्मालाई निरन्तर परमात्मामा लगाओस्॥ १०॥

**शुचौ देशे प्रतिष्ठाप्य, स्थिर-मासन-मात्मनः।**
**नात्युच्छ्रितं नातिनीचं, चैलाजिन-कुशोत्तरम्॥ ११॥**

शुद्ध भूमिमा, जसमाथि क्रमशः कुश, मृगको छाला र कपडा बिच्छ्याइएका छन्, जुन न धेरै अग्लो छ, न धेरै होचो छ, यसरी आफ्नो आसनलाई स्थिरतासाथ स्थापना गरी— ॥ ११॥

---

१. स्वार्थरहित सबैको हित गर्नेवाला।

२. पक्षपातरहित।

३. दुवै पक्षको भलाइ चाहनेवाला।

तत्रैकाग्रं मनः कृत्वा, यत-चित्तेन्द्रिय-क्रियः।
उपविश्यासने युञ्ज्याद्, -योग-मात्म-विशुद्धये ॥ १२ ॥

त्यस आसनमाथि बसेर मनलाई एकाग्र गरेर चित्त र इन्द्रियका क्रियाहरूलाई आफ्नो वशमा राख्दै अन्तःकरणको शुद्धिका लागि योगको अभ्यास गरोस् ॥ १२ ॥

समं काय-शिरो-ग्रीवं, धारयन्-नचलं स्थिरः।
सम्प्रेक्ष्य नासिकाग्रं स्वं, दिशश्-चा-नवलोकयन् ॥ १३ ॥

शरीर, शिर र घाँटीलाई सीधा एवं अचलरूपमा राखेर आफ्नो नाकको अग्रभागतिर दृष्टि दिँदै अरू दिशातिर अवलोकन नगरीकन— ॥ १३ ॥

प्रशान्तात्मा विगत-भीर्, -ब्रह्मचारि-व्रते स्थितः।
मनः संयम्य मच्चित्तो, युक्त आसीत मत्परः ॥ १४ ॥

ब्रह्मचारीको व्रतमा स्थित, भयरहित तथा अत्यन्त शान्त अन्तःकरणवाला सावधान योगी मनलाई रोकेर ममा चित्त राखी मैरै परायण भएर रहोस् ॥ १४ ॥

युञ्जन्-नेवं सदात्मानं, योगी नियत-मानसः।
शान्तिं निर्वाण-परमां, मत्-संस्था-मधिगच्छति ॥ १५ ॥

वशमा गरिएको मन भएको योगीले यसप्रकारले आत्मालाई निरन्तर म परमेश्वरको स्वरूपमा लगाउँदै ममा रहने परमानन्दको पराकाष्ठारूपी शान्तिलाई प्राप्त गर्दछ ॥१५॥

**नात्यश्नतस्-तु योगोऽस्ति, न चैकान्त-मनश्नतः ।**
**न चाति स्वप्न-शीलस्य, जाग्रतो नैव चार्जुन ॥ १६ ॥**

हे अर्जुन! यो योग न त धेरै खाने, न खाँदै नखाने, न धेरै सुत्ने र न त सधैँ जागिरहने व्यक्तिलाई नै सिद्ध हुन्छ ॥१६॥

**युक्ताहार-विहारस्य, युक्त-चेष्टस्य कर्मसु ।**
**युक्त-स्वप्नाव-बोधस्य, योगो भवति दुःखहा ॥ १७ ॥**

दुःखहरूको नाश गर्ने योग त यथायोग्य आहार-विहार गर्ने, कर्महरूमा यथायोग्य चेष्टा गर्ने र यथायोग्य सुत्ने र उठ्ने मानिसलाई नै सिद्ध हुन्छ ॥ १७ ॥

**यदा विनियतं चित्त,-मात्मन्येवा-वतिष्ठते ।**
**निःस्पृहः सर्व-कामेभ्यो, युक्त इत्युच्यते तदा ॥ १८ ॥**

राम्ररी वशमा गरिएको चित्त जुन समयमा परमात्मामा नै उचित तरिकाले स्थित हुन्छ, त्यस

[redacted] स्पृहारहित पुरूष नै
[redacted] ॥१८॥

[redacted] सोपमा स्मृता।
[redacted] योग-मात्मनः ॥ १९ ॥

[redacted] रहेको बत्ती चलायमान
[redacted] ध्यानमा लागेको
[redacted] बताइएको छ॥ १९ ॥

[redacted] योग-सेवया।
[redacted]-नात्मनि तुष्यति ॥ २० ॥

[redacted] भएको चित्त जुन
[redacted] अवस्थामा ध्यानले
[redacted] ज्योतिस्वरूप आत्माको
[redacted] परमात्मामा नै

[redacted]-ग्राह्य-मतीन्द्रियम्।
[redacted]-चलति तत्त्वतः ॥ २१ ॥

[redacted] परको, केवल शुद्ध
[redacted] गर्नयोग्य जुन अनन्त
[redacted] जुन अवस्थामा अनुभव

गर्दछ, त्यसै आत्मस्वरूपमा स्थित त्यो योगी स्वरूपबाट विचलित हुँदै हुँदैन॥ २१॥

**यं लब्ध्वा चापरं लाभं, मन्यते नाधिकं ततः।**
**यस्मिन्-स्थितो न दुःखेन, गुरुणापि विचाल्यते॥ २२॥**

परमात्माको प्राप्तिरूपी जुन लाभलाई प्राप्त गरेर त्यसभन्दा धेरै दोस्रो कुनै लाभ देख्दैन र परमात्मारूपी जुन अवस्थामा स्थित योगी अत्यन्त ठूला-ठूला दुःखदेखि पनि विचलित हुँदैन॥ २२॥

**तं विद्याद्-दुःख-संयोग,-वियोगं योग-सञ्ज्ञितम्।**
**स निश्चयेन योक्तव्यो, योगोऽनिर्विण्ण-चेतसा॥ २३॥**

जो दुःखरूपी संसारको संयोगले रहित एवं जसको नाम योग छ, त्यसलाई जान्नुपर्दछ। त्यो योग दुःख-तनावरहित अर्थात् धैर्य र उत्साह युक्त चित्तद्वारा निश्चयपूर्वक गर्नु कर्तव्य हो॥ २३॥

**सङ्कल्प-प्रभवान्-कामांस्,-त्यक्त्वा सर्वा-नशेषतः।**
**मनसै-वेन्द्रिय-ग्रामं, विनियम्य समन्ततः॥ २४॥**

सङ्कल्पद्वारा उत्पन्न हुने सम्पूर्ण कामनाहरूलाई निःशेषरूपले त्यागेर र मनद्वारा इन्द्रियहरूको समुदायलाई सबैतिरबाट राम्रोसित रोकेर— ॥ २४॥

**शनैः शनै-रुपरमेद्,-बुद्ध्या धृति-गृहीतया।**
**आत्म-संस्थं मनः कृत्वा, न किञ्चिदपि चिन्तयेत्॥ २५॥**

क्रमैसित अभ्यास गरेपछि उपरतिलाई प्राप्त होस् र धैर्ययुक्त बुद्धिद्वारा मनलाई परमात्मामा स्थित गरी परमात्मासिवाय अन्य केही पनि चिन्तन नगरोस्॥ २५॥

**यतो यतो निश्चरति, मनश्-चञ्चल-मस्थिरम्।**
**ततस्-ततो नियम्यैत,-दात्मन्येव वशं नयेत्॥ २६॥**

यो स्थिर नरहने अर्थात् चञ्चल मन जुनजुन शब्दादि विषयका निमित्तले संसारमा विचरण गर्दछ, तिनै विषयबाट रोकेर अर्थात् हटाएर यसलाई बारम्बार परमात्मामा नै निरूद्ध गरोस्॥ २६॥

**प्रशान्त-मनसं ह्येनं, योगिनं सुख-मुत्तमम्।**
**उपैति शान्त-रजसं, ब्रह्म-भूत-मकल्मषम्॥ २७॥**

किनकि जसको मन अत्यन्त शान्त छ, जो पापले रहित छ र जसको रजोगुण शान्त भएको छ, यस्तो यस सच्चिदानन्दघन ब्रह्मका साथमा एकभाव भएको योगीलाई उत्तम आनन्द प्राप्त हुन्छ॥ २७॥

**युञ्जन्-नेवं सदात्मानं, योगी विगत-कल्मषः।**
**सुखेन ब्रह्म-संस्पर्श,-मत्यन्तं सुख-मश्नुते॥ २८॥**

त्यो पापरहित योगी यसप्रकार निरन्तर आत्मालाई परमात्मामा लगाउँदै सुखपूर्वक परब्रह्म परमात्माको प्राप्तिरूपी आनन्दको अनुभूति गर्दछ॥ २८॥

**सर्व-भूतस्थ-मात्मानं, सर्व-भूतानि चात्मनि।**
**ईक्षते योग-युक्तात्मा, सर्वत्र सम-दर्शनः॥ २९॥**

योगद्वारा जसको आत्मा परमात्मासित एकीभाव भएको छ, जो सबैमा समभावले रहेको देख्दछ, यस योगीले आत्मालाई सम्पूर्ण भूतहरूमा र सम्पूर्ण भूतहरूलाई आत्मामा स्थित भएको देख्दछ॥ २९॥

**यो मां पश्यति सर्वत्र, सर्वं च मयि पश्यति।**
**तस्याहं न प्रणश्यामि, स च मे न प्रणश्यति॥ ३०॥**

जुन पुरूषले सम्पूर्ण भूतहरूमा सबैको आत्मारूपी म वासुदेवलाई नै व्यापक देख्दछ र सम्पूर्ण भूतहरूलाई पनि म वासुदेवकै अन्तर्गत* देख्दछ, उसका लागि म र मेरा निमित्त ऊ अदृश्य हुँदैन॥ ३०॥

**सर्व-भूत-स्थितं यो मां, भजत्येकत्व-मास्थितः।**
**सर्वथा वर्तमानोऽपि, स योगी मयि वर्तते॥ ३१॥**

* गीता अध्याय ९ श्लोक ६ मा हेर्नुस्।

जुन पुरुष एकैभावमा स्थित भएर सम्पूर्ण भूतहरूमा आत्मरूपले स्थित म सच्चिदानन्दघन वासुदेवलाई भज्दछ, त्यो योगी सबै प्रकारले क्रियाशील रहेर पनि ममा नै रहन्छ॥ ३१ ॥

**आत्मौपम्येन सर्वत्र, समं पश्यति योऽर्जुन।**
**सुखं वा यदि वा दुःखं, स योगी परमो मतः॥ ३२॥**

हे अर्जुन! जुन योगी आफूलाई जस्तै* सम्पूर्ण भूतहरूलाई समान देख्दछ र सुख अथवा दुःखलाई पनि सबैमा समान देख्दछ, त्यो योगी परम श्रेष्ठ मानिएको छ॥ ३२ ॥

*अर्जुन उवाच*

**योऽयं योगस्-त्वया प्रोक्तः, साम्येन मधुसूदन।**
**एतस्याहं न पश्यामि, चञ्चलत्वात् स्थितिं स्थिराम्॥ ३३॥**

**अर्जुन भन्छन्**—हे मधुसूदन! हजुरले समभावरूप जुन यो योग बताउनुभयो, मनको चञ्चलापनाले गर्दा मैले यसको नित्य स्थितिलाई देख्दिनँ॥ ३३ ॥

* जसरी मानिस आफ्नो मस्तिष्क, हात, गोडा र गुदादिका साथ ब्राह्मण, क्षत्रिय, शूद्र र म्लेच्छादिकहरूले जस्तै व्यवहार गर्दा पनि तिनमा आत्मभाव अर्थात् आफ्नोपन समान हुनाले सुख र दुःखलाई समान नै देख्दछ, त्यसैगरी सबै भूतहरूमा देख्नु 'आफूलाई जस्तै' सम देख्नु हो।

**चञ्चलं हि मनः कृष्ण, प्रमाथि बलवद्-दृढम्।**
**तस्याहं निग्रहं मन्ये, वायोरिव सुदुष्करम्॥ ३४॥**

किनकि हे श्रीकृष्ण! यो मन सारै चञ्चल, प्रमथनशील स्वभावको, सारै दृढ र बलवान् छ। यसर्थ, यसलाई वशमा गर्नुलाई मैले वायुलाई रोक्नुजत्तिकै अत्यन्त दुष्कर मान्दछु॥ ३४॥

***श्रीभगवानुवाच***

**असंशयं महाबाहो, मनो दुर्-निग्रहं चलम्।**
**अभ्यासेन तु कौन्तेय, वैराग्येण च गृह्यते॥ ३५॥**

**श्रीभगवान्ले भन्नुभयो**—हे महाबाहो! निःसन्देह मन चञ्चल छ र यसलाई नियन्त्रण गर्न अत्यन्त कठिन छ, तर हे कुन्तीपुत्र अर्जुन! अभ्यास* र वैराग्यद्वारा भने वश गर्न सकिन्छ॥ ३५॥

**असंयतात्मना योगो, दुष्प्राप इति मे मतिः।**
**वश्यात्मना तु यतता, शक्योऽवाप्तु-मुपायतः॥ ३६॥**

जसको मन वशमा गरिएको हुँदैन, यस्तो पुरूषका लागि योग दुष्प्राप्य छ र वशमा गरिएको मन भएको प्रयत्नशील पुरूषका लागि साधनाद्वारा

* गीता अध्याय १२ श्लोक ९ को टिप्पणीमा यसको विस्तार हेर्नुस्।

त्यसलाई प्राप्त गर्ने कुरा सजिलो छ भन्ने मेरो मत हो॥ ३६॥

## अर्जुन उवाच

**अयतिः श्रद्धयोपेतो, योगाच्-चलित-मानसः।**
**अप्राप्य योग-संसिद्धिं, कां गतिं कृष्ण गच्छति॥ ३७॥**

**अर्जुनले भने**—हे कृष्ण! जो योगमा श्रद्धा राख्दछ, तर संयम भने अपनाउँदैन र अन्ततः जसको मन योगबाट विचलित हुन्छ, यस्तो पुरूषले योगको सिद्धि अर्थात् भगवत्साक्षात्कारलाई प्राप्त नगरी कस्तो गति प्राप्त गर्दछ?॥ ३७॥

**कच्चिन्-नोभय-विभ्रष्टश्,-छिन्नाभ्र-मिव नश्यति।**
**अप्रतिष्ठो महाबाहो, विमूढो ब्रह्मणः पथि॥ ३८॥**

हे महाबाहो! के त्यो भगवत्प्राप्तिका मार्गमा मोहित भएको आश्रयरहित पुरूष छिन्नभिन्न भई फाटेका बादल झैँ दुवैतिरबाट भ्रष्ट भएर नष्ट त हुँदैन?॥ ३८॥

**एतन्-मे संशयं कृष्ण, छेत्तु-मर्हस्य-शेषतः।**
**त्वदन्यः संशयस्यास्य, छेत्ता न ह्युप-पद्यते॥ ३९॥**

हे श्रीकृष्ण! मेरो यस संशयलाई पूर्णरूपले हटाउन तपाईं नै योग्य हुनुहुन्छ, निश्चय नै यो

सन्देह हटाउन हजुरभन्दा अर्को कोही पनि पाउन सम्भव छैन॥ ३९ ॥

श्रीभगवानुवाच

**पार्थ नैवेह नामुत्र, विनाशस्-तस्य विद्यते।**
**न हि कल्याण-कृत्-कश्चिद्,-दुर्-गतिं तात गच्छति ॥ ४० ॥**

**श्रीभगवान्ले भन्नुभयो**—हे पार्थ! त्यस पुरूषको न त यस लोकमा नाश हुन्छ, न त परलोकमा नै। हे प्रियवर! जसले आत्माको उद्धारका लागि अर्थात् भगवत्प्राप्तिका लागि कर्म गर्छ, त्यस्तो मनुष्यले कहिल्यै दुर्गति प्राप्त गर्दैन॥ ४० ॥

**प्राप्य पुण्य-कृतां लोका,-नुषित्वा शाश्वतीः समाः।**
**शुचीनां श्रीमतां गेहे, योग-भ्रष्टोऽभिजायते ॥ ४१ ॥**

योगभ्रष्ट पुरूषले पुण्यवान्हरूका लोकहरूलाई अर्थात् स्वर्गादि उत्तम लोकहरूलाई प्राप्त गरी तिनमा धेरै वर्षसम्म निवास गरी फेरी शुद्ध आचरण भएको विशिष्ट पुरूषको घरमा जन्म लिन्छ॥ ४१ ॥

**अथवा योगिना-मेव, कुले भवति धीमताम्।**
**एतद्धि दुर्लभ-तरं, लोके जन्म यदी-दृशम्॥ ४२ ॥**

अथवा वैराग्यवान् पुरूष ती लोकहरूमा नगई ज्ञानवान् योगीहरूकै कुलमा जन्म लिन्छ। निःसन्देह

यसप्रकारको जो यो जन्म छ, त्यो यस लोकमा अत्यन्त दुर्लभ छ॥ ४२॥

**तत्र तं बुद्धि-संयोगं, लभते पौर्व-देहिकम्।**
**यतते च ततो भूयः, संसिद्धौ कुरु-नन्दन॥ ४३॥**

त्यहाँ त्यसअघि शरीरमा सङ्ग्रह गरिएको बुद्धिको संयोग अर्थात् समत्वबुद्धियोगको संस्कार अनायास प्राप्त हुन्छ, र हे कुरूनन्दन! त्यसका प्रभावले पुःन ऊ परमात्माको प्राप्तिरूपी सिद्धिको पूर्णताका लागि अझै बढी प्रयत्नरत हुन्छ॥ ४३॥

**पूर्वाभ्यासेन तेनैव, ह्रियते ह्यवशोऽपि सः।**
**जिज्ञासु-रपि योगस्य, शब्द-ब्रह्माति-वर्तते॥ ४४॥**

त्यस्तो* विशिष्ट व्यक्तिको घरमा जन्म लिनेवाला योगभ्रष्ट पराधीन भएर पनि त्यही पहिलेको अभ्यासले नै निःसन्देह भगवान्‌तिर आकर्षित हुन्छ, तथा समबुद्धिरूपी योगको जिज्ञासुले पनि वेदमा भनिएका सकाम कर्महरूका फललाई उल्लङ्घन गर्दछ॥ ४४॥

**प्रयत्नाद्-यतमानस्-तु, योगी संशुद्ध-किल्बिषः।**
**अनेक-जन्म-संसिद्धस्,-ततो याति परां गतिम्॥ ४५॥**

तर, अनेक जन्मको साधनाले अन्तःकरण शुद्ध

---

* यहाँ 'ऊ' शब्दद्वारा श्रीमान् (विशिष्ट व्यक्ति)को घरमा जन्म लिनेवाला योगभ्रष्ट पुरुष भन्ने बुझ्नुपर्दछ।

भएको र प्रयत्नपूर्वक अभ्यास गर्ने योगी सम्पूर्ण पापदेखि रहित भएर परमपदलाई प्राप्त गर्दछ ॥ ४५ ॥

**तपस्विभ्योऽधिको योगी,**
**ज्ञानिभ्योऽपि मतोऽधिकः ।**
**कर्मिभ्यश्-चाधिको योगी ,**
**तस्माद्-योगी भवार्जुन ॥ ४६ ॥**

योगी तपस्विहरूभन्दा श्रेष्ठ हुन्छ, शास्त्र-ज्ञानीहरूभन्दा पनि श्रेष्ठ मानिएको छ भने सकाम कर्म गर्नेभन्दा पनि योगी श्रेष्ठ हुन्छ; यसैले, हे अर्जुन! तिमी योगी बन ॥ ४६ ॥

**योगिना-मपि सर्वेषां, मद्-गते-नान्त-रात्मना ।**
**श्रद्धा-वान् भजते यो मां, स मे युक्त-तमो मतः ॥ ४७ ॥**

यसप्रकार, सम्पूर्ण योगीहरूमा पनि जो श्रद्धावान् योगी ममा चित्त लगाएर अन्तरात्माले मलाई नै निरन्तर भज्दछ, त्यो योगीलाई म परम श्रेष्ठ मान्दछु ॥ ४७ ॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, आत्म-संयम-योगो नाम षष्ठोऽध्यायः ॥ ६ ॥

~~o~~

ॐ श्रीपरमात्मने नमः

# अथ सप्तमोऽध्यायः

## श्रीभगवानुवाच

**मय्यासक्त-मनाः पार्थ, योगं युञ्जन् मदाश्रयः।**
**असंशयं समग्रं मां, यथा ज्ञास्यसि तच्छृणु॥ १॥**

**श्रीभगवान्‌ले भन्नुभयो**—हे पार्थ! अनन्यप्रेमले ममा आसक्तचित्त तथा अनन्यभावले मेरै परायण भएर योगमा लागेका तिमीले जसरी सम्पूर्ण विभूति, बल, ऐश्वर्यादि गुणहरूले युक्त, सबैको आत्मरूप मलाई संशयरहित जान्दछौ, त्यसलाई सुन॥ १॥

**ज्ञानं तेऽहं सविज्ञान,-मिदं वक्ष्याम्य-शेषतः।**
**यज्-ज्ञात्वा नेह भूयोऽन्यज्,-ज्ञातव्य-मवशिष्यते॥ २॥**

मैले तिम्रालागि यस विज्ञानसहित तत्त्वज्ञानलाई सम्पूर्णतया बताउँछु, जसलाई जानेपछि फेरि केही जान्नका लागि बाँकी रहँदैन॥ २॥

**मनुष्याणां सहस्रेषु, कश्चिद्-यतति सिद्धये।**
**यतता-मपि सिद्धानां, कश्चिन्-मां वेत्ति तत्त्वतः॥ ३॥**

हजारौँ मनुष्यहरूमा कुनै एक जना मेरो प्राप्तिका लागि प्रयत्न गर्दछ र त्यसरी प्रयास गर्ने योगीहरूमध्ये पनि कुनै एक जना मात्र मेरो परायण भएर मलाई तत्त्वसाथ अर्थात् यथार्थरूपले जान्दछ॥ ३॥

**भूमि-रापोऽनलो वायुः, खं मनो बुद्धि-रेव च।**
**अहङ्कार इतीयं मे, भिन्ना प्रकृति-रष्टधा॥ ४॥**
**अपरेय-मितस्-त्वन्यां, प्रकृतिं विद्धि मे पराम्।**
**जीवभूतां महाबाहो, ययेदं धार्यते जगत्॥ ५॥**

पृथ्वी, जल, अग्नि, वायु, आकाश, मन, बुद्धि र अहङ्कार समेत यसरी यी आठ प्रकारले विभाजित मेरो प्रकृति छ। यसरी विभाजित प्रकृति त अपरा अर्थात् मेरो जडप्रकृति हो। हे महाबाहो! यसभन्दा भिन्न अर्को जीवरूपा मेरो परा अर्थात् चेतन प्रकृति छ भन्ने जान, जसद्वारा यो सम्पूर्ण जगत् धारण गरिन्छ॥ ४-५ ॥

**एतद्-योनीनि भूतानि, सर्वाणी-त्युप-धारय।**
**अहं कृत्स्नस्य जगतः, प्रभवः प्रलयस्-तथा॥ ६ ॥**

हे अर्जुन! सम्पूर्ण भूत यिनै दुई प्रकृतिद्वारा नै उत्पन्न भएका हुन् र म सम्पूर्ण जगत्को उत्पत्ति र प्रलय हुँ, अर्थात् सम्पूर्ण जगत्को मूल कारण नै म हुँ भन्ने तिमी जान॥ ६ ॥

**मत्तः परतरं नान्यत्, किञ्चि-दस्ति धनञ्जय।**
**मयि सर्वमिदं प्रोतं, सूत्रे मणि-गणा इव॥ ७॥**

हे धनञ्जय! मदेखि भिन्न अर्को कुनै पनि

परम कारण छैन। यो सम्पूर्ण जगत् धागाको डोरामा मणि आदि उनिए झैं मैमा गाँसिएर रहेको छ॥ ७॥

**रसोऽहमप्सु कौन्तेय, प्रभास्मि शशि-सूर्ययोः।**
**प्रणवः सर्व-वेदेषु, शब्दः खे पौरुषं नृषु॥ ८॥**

हे अर्जुन! म जलमा रस हुँ, चन्द्रमा र सूर्यमा प्रकाश हुँ, सम्पूर्ण वेदहरूमा ओंकार हुँ, आकाशमा शब्द हुँ र पुरूषमा पुरूषत्व हुँ॥ ८॥

**पुण्यो गन्धः पृथिव्यां च, तेजश्-चास्मि विभावसौ।**
**जीवनं सर्व-भूतेषु, तपश्-चास्मि तपस्विषु॥ ९॥**

म पृथ्वीमा पवित्र* सुगन्ध र अग्निमा तेज हुँ, सम्पूर्ण भूतहरूमा तिनको जीवन हुँ भने तपस्वीहरूमा म तप हुँ॥ ९॥

**बीजं मां सर्व-भूतानां, विद्धि पार्थ सनातनम्।**
**बुद्धिर्-बुद्धिमता-मस्मि, तेजस्-तेजस्विना-महम्॥ १०॥**

हे अर्जुन! तिमीले सम्पूर्ण भूतहरूको सनातन बीज मलाई नै जान। म बुद्धिमान्हरूको बुद्धि र तेजस्विहरूको तेज हुँ॥ १०॥

* शब्द, स्पर्श, रूप, रस, गन्धद्वारा यस प्रसङ्गमा यिनका कारणरूपी तन्मात्राहरूलाई ग्रहण गर्ने कुरा छ, यस कुरालाई स्पष्ट गर्नका लागि तिनका साथमा पवित्र शब्द जोडिएको छ।

**बलं बलवतां चाहं, काम-राग-विवर्जितम्।**
**धर्मा-विरुद्धो भूतेषु, कामोऽस्मि भरतर्षभ॥ ११॥**

हे भरतश्रेष्ठ! म बलवानहरूको आसक्ति र कामनाहरूले रहित बल अर्थात् सामर्थ्य हुँ भने सबै भूतहरूमा धर्मअनुकूल अर्थात् शास्त्रअनुकूल काम हुँ॥ ११॥

**ये चैव सात्त्विका भावा, राजसास्-तामसाश्-च ये।**
**मत्त एवेति तान् विद्धि, न त्वहं तेषु ते मयि॥ १२॥**

अरू पनि जो सत्त्वगुण, रजोगुण एवं तमोगुणबाट उत्पन्न हुने भावहरू छन्, ती सबैलाई तिमीले 'मद्वारा नै हुनेवाला हुन्' भन्ने जान, परन्तु वास्तवमा* तिनमा म र ती ममा छैनन् अर्थात् म तिनको वशमा छैन र ती मेरा अधीनमा छन्॥ १२॥

**त्रिभिर्-गुणमयैर्-भावै,-रेभिः सर्व-मिदं जगत्।**
**मोहितं नाभि-जानाति, मामेभ्यः पर-मव्ययम्॥ १३॥**

गुणहरूका कार्यरूप सात्त्विक, राजस र तामस यी तीनै प्रकारका भावहरूद्वारा यो सारा संसार प्राणीसमुदाय मोहित भइरहेको छ; यसर्थ, यी तीनै गुणहरूदेखि पर म अविनाशीलाई जान्दैन॥ १३॥

**दैवी ह्येषा गुणमयी, मम माया दुरत्यया।**
**मामेव ये प्रपद्यन्ते, माया-मेतां तरन्ति ते॥ १४॥**

* गीता अ० ९ श्लोक ४-५ मा हेर्नुस्।

किनकि यो अलौकिक अर्थात् अति अद्भुत त्रिगुणमयी मेरो माया बुझिनसक्नु छ, तर जुन पुरूषले केवल मलाई नै निरन्तर भज्दछन्, उनीहरूले यो मायाबाट पार पाउँछन् अर्थात् संसारदेखि तर्दछन्॥ १४॥

**न मां दुष्कृतिनो मूढाः, प्रपद्यन्ते नराधमाः।**
**मायया-पहृत-ज्ञाना, आसुरं भाव-माश्रिताः॥ १५॥**

मायाद्वारा जसको ज्ञान हरण गरिएको छ, त्यस्तो आसुर-स्वभाव धारण गरेको, मानिसहरूमध्ये पनि नीच, दूषित कर्म गर्ने मूर्खहरूले मलाई भज्दैनन्॥ १५॥

**चतुर्विधा भजन्ते मां, जनाः सुकृतिनोऽर्जुन।**
**आर्तो जिज्ञासु-रर्थार्थी, ज्ञानी च भरतर्षभ॥ १६॥**

हे भरतवंशीहरूमा श्रेष्ठ अर्जुन! उत्तम कर्म गर्ने अर्थार्थी[१], आर्त[२], जिज्ञासु[३] र ज्ञानी—यी चार प्रकारका भक्तजनले मलाई भज्दछन्॥ १६॥

**तेषां ज्ञानी नित्य-युक्त, एक-भक्तिर्-विशिष्यते।**
**प्रियो हि ज्ञानिनोऽत्यर्थ,-महं स च मम प्रियः॥ १७॥**

तीमध्ये ममा निरन्तर एकैभावले स्थित अनन्य

---

१. सांसारिक पदार्थहरूका लागि भज्नेवाला।
२. सङ्कट निवारणका लागि भज्नेवाला।
३. मलाई यथार्थरूपले जान्ने इच्छाले भज्नेवाला।

प्रेमभक्तिवाला ज्ञानी भक्त अति उत्तम छ, किनकि मलाई तत्त्वसाथ जान्ने ज्ञानीका लागि म अत्यन्त प्रिय छु भने त्यो ज्ञानी मेरालागि अत्यन्त प्रिय छ॥ १७॥

**उदाराः सर्व एवैते, ज्ञानी त्वात्मैव मे मतम्।**
**आस्थितः स हि युक्तात्मा, मामेवा-नुत्तमां गतिम्॥ १८॥**

यी सबै उदार छन्, तर ज्ञानी त साक्षात् मेरो स्वरूप नै हो भन्ने मेरो मत छ। किनकि त्यो स्थिर मनबुद्धिवाला ज्ञानी भक्त अति उत्तम गतिस्वरूप ममा नै राम्रोसित स्थित छ॥ १८॥

**बहूनां जन्मना-मन्ते, ज्ञानवान्-मां प्रपद्यते।**
**वासुदेवः सर्व-मिति, स महात्मा सु-दुर्लभः॥ १९॥**

धेरै जन्ममध्ये अन्तको जन्ममा तत्त्वज्ञान प्राप्त पुरूषले सबै थोक वासुदेव नै हो भन्ने ठानेर मलाई भज्दछ, त्यस्तो महात्मा अत्यन्त दुर्लभ छ॥ १९॥

**कामैस्-तैस्-तैर्-हृत-ज्ञानाः, प्रपद्यन्तेऽन्य-देवताः।**
**तं तं नियम-मास्थाय, प्रकृत्या नियताः स्वया॥ २०॥**

जुनजुन भोगहरूको कामनाद्वारा जसको ज्ञान हरण गरिएको छ, ती मानिसहरू आफ्नो स्वभावले प्रेरित भएर, तिनैतिनै नियमलाई धारण गरी अन्य देवताहरूलाई भज्दछन् अर्थात् पुज्दछन्॥ २०॥

**यो यो यां यां तनुं भक्तः, श्रद्धयार्चितु-मिच्छति।**
**तस्य तस्या-चलां श्रद्धां, तामेव विदधा-म्यहम्॥ २१॥**

जो-जो सकाम भक्त जुनजुन देवताका स्वरूप-लाई श्रद्धासाथ पूज्न चाहन्छन्, तिनैतिनै भक्तको श्रद्धालाई मैले उनै देवताप्रति स्थिर गरिदिन्छु॥ २१॥

**स तया श्रद्धया युक्तस्,-तस्याराधन-मीहते।**
**लभते च ततः कामान्, मयैव विहितान् हि तान्॥ २२॥**

त्यो पुरूष त्यस श्रद्धाले युक्त भएर तिनै देवताको पूजन गर्दछ र तिनै देवताबाट मद्द्वारा नै विधान गरिएका ती इच्छित भोगहरूलाई निःसन्देह प्राप्त गर्दछ॥ २२॥

**अन्तवत्तु फलं तेषां, तद्-भवत्यल्प-मेधसाम्।**
**देवान्-देव-यजो यान्ति, मद्-भक्ता यान्ति मामपि॥ २३॥**

तर, ती अल्पबुद्धि भएकाहरूको त्यो फल नाशवान् छ। देवताहरूको पूजा गर्नेहरूले देवताहरूलाई नै प्राप्त गर्दछन्। मेरा भक्तले चाहे जसरी भजून्, अन्तमा तिनले मलाई नै प्राप्त गर्दछन्॥ २३॥

**अव्यक्तं व्यक्ति-मापन्नं, मन्यन्ते मामबुद्धयः।**
**परं भाव-मजानन्तो, ममाव्यय-मनुत्तमम्॥ २४॥**

बुद्धिहीन पुरूषहरूले मेरो सर्वोत्तम अविनाशी परम भावलाई नबुझीकन मन-इन्द्रियहरूदेखि पर

म सच्चिदानन्दघन परमात्मालाई मनुष्यजस्तै ठान्दै जन्मिएर व्यक्तिभावलाई प्राप्त गरेको ठान्दछन्॥ २४॥

**नाहं प्रकाशः सर्वस्य, योग-माया-समावृतः।**
**मूढोऽयं नाभि-जानाति, लोको मा-मज-मव्ययम्॥ २५॥**

आफ्नो योगमायाद्वारा ढाकिएको म सबैका लागि प्रत्यक्ष हुँदिन, यसर्थ यो अज्ञानी जनसमुदायले म जन्मरहित अविनाशी परमेश्वरलाई जान्दैन, अर्थात् मलाई जन्मने र मर्ने ठान्दछन्॥ २५॥

**वेदाहं समतीतानि, वर्तमानानि चार्जुन।**
**भविष्याणि च भूतानि, मां तु वेद न कश्चन॥ २६॥**

हे अर्जुन! पहिले व्यतीत भएका र वर्तमानमा स्थित एवं पछि हुनेवाला सबै भूतहरूलाई म जान्दछु, तर कुनै पनि श्रद्धाभक्तिरहित पुरूषले मलाई जान्दैन॥ २६॥

**इच्छा-द्वेष-समुत्थेन, द्वन्द्व-मोहेन भारत।**
**सर्व-भूतानि सम्मोहं, सर्गे यान्ति परन्-तप॥ २७॥**

हे भरतवंशी अर्जुन! संसारमा इच्छा र द्वेषले उत्पन्न सुखदुःखादि द्वन्द्वरूपी मोहले सम्पूर्ण प्राणीहरूले सघन अज्ञानतालाई प्राप्त गरिरहेका छन्॥ २७॥

**येषां त्वन्त-गतं पापं, जनानां पुण्य-कर्मणाम्।**
**ते द्वन्द्व-मोह-निर्मुक्ता, भजन्ते मां दृढ-व्रताः ॥ २८ ॥**

परन्तु, निष्कामभावले श्रेष्ठ कर्महरूको आचरण गर्ने जुन पुरूषहरूको पाप नष्ट भएको छ, ती रागद्वेषजनित द्वन्द्वरूपी मोहले मुक्त दृढनिश्चयी भक्तले मलाई सबैतिरबाट भज्दछन् ॥२८॥

**जरा-मरण-मोक्षाय, मामाश्रित्य यतन्ति ये।**
**ते ब्रह्म तद्-विदुः कृत्स्न,-मध्यात्मं कर्म चाखिलम् ॥ २९ ॥**

जो मेरो शरण परेर जरा र मरणबाट छुटकारा पाउनका लागि प्रयत्न गर्दछन्, ती पुरूषले त्यस ब्रह्मलाई, सम्पूर्ण अध्यात्म र कर्मलाई जान्दछन् ॥ २९ ॥

**साधि-भूताधि-दैवं मां, साधि-यज्ञं च ये विदुः।**
**प्रयाण-कालेऽपि च मां, ते विदुर्-युक्त-चेतसः ॥ ३० ॥**

जो पुरूषः अधिभूत, अधिदैव र अधियज्ञसहित (सबैको आत्मारूपी) मलाई जान्दछन्, ती युक्तचित्त पुरूष अन्तकालमा पनि मलाई नै जान्दछन् अर्थात् मैमा प्राप्त हुन्छन् ॥ ३० ॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, ज्ञान-विज्ञान-योगो नाम सप्तमोऽध्यायः ॥ ७ ॥

~~०~~

ॐ श्रीपरमात्मने नमः

# अथ-अष्टमोऽध्यायः

## अर्जुन उवाच

**किं तद्-ब्रह्म किमध्यात्मं, किं कर्म पुरुषोत्तम।**
**अधिभूतं च किं प्रोक्त,-मधि-दैवं किमुच्यते॥ १॥**

**अर्जुनले भने**—हे पुरूषोत्तम! त्यो ब्रह्म के हो? अध्यात्म के हो? कर्म के हो? अधिभूत नामबाट के भन्न खोजिएको छ र अधिदैव कसलाई भनिन्छ?॥१॥

**अधि-यज्ञः कथं कोऽत्र, देहेऽस्मिन्-मधुसूदन।**
**प्रयाण-काले च कथं, ज्ञेयोऽसि नियतात्मभिः॥ २॥**

हे मधुसूदन! यो अधियज्ञ के हो? त्यो यस शरीरमा कसरी रहन्छ? र युक्तचित्तवाला पुरूषहरूद्वारा अन्तकालमा कुन प्रकारले हजुर जानिनुहुन्छ?॥ २॥

## श्रीभगवानुवाच

**अक्षरं ब्रह्म परमं, स्वभावोऽध्यात्म-मुच्यते।**
**भूत-भावोद्भव-करो, विसर्गः कर्म-सञ्ज्ञितः॥ ३॥**

**श्रीभगवान् भन्नुहुन्छ**—परम अक्षर अर्थात् कहिल्यै ननासिने तत्त्व 'ब्रह्म' हो, आफ्नो स्वरूप अर्थात् स्वभाव 'अध्यात्म' नामले चिनिन्छ भने भूतहरूको भावलाई उत्पन्न गर्नेवाला जुन त्याग छ,

त्यो 'कर्म' नामले चिनिएको छ॥ ३॥

**अधिभूतं क्षरो भावः, पुरुषश्-चाधि-दैवतम्।**
**अधि-यज्ञोऽह-मेवात्र, देहे देह-भृतां वर॥ ४॥**

उत्पत्ति-विनाशको धर्म भएका सबै पदार्थ अधिभूत हुन्, हिरण्यमय पुरूष* अधिदैव हो। हे देहधारीहरूमा श्रेष्ठ अर्जुन! यस शरीरमा अन्तर्यामी-रूपले रहने म वासुदेव नै अधियज्ञ हुँ।॥ ४॥

**अन्त-काले च मामेव, स्मरन्-मुक्त्वा कलेवरम्।**
**यः प्रयाति स मद्-भावं, याति नास्त्यत्र संशयः॥ ५॥**

जो पुरूष अन्तकालमा पनि मलाई नै स्मरण गर्दै शरीर त्याग गर्दछ, उसले मेरो साक्षात् स्वरूपलाई प्राप्त गर्दछ, यसमा कत्ति पनि सन्देह छैन॥ ५॥

**यं यं वापि स्मरन् भावं, त्यजत्यन्ते कलेवरम्।**
**तं तमेवैति कौन्तेय, सदा तद्-भाव-भावितः॥ ६॥**

हे कुन्तीपुत्र! जो मनुष्य अन्तकालमा जुन-जुन भावलाई स्मरण गर्दै शरीर त्याग गर्दछ, तिनैलाई प्राप्त गर्दछ, किनकि ऊ सदैव त्यसै भावको चिन्तनादिमा अभ्यस्त रहेको हुन्छ॥ ६॥

* जसलाई शास्त्रमा 'सूत्रात्मा', 'हिरण्यगर्भ', 'प्रजापति', 'ब्रह्मा' आदि नामले सम्बोधन गरिएको छ।

**तस्मात् सर्वेषु कालेषु, मामनुस्मर युध्य च।**
**मय्यर्पित-मनो-बुद्धिर्, -मामेवैष्यस्य-संशयम् ॥ ७॥**

यसर्थ, हे अर्जुन! तिमी सबै समयमा निरन्तर मेरै स्मरण गर र युद्ध पनि गर। यसरी ममा अर्पण गरिएको मन-बुद्धिले युक्त भएर तिमीले निःसन्देह मलाई नै प्राप्त गर्ने छौ॥ ७॥

**अभ्यास-योग-युक्तेन, चेतसा नान्य-गामिना।**
**परमं पुरुषं दिव्यं, याति पार्थानु-चिन्तयन्॥ ८॥**

हे पार्थ! परमेश्वरको ध्यानको अभ्यासरूपी योगले युक्त, अन्यत्र नलागेको एकाग्रचित्तले निरन्तर चिन्तन गरिरहने मनुष्यले परम प्रकाशरूपी दिव्यपुरूष अर्थात् परमेश्वरलाई नै प्राप्त गर्दछ भन्ने नियम नै छ॥ ८॥

**कविं पुराण-मनु-शासितार-**
**मणो-रणीयां-समनु-स्मरेद्यः।**
**सर्वस्य धातार-मचिन्त्य-रूप-**
**मादित्य-वर्णं तमसः परस्तात्॥ ९॥**

जुन पुरूषले सर्वज्ञ, अनादि, सबैका नियन्ता*, सूक्ष्मभन्दा पनि अति सूक्ष्म, सबैलाई धारण-

* अन्तर्यामीरूपले सबै प्राणीहरूको शुभ अशुभ कर्म अनुसार शासन गर्ने।

पोषण गर्ने अचिन्त्यस्वरूप, सूर्यसमान नित्य चेतन प्रकाशरूप र अविद्यादेखि अति पर, शुद्ध सच्चिदानन्दघन परमेश्वरको स्मरण गर्दछ॥ ९ ॥

**प्रयाण-काले मनसा-चलेन**
**भक्त्या युक्तो योग-बलेन चैव।**
**भ्रुवोर्-मध्ये प्राण-मावेश्य सम्यक्**
**स तं परं पुरुष-मुपैति दिव्यम्॥ १० ॥**

त्यस्तो भक्तियुक्त पुरूषले अन्तकालमा पनि योगबलद्वारा भृकुटीका बीचमा प्राणलाई सहजरूपले स्थापित गर्दै, फेरि निश्चल मनद्वारा स्मरण गर्दै त्यस दिव्यरूप परमपुरूष परमात्मालाई नै प्राप्त गर्दछ॥ १० ॥

**यदक्षरं वेदविदो वदन्ति**
**विशन्ति यद्-यतयो वीतरागाः।**
**यदिच्छन्तो ब्रह्मचर्यं चरन्ति**
**तत्ते पदं सङ्ग्रहेण प्रवक्ष्ये॥ ११ ॥**

वेद जान्ने विद्वान्हरू जुन सच्चिदानन्दघनरूपी परमपदलाई अविनाशी ओंकार भन्दछन्, फेरि आसक्तिरहित यत्नशील महात्माजन जसमा प्रवेश गर्दछन्, र साधक जसलाई पाउन ब्रह्मचर्यको आचरण गर्दछन्, त्यो परमपद म तिमीलाई सङ्क्षेपमा बताउँछु॥ ११ ॥

**सर्व-द्वाराणि संयम्य, मनो हृदि निरुध्य च।**
**मूर्ध्न्या-धायात्मनः प्राण,-मास्थितो योग-धारणाम्॥ १२॥**
**ओमित्येका-क्षरं ब्रह्म, व्याहरन्-मामनुस्मरन्।**
**यः प्रयाति त्यजन् देहं, स याति परमां गतिम्॥ १३॥**

सबै इन्द्रियरूपी द्वारहरूलाई बन्द गरी, मनलाई हृदय-कमलमा स्थिर गरेर आफ्नो प्राणलाई शिरमा स्थित गरी योगको स्थितिमा एकाग्ररूपमा स्थित हुँदै 'ॐ' एक अक्षररूपी ब्रह्मको उच्चारण गरेर मलाई स्मरण गर्दै शरीर त्याग गर्नेले परमगति प्राप्त गर्छ॥ १२-१३॥

**अनन्य-चेताः सततं, यो मां स्मरति नित्यशः।**
**तस्याहं सुलभः पार्थ, नित्य-युक्तस्य योगिनः॥ १४॥**

हे अर्जुन! जो पुरूष ममा अनन्यचित्तले स्थित भएर सधैँ निरन्तर म पुरूषोत्तमको स्मरण गर्दछ, त्यस नित्य-निरन्तर ममा युक्त भएको योगीका लागि म सुलभ छु, अर्थात् उसका लागि सजिलै प्राप्त हुन सक्छु॥ १४॥

**मामुपेत्य पुनर्जन्म, दुःखालय-मशाश्वतम्।**
**नाप्नुवन्ति महात्मानः, संसिद्धिं परमां गताः॥ १५॥**

परमसिद्धि प्राप्त गरेका महात्माहरू मलाई प्राप्त

गरेपछि फेरि दुःखको घर तथा क्षणिक एवम् अनित्य मानिएको पुनर्जन्मलाई प्राप्त गर्दैनन् ॥ १५ ॥

**आब्रह्म-भुवनाल्-लोकाः, पुनरा-वर्तिनोऽर्जुन।**
**मामुपेत्य तु कौन्तेय, पुनर्जन्म न विद्यते ॥ १६ ॥**

हे अर्जुन! ब्रह्मलोकपर्यन्त सबै लोक पुनरावर्ती हुन्, परन्तु हे कुन्तीपुत्र! मलाई प्राप्त गरेपछि पुनर्जन्म हुँदैन, किनकि म कालातीत छु भने यी सबै ब्रह्मादिका लोक कालद्वारा सीमित हुनाले अनित्य छन् ॥ १६ ॥

**सहस्र-युग-पर्यन्त,-महर्-यद्-ब्रह्मणो विदुः।**
**रात्रिं युग-सहस्रान्तां, तेऽहो-रात्र-विदो जनाः ॥ १७ ॥**

ब्रह्माको जुन एक दिन छ, त्यो एक हजार चतुर्युगीसम्मको अवधि हुन्छ र एक रात पनि एक हजार चतुर्युगीसम्मको अवधि हुन्छ भन्ने जो पुरूष तत्त्वसाथ जान्दछन्, ती योगीजन कालको तत्त्वलाई जान्नेवाला हुन् ॥ १७ ॥

**अव्यक्ताद्-व्यक्तयः सर्वाः, प्रभवन्-त्यहरागमे।**
**रात्र्यागमे प्रलीयन्ते, तत्रैवा-व्यक्त-सञ्ज्ञके ॥ १८ ॥**

सम्पूर्ण चराचर भूतगण ब्रह्माको दिनको प्रवेशकालमा अव्यक्तद्वारा अर्थात् ब्रह्माको सूक्ष्म शरीरबाट उत्पन्न हुन्छन् र ब्रह्माको रातको प्रवेशकालमा

त्यस अव्यक्त नामक ब्रह्माको सूक्ष्म शरीरमा नै लीन हुन्छन्॥ १८॥

**भूत-ग्रामः स एवायं, भूत्वा भूत्वा प्रलीयते।**
**रात्र्यागमेऽवशः पार्थ, प्रभव-त्यहरागमे॥ १९॥**

हे पार्थ! त्यही यो भूतसमुदाय उत्पन्न भइभइकन प्रकृतिका वशमा परेर ब्रह्माको रातको प्रवेशकालमा लीन हुन्छ र दिनको प्रवेशकालमा पुनः उत्पन्न हुन्छ॥ १९॥

**परस्-तस्मात्तु भावोऽन्यो,-ऽव्यक्तोऽव्यक्तात् सनातनः।**
**यः स सर्वेषु भूतेषु, नश्यत्सु न विनश्यति॥ २०॥**

त्यस अव्यक्तभन्दा पनि अति पर अर्को अर्थात् विलक्षण जुन सनातन अव्यक्त भाव छ, त्यो परम दिव्य पुरूष सबै भूतहरू नष्ट भएपछि पनि नष्ट हुँदैन॥ २०॥

**अव्यक्तोऽक्षर इत्युक्तस्,-तमाहुः परमां गतिम्।**
**यं प्राप्य न निवर्तन्ते, तद्धाम परमं मम॥ २१॥**

जुन अव्यक्त 'अक्षर' नामले भनिएको छ, त्यही अक्षर नामक अव्यक्तभावलाई नै परमगति भनिन्छ अनि जुन सनातन अव्यक्तभावलाई प्राप्त गरेर मनुष्य फर्कंदैनन्, त्यही मेरो परम धाम हो॥ २१॥

**पुरुषः स परः पार्थ, भक्त्या लभ्यस्-त्वनन्यया।**
**यस्यान्तःस्थानि भूतानि, येन सर्वमिदं ततम्॥ २२॥**

हे पार्थ! जुन परमात्मा अन्तर्गत सबै भूत छन् र

जुन सच्चिदानन्दघन परमात्माद्वारा यो समस्त जगत् परिपूर्ण छ[१], त्यस सनातन अव्यक्त परम पुरूष त अनन्य[२] भक्तिद्वारा नै प्राप्त गर्न योग्य छ ॥ २२ ॥

**यत्र काले त्वनावृत्ति,-मावृत्तिं चैव योगिनः ।**
**प्रयाता यान्ति तं कालं, वक्ष्यामि भरतर्षभ ॥ २३ ॥**

हे अर्जुन! जुन समयमा[३] शरीर त्याग गरिसकेका योगीजनहरू फर्किएर नआउने गतिलाई र जुन समयमा गएकाहरू फर्किएर आउने गतिलाई नै प्राप्त गर्दछन्, म ती काललाई अर्थात् दुवै मार्गलाई बताउँछु ॥ २३ ॥

**अग्निर्-ज्योतिरहः शुक्लः, षण्-मासा उत्तरायणम् ।**
**तत्र प्रयाता गच्छन्ति, ब्रह्म ब्रह्मविदो जनाः ॥ २४ ॥**

जुन मार्गमा अग्निदेव, ज्योति, दिन, शुक्लपक्ष, छ महिनावाला उत्तरायण काल पर्दछन्, त्यस मार्गबाट शरीर त्यागेर गएका ब्रह्मवेत्ता योगीजनहरू ब्रह्मलोकलाई प्राप्त गर्दछन् ॥ २४ ॥

---

१. गीता अ० ९ श्लोक ४ मा हेर्नु होला।

२. गीता अ० ११ श्लोक ५५ मा इसका विस्तारपूर्वक बताइएको छ।

३. यहाँ काल शब्दलाई मार्ग सम्झनु पर्दछ, किनकि अघिल्लो श्लोकमा भगवान्ले यसको नाम 'सृति', 'गति' बताउनुभएको छ।

**धूमो रात्रिस्-तथा कृष्णः, षण्-मासा दक्षिणायनम्।**
**तत्र चान्द्रमसं ज्योतिर्, -योगी प्राप्य निवर्तते ॥ २५ ॥**

जुन मार्गमा धुँवा, रात्रि, कृष्णपक्ष, छ महिनावाला दक्षिणायन काल पर्दछन्, त्यस मार्गबाट शरीर त्यागेर गएका सकाम कर्म गर्ने योगीजनहरू चन्द्रमाको ज्योति प्राप्त गरेर स्वर्गमा पुण्यकर्मको फल भोगिसकेपछि फेरि फर्किएर आउँछन् ॥ २५ ॥

**शुक्ल-कृष्णे गती ह्येते, जगतः शाश्वते मते।**
**एकया यात्य-नावृत्ति, -मन्यया-वर्तते पुनः ॥ २६ ॥**

किनकि जगत्का यी दुई प्रकारका—शुक्ल र कृष्ण अर्थात् देवयान र पितृयान मार्ग सनातन मानिएका छन्। यिनमा एकद्वारा गएको[1]—जसद्वारा फर्किएर आउनुपर्दैन, त्यस परम गतिलाई प्राप्त हुन्छ र दोस्रोद्वारा गएको[2] पुनः फर्किएर आउँछ अर्थात् जन्ममृत्युलाई प्राप्त हुन्छ॥ २६ ॥

१. अर्थात् यसै अध्यायको श्लोक २४ अनुसार अर्चिमार्गबाट गएको योगी।

२. अर्थात् यसै अध्यायको श्लोक २५ अनुसार धूममार्गबाट गएको सकाम कर्मयोगी।

**नैते सृती पार्थ जानन्, योगी मुह्यति कश्चन।**
**तस्मात् सर्वेषु कालेषु, योग-युक्तो भवार्जुन॥ २७॥**

हे पार्थ! यसप्रकार, यी दुवै मार्गहरूलाई तत्त्वसाथ जानेर कुनै पनि योगी मोहित हुँदैन। यसकारण, हे अर्जुन! तिमी सबै कालमा समबुद्धिरूपी योगद्वारा युक्त होऊ, अर्थात् निरन्तर मेरो प्राप्तिका लागि साधना गर्नेवाला बन॥ २७॥

**वेदेषु यज्ञेषु तपःसु चैव**
**दानेषु यत् पुण्य-फलं प्रदिष्टम्।**
**अत्येति तत् सर्व-मिदं विदित्वा**
**योगी परं स्थान-मुपैति चाद्यम्॥ २८॥**

योगी पुरूषले यो रहस्यलाई तत्त्वपूर्वक जानेर वेदहरूलाई पढ्नाले तथा यज्ञ, तप र दानादि गर्नाले जो पुण्यफल बताइएको छ, निःसन्देह ती सबैलाई अतिक्रमण गर्दछ र सनातन परमपदलाई प्राप्त गर्दछ॥ २८॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, अक्षर-ब्रह्म-योगो नाम-अष्टमोऽध्यायः॥ ८॥



ॐश्रीपरमात्मने नमः

# अथ नवमोऽध्यायः

## श्रीभगवानुवाच

**इदं तु ते गुह्यतमं, प्रवक्ष्या-म्यनसूयवे।**
**ज्ञानं विज्ञान-सहितं, यज्-ज्ञात्वा मोक्ष्यसेऽशुभात्॥ १॥**

**श्रीभगवान्‌ले भन्नुभयो**–तिमीजस्ता दोषदृष्टि-रहित भक्तका लागि यस परमगोपनीय विज्ञानसहितको ज्ञानलाई पुनः राम्रोसित भन्छु, जसलाई जानेर तिमी यो दुःखरूपी संसारदेखि मुक्त हुनेछौ॥ १॥

**राजविद्या राजगुह्यं, पवित्र-मिद-मुत्तमम्।**
**प्रत्यक्षा-वगमं धर्म्यं, सुसुखं कर्तु-मव्ययम्॥ २॥**

यो विज्ञानसहितको ज्ञान सबै विद्याहरूको राजा, सबै गोपनीयहरूको पनि राजा, अति पवित्र, अति उत्तम, प्रत्यक्ष फलवाला, धर्मयुक्त, साधना गर्नमा निकै सुगम र अविनाशी छ॥ २॥

**अश्रद्-दधानाः पुरुषा, धर्मस्यास्य परन्-तप।**
**अप्राप्य मां निवर्तन्ते, मृत्यु-संसार-वर्त्मनि॥ ३॥**

हे परंतप! यस माथि बताइएका धर्ममा श्रद्धा नभएका पुरूष मलाई प्राप्त नगरी मृत्युरूपी संसारचक्रमा भ्रमण गरिरहन्छन्॥ ३॥

**मया तत-मिदं सर्वं, जगद-व्यक्त-मूर्तिना।**
**मत्स्थानि सर्व-भूतानि, न चाहं तेष्व-वस्थितः ॥ ४ ॥**

म निराकार परमात्माद्वारा यो सम्पूर्ण जगत् पानीसित बरफजस्तै परिपूर्ण छ र सम्पूर्ण भूत मेरै अन्तर्गत सङ्कल्पका आधारमा स्थित छन्, तर वास्तवमा म तिनमा स्थित छैन॥ ४॥

**न च मत्स्थानि भूतानि, पश्य मे योग-मैश्वरम्।**
**भूत-भृन्-न च भूतस्थो, ममात्मा भूत-भावनः ॥ ५ ॥**

ती सबै भूत ममा स्थित छैनन्, तर मेरो ईश्वरीय योगशक्तिलाई हेर, भूतहरूलाई धारण-पोषण गर्ने र भूतहरूलाई उत्पन्न गर्ने भएर पनि मेरो आत्मा वास्तवमा भूतहरूमा स्थित छैन॥ ५॥

**यथाकाश-स्थितो नित्यं, वायुः सर्वत्रगो महान्।**
**तथा सर्वाणि भूतानि, मत्स्थानी-त्युपधारय॥ ६ ॥**

जसरी आकाशबाट उत्पन्न सबैतिर विचरण गर्ने महान् वायु सधैं आकाशमै स्थित छ, त्यसैगरी मेरो सङ्कल्पद्वारा उत्पन्न हुनाले सम्पूर्ण भूत ममा नै स्थित छ भन्ने जान॥ ६॥

**सर्व-भूतानि कौन्तेय, प्रकृतिं यान्ति मामिकाम्।**
**कल्प-क्षये पुनस्-तानि, कल्पादौ विसृजाम्यहम्॥ ७ ॥**

हे अर्जुन! कल्पहरूको अन्तमा सबै भूतले मेरो प्रकृतिलाई प्राप्त गर्दछन् अर्थात् प्रकृतिमा लीन हुन्छन् र कल्पहरूको सुरूआतमा तिनलाई मैले पुनः रचना गर्दछु॥ ७॥

**प्रकृतिं स्वा-मवष्टभ्य, विसृजामि पुनः पुनः।**
**भूत-ग्राम-मिमं कृत्स्न, -मवशं प्रकृतेर्-वशात्॥ ८॥**

आफ्नो प्रकृतिलाई अङ्गीकार गरेर स्वभावको बलमा परतन्त्र भएका यी सम्पूर्ण भूतसमुदायलाई तिनका कर्मअनुसार पटक-पटक रचना गर्दछु॥ ८॥

**न च मां तानि कर्माणि, निबध्नन्ति धनञ्जय।**
**उदासीन-वदासीन, -मसक्तं तेषु कर्मसु॥ ९॥**

हे अर्जुन! ती कर्महरूमा आसक्तिरहित र उदासीन जस्तै* रहेको म परमात्मालाई ती कर्मले कहिल्यै पनि बाँध्दैनन्॥ ९॥

**मयाध्यक्षेण प्रकृतिः, सूयते सचराचरम्।**
**हेतुनानेन कौन्तेय, जगद्-विपरिवर्तते॥ १०॥**

हे अर्जुन! म अध्यक्ष रहेको त्रिगुणमयी प्रकृतिले चराचरसहित सम्पूर्ण जगत्‌को रचना गर्दछ, यसै कारणले नै यो संसारचक्र घुमिरहेको छ॥ १०॥

* जसका सम्पूर्ण कार्य कर्तृत्वभावबिना आफैँ सत्तामात्रले नै सम्पन्न हुन्छन्, त्यसको नाम 'उदासीनसमान' हो।

**अवजानन्ति मां मूढा, मानुषीं तनु-माश्रितम्।**
**परं भाव-मजानन्तो, मम भूत-महेश्वरम्॥ ११॥**

मेरो परमभाव[१]-लाई नजान्ने मूर्खहरूले मनुष्यको शरीर धारण गर्ने मलाई तुच्छ ठान्दछन्, अर्थात् संसारको उद्धारका लागि आफ्नो योगमायाले मनुष्यरूप धारण गरेकोले म परमेश्वरलाई सर्वसाधारण मानिस सम्झन्छन्॥ ११॥

**मोघाशा मोघ-कर्माणो, मोघज्ञाना विचेतसः।**
**राक्षसी-मासुरीं चैव, प्रकृतिं मोहिनीं श्रिताः॥ १२॥**

व्यर्थ आशा, व्यर्थ कर्म र निष्फल ज्ञान भएका विक्षिप्त अज्ञानीजनहरूले राक्षसी, आसुरी प्रकृतिको स्वभावलाई नै[२] धारण गरिरहन्छन्॥ १२॥

**महात्मानस्-तु मां पार्थ, दैवीं प्रकृति-माश्रिताः।**
**भजन्-त्यनन्य-मनसो, ज्ञात्वा भूतादि-मव्ययम्॥ १३॥**

तर हे कुन्तीपुत्र! दैवी प्रकृतिमा[३] आश्रित महात्माजनले मलाई सबै भूतादिको सनातनकारण

---

१. गीता अध्याय ७ श्लोक २४ मा हेर्नुस्।

२. जसलाई आसुरी सम्पदाका नामले सविस्तार भगवान्ले गीता अध्याय १६ श्लोक ४ तथा श्लोक ७ देखि २१ सम्म भन्नुभएको छ।

३. यसको सविस्तार वर्णनलाई गीता अध्याय १६ श्लोक १ देखि ३ सम्ममा हेर्नुस्।

र नाशरहित अक्षरस्वरूप जानेर अनन्यमनले निरन्तर मेरो भजन गर्दछन्॥ १३ ॥

**सततं कीर्तयन्तो मां, यतन्तश्-च दृढ-व्रताः।**
**नमस्यन्तश्-च मां भक्त्या, नित्य-युक्ता उपासते॥ १४॥**

ती दृढ निश्चयवाला भक्तजन निरन्तर मेरा नाम र गुणहरूको कीर्तन गर्दै तथा मेरो प्राप्तिका लागि यत्न गर्दै मलाई बारम्बार प्रणाम गर्दै सदा मेरो ध्यानमा युक्त भएर अनन्य प्रेमले मेरो उपासना गर्दछन्॥ १४॥

**ज्ञान-यज्ञेन चाप्यन्ये, यजन्तो मामुपासते।**
**एकत्वेन पृथक्त्वेन, बहुधा विश्वतो-मुखम्॥ १५॥**

अर्काथरी ज्ञानयोगीले म निर्गुण-निराकार ब्रह्मलाई ज्ञानयज्ञद्वारा अभिन्नभावले पूजन गर्दागर्दै पनि मेरो उपासना गर्दछन् भने अर्काथरी मानिस अनेक तरिकाले स्थित म विराट्स्वरूप परमेश्वरको पृथक् भावले उपासना गर्दछन्॥ १५॥

**अहं क्रतु-रहं यज्ञः, स्वधाह-मह-मौषधम्।**
**मन्त्रोऽह-मह-मेवाज्य,-महमग्नि-रहं हुतम्॥ १६॥**

क्रतु म हुँ, यज्ञ म हुँ, स्वधा म हुँ, औषधि

म हुँ, मन्त्र म हुँ, घिउ म हुँ, अग्नि म हुँ र हवनरूपी क्रिया पनि म नै हुँ॥ १६॥

**पिताहमस्य जगतो, माता धाता पितामहः।**
**वेद्यं पवित्र-मोङ्कार, ऋक्-साम-यजुरेव च॥ १७॥**

यो सम्पूर्ण जगत्‌को धाता अर्थात् धारणकर्ता एवं कर्मफलका दाता अनि पिता, माता र पितामह मै हुँ र जान्नयोग्य[१] पवित्र ओंकार तथा ऋग्वेद, सामवेद र यजुर्वेदमा पनि म नै छु॥ १७॥

**गतिर्-भर्ता प्रभुः साक्षी, निवासः शरणं सुहृत्।**
**प्रभवः प्रलयः स्थानं, निधानं बीज-मव्ययम्॥ १८॥**

प्राप्त हुनयोग्य परमधाम, भरणपोषण गर्ने, सबैका स्वामी, शुभाशुभ देख्ने, सबैका वासस्थान र शरण लिनयोग्य, प्रत्युपकारको चाहना नराखी हित गर्ने, उत्पत्ति-प्रलय-स्थिति सबैका आधार, निधान[२] र अविनाशी-कारण पनि मै हुँ॥ १८॥

**तपाम्यह-महं वर्षं, निगृह्णा-म्युत्-सृजामि च।**
**अमृतं चैव मृत्युश्-च, सदसच्चाह-मर्जुन॥ १९॥**

१. गीता अध्याय १३ श्लोक १२ देखि १७ सम्म हेर्नुस्।
२. प्रलयकालमा सम्पूर्ण भूत सूक्ष्मरूपमा जसमा लीन हुन्छन्, त्यसको नाम 'निधान' हो।

मैले नै सूर्यरूपमा ताप दिन्छु, वर्षालाई आकर्षित गर्दछु र त्यसलाई वर्षाउँछु। हे अर्जुन! म नै अमृत र मृत्यु हुँ, सत्-असत् पनि म नै हुँ॥ १९॥

**त्रैविद्या मां सोमपाः पूत-पापा**
**यज्ञैरिष्ट्वा स्वर्-गतिं प्रार्थयन्ते।**
**ते पुण्य-मासाद्य सुरेन्द्र-लोक-**
**मश्नन्ति दिव्यान्-दिवि देव-भोगान्॥ २०॥**

तीनै वेदहरूमा विधान गरिएका सकाम कर्महरूलाई गर्ने, सोमरस पान गर्ने, पापरहित पुरूष मलाई यज्ञमार्फत पूजेर स्वर्गलाई प्राप्त गर्न चाहन्छन्, ती पुरूषले आफ्ना पुण्यका फलरूपी स्वर्गलोकलाई प्राप्त* गरी स्वर्गमा दिव्य देवताका भोगहरूलाई भोग्दछन्॥ २०॥

**ते तं भुक्त्वा स्वर्ग-लोकं विशालं**
**क्षीणे पुण्ये मर्त्य-लोकं विशन्ति।**
**एवं त्रयी-धर्म-मनु-प्रपन्ना-**
**गतागतं काम-कामा लभन्ते॥ २१॥**

तिनले त्यस विशाल स्वर्गलोकलाई भोगेर

* यहाँ स्वर्गप्राप्तिको प्रतिबन्धक देवऋणरूपी पापबाट पवित्र हुने भन्ने सम्झनुपर्दछ।

पुण्य क्षीण भएपछि मृत्युलोक प्राप्त गर्दछन्। यसरी, स्वर्गका साधनरूपी तीनै वेदहरूमा बताइएका सकाम कर्मको शरणमा परेकाहरू विषयभोगकै कामना गरिरहने हुँदा उनीहरूले जानुआउनुरूपी आवागमनलाई प्राप्त गर्दछन्, अर्थात् पुण्यको प्रभावले स्वर्गमा जान्छन् र पुण्य क्षीण भएपछि मृत्युलोकमा आउँछन्॥ २१ ॥

**अनन्याश्-चिन्तयन्तो मां, ये जनाः पर्युपासते।**
**तेषां नित्याभि-युक्तानां, योग-क्षेमं वहाम्यहम्॥ २२ ॥**

जो अनन्यभावले ममा स्थित भई म परमेश्वरलाई निरन्तर चिन्तन गर्दै निष्कामभावले भज्दछन्, ती नित्य-निरन्तर मेरो चिन्तन गर्ने पुरूषहरूको योगक्षेम* म स्वयं वहन गरिदिन्छु॥ २२ ॥

**येऽप्यन्य-देवता भक्ता, यजन्ते श्रद्धयान्विताः।**
**तेऽपि मामेव कौन्तेय, यजन्त्य-विधि-पूर्वकम्॥ २३ ॥**

हे अर्जुन! यद्यपि श्रद्धाले युक्त जुन सकाम भक्तले अन्य देवताहरूलाई पूज्दछन्, तिनले पनि

* भगवत्स्वरूप प्राप्तिको नाम 'योग' हो भने भगवत्प्राप्तिका निमित्त गरिएका साधनाको रक्षाको नाम 'क्षेम' हो।

मलाई नै पूज्दछन्, तर तिनको त्यो पूजन अविधिपूर्वक अर्थात् अज्ञानपूर्वक भएको हुन्छ॥ २३॥

**अहं हि सर्व-यज्ञानां, भोक्ता च प्रभु-रेव च।**
**न तु मामभि-जानन्ति, तत्त्वेनातश्-च्यवन्ति ते॥ २४॥**

किनकि सम्पूर्ण यज्ञहरूका भोक्ता र स्वामी पनि म नै हुँ, तर तिनले म परमेश्वरलाई तत्त्वसाथ जान्दैनन्, यसैकारण तल झर्दछन्, अर्थात् पुनर्जन्मलाई प्राप्त गर्दछन्॥ २४॥

**यान्ति देव-व्रता देवान्, पितॄन्-यान्ति पितृ-व्रताः।**
**भूतानि यान्ति भूतेज्या, यान्ति मद्याजिनोऽपि माम्॥ २५॥**

देवताहरूलाई पूज्नेहरूले देवताहरूलाई प्राप्त गर्दछन्, पितृहरूलाई पूज्नेहरूले पितृलाई प्राप्त गर्दछन्, भूतहरूलाई पूज्नेहरूले भूतहरूलाई प्राप्त गर्दछन् र मलाई पूज्नेहरूले मलाई नै प्राप्त गर्दछन्। यसर्थ, मेरा भक्तको पुनर्जन्म हुँदैन*॥ २५॥

**पत्रं पुष्पं फलं तोयं, यो मे भक्त्या प्रयच्छति।**
**तदहं भक्त्युप-हृत,-मश्नामि प्रयतात्मनः॥ २६॥**

जुन भक्तले मेरालागि पत्र, पुष्प, फल, जल

* गीता अध्याय ८ को श्लोक १६ मा हेर्नुस्।

आदि सप्रेम अर्पण गर्दछ, त्यस शुद्धबुद्धि निष्कामप्रेमी भक्तले प्रेमपूर्वक अर्पण गरेका ती पत्रपुष्पादिलाई म स्वयं अत्यन्त प्रेमपूर्वक ग्रहण गर्दछु ॥ २६ ॥

**यत्-करोषि यद-श्नासि, यज्-जुहोषि ददासि यत्।**
**यत्-तपस्यसि कौन्तेय, तत्-कुरुष्व मदर्पणम् ॥ २७ ॥**

हे अर्जुन! तिमीले जुन कर्म गर्दछौ, जे खान्छौ, जे हवन गर्दछौ, जे दान दिन्छौ र जे तप गर्दछौ, त्यो सबै ममा अर्पण गर ॥ २७ ॥

**शुभाशुभ-फलैरेवं, मोक्ष्यसे कर्म-बन्धनैः।**
**सन्यास-योग-युक्तात्मा, विमुक्तो मामुपैष्यसि ॥ २८ ॥**

यसप्रकार, जसमा समस्त कर्महरू म भगवान्‌मा अर्पण हुन्छन्, त्यस्तो संन्यासरूप-योगले युक्त चित्त भएका तिमी शुभाशुभ फलरूपी कर्मबन्धनदेखि मुक्त हुनेछौ र तीबाट मुक्त भएर मलाई नै प्राप्त गर्नेछौ ॥ २८ ॥

**समोऽहं सर्व-भूतेषु, न मे द्वेष्योऽस्ति न प्रियः।**
**ये भजन्ति तु मां भक्त्या, मयि ते तेषु चाप्यहम् ॥ २९ ॥**

म सबै भूतहरूमा समभावले व्याप्त छु। न कोही मेरालागि अप्रिय छ, न प्रिय नै छ; तर जुन भक्तहरूले मलाई प्रेमपूर्वक भज्दछन्, ती ममा

छन् र म पनि तिनमा प्रत्यक्ष प्रकट* रहन्छु ॥ २९ ॥

**अपि चेत्-सुदुराचारो, भजते मामनन्य-भाक्।**
**साधुरेव स मन्तव्यः, सम्यग्-व्यवसितो हि सः ॥ ३० ॥**

यदि कुनै अतिशय दुराचारीले पनि अनन्यभावले मेरो भक्त भएर मलाई भज्दछ भने त्यसलाई साधु नै मान्नुपर्दछ, किनकि ऊ यथार्थ निश्चयवाला छ, अर्थात् उसले राम्रोसित निश्चय गरेको छ कि परमेश्वरलाई भज्नु बराबरी अन्य केही पनि छैन ॥ ३० ॥

**क्षिप्रं भवति धर्मात्मा, शश्वच्-छान्तिं निगच्छति।**
**कौन्तेय प्रति-जानीहि, न मे भक्तः प्रणश्यति ॥ ३१ ॥**

ऊ चाँडै नै धर्मात्मा हुन पुग्छ र नित्य रहने परम-शान्तिलाई प्राप्त गर्दछ। हे अर्जुन! तिमीले निश्चयपूर्वक सत्य जान कि मेरो भक्त नष्ट हुँदैन ॥ ३१ ॥

**मां हि पार्थ व्यपाश्रित्य, येऽपि स्युः पाप-योनयः।**
**स्त्रियो वैश्यास्-तथा शूद्रास्,-तेऽपि यान्ति परां गतिम् ॥ ३२ ॥**

हे अर्जुन! स्त्री, वैश्य, शूद्र तथा पापयोनि—

* जसरी सूक्ष्मरूपले सबैतिर व्याप्त भएर पनि अग्नि साधनहरूमार्फत प्रकट गर्नाले नै प्रत्यक्ष हुन्छ, त्यसैगरी सबैतिर स्थित भएर पनि परमेश्वर भक्तिका साथ भज्नेहरूकै अन्तःकरणमा प्रत्यक्षरूपले प्रकट हुन्छ।

चाण्डालादि जुनसुकै हुन सक्छ, तिनले पनि मेरो शरण परेर परमगतिलाई नै प्राप्त गर्दछन्॥ ३२॥

**किं पुनर्-ब्राह्मणाः पुण्या, भक्ता राजर्षयस्-तथा।**
**अनित्य-मसुखं लोक,-मिमं प्राप्य भजस्व माम्॥ ३३॥**

फेरि यसमा त भन्नु नै के छ, जुन पुण्यशील ब्राह्मण तथा राजर्षि भक्तजनले मेरो शरणमा परेर परमगतिलाई प्राप्त गर्दछन्। यसर्थ, तिमीले सुखरहित र क्षणभङ्गुर यस मनुष्य शरीरलाई प्राप्त गरेर निरन्तर मेरै भजन गर॥ ३३॥

**मन्मना भव मद्-भक्तो, मद्याजी मां नमस्कुरु।**
**मामेवैष्यसि युक्त्वैव,-मात्मानं मत्-परायणः॥ ३४॥**

ममा मन लाग्ने बन, मेरा भक्त होऊ, मेरो पूजन गर्नेवाला होऊ, मलाई प्रणाम गर। यसप्रकार, आत्मालाई ममा नियुक्त गरी मेरै परायण भएर तिमीले मलाई नै प्राप्त गर्दछौ॥ ३४॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, राजविद्या-राजगुह्य-योगो नाम नवमोऽध्यायः॥ ९॥



ॐश्रीपरमात्मने नमः

# अथ दशमोऽध्यायः

## श्रीभगवानुवाच

**भूय एव महाबाहो, शृणु मे परमं वचः।**
**यत्तेऽहं प्रीयमाणाय, वक्ष्यामि हित-काम्यया॥ १॥**

**श्रीभगवान्‌ले भन्नुभयो**—हे महाबाहो! फेरि पनि मेरो परमरहस्य र प्रभावयुक्त वचनलाई सुन, जुन म तिमी अतिशय प्रेम गर्नेलाई हितेच्छापूर्वक बताउँछु॥१॥

**न मे विदुः सुरगणाः, प्रभवं न महर्षयः।**
**अहमादिर्‌-हि देवानां, महर्षीणां च सर्वशः॥ २॥**

मेरो उत्पत्तिलाई अर्थात् लीलापूर्वक प्रकट हुनुलाई न देवताहरूले जान्दछन्, न महर्षिहरूले नै जान्दछन्, किनकि म सबै प्रकारले देवताहरू र महर्षिहरूको पनि आदिकारण हुँ॥ २॥

**यो मामज-मनादिं च, वेत्ति लोक-महेश्वरम्।**
**असम्मूढः स मर्त्येषु, सर्व-पापैः प्रमुच्यते॥ ३॥**

जसले मलाई अजन्मा अर्थात् वास्तवमा जन्म-रहित, अनादि* र लोकका महान् ईश्वर तत्त्वपूर्वक

* अनादि त्यसलाई भनिन्छ, जो आदिरहित होस् र सबैको कारण होस्।

जान्दछ, त्यो मनुष्यहरूमा ज्ञानवान् पुरूष सम्पूर्ण पापहरूदेखि मुक्त हुन्छ ॥ ३ ॥

**बुद्धिर्-ज्ञान-मसम्मोहः, क्षमा सत्यं दमः शमः ।**
**सुखं दुःखं भवोऽभावो, भयं चाभय-मेव च ॥ ४ ॥**
**अहिंसा समता तुष्टिस्,-तपो दानं यशोऽयशः ।**
**भवन्ति भावा भूतानां, मत्त एव पृथग्-विधाः ॥ ५ ॥**

निश्चय गर्ने शक्ति, यथार्थ ज्ञान, असम्मूढता, क्षमा, सत्य, इन्द्रियहरूलाई वशमा गर्नु, मनको निग्रह तथा सुखदुःख, उत्पत्ति-प्रलय र भय-अभय तथा अहिंसा, समता, सन्तोष, तप*, दान, कीर्ति र अपकीर्ति—यस्ता प्राणीहरूका विभिन्न प्रकारका भाव मबाटै उत्पन्न हुन्छन् ॥ ४-५ ॥

**महर्षयः सप्त पूर्वे, चत्वारो मनवस्-तथा ।**
**मद्-भावा मानसा जाता, येषां लोक इमाः प्रजाः ॥ ६ ॥**

सात जना महर्षि र तीभन्दा पहिलेका सनकादि चार मनु तथा स्वायम्भुव आदि चौध मनु-यी ममा भाव राख्ने सबै मेरा सङ्कल्पद्वारा नै उत्पन्न भएका हुन्, संसारमा जसका यी सम्पूर्ण प्रजाहरू हुन् ॥ ६ ॥

* स्वधर्मको आचरणले इन्द्रिय आदिलाई तपाएर शुद्ध गर्नुको नाम 'तपस्या' हो।

**एतां विभूतिं योगं च, मम यो वेत्ति तत्त्वतः।**
**सोऽविकम्पेन योगेन, युज्यते नात्र संशयः ॥ ७ ॥**

जुन पुरूष मेरो यस परम ऐश्वर्यरूपी विभूति र योगशक्तिलाई तत्त्वपूर्वक जान्दछ[१], ऊ निश्चय नै भक्तियोगद्वारा युक्त हुन्छ, यसमा कत्ति पनि संशय छैन ॥ ७ ॥

**अहं सर्वस्य प्रभवो, मत्तः सर्वं प्रवर्तते।**
**इति मत्वा भजन्ते मां, बुधा भाव-समन्विताः ॥ ८ ॥**

म वासुदेव नै सम्पूर्ण जगत्‌को उत्पत्तिको कारण हुँ, मबाट नै सबै सृष्टि सञ्चालित छ भन्ने यस्तो बुझेर श्रद्धा र भक्तिले युक्त बुद्धिमान् भक्तजनहरूले म परमेश्वरलाई नै निरन्तर भज्दछन्॥ ८ ॥

**मच्चित्ता मद्-गत-प्राणा, बोधयन्तः परस्परम्।**
**कथयन्तश्-च मां नित्यं, तुष्यन्ति च रमन्ति च ॥ ९ ॥**

निरन्तर ममा मन लगाउने र ममा नै प्राण अर्पण गर्ने[२] भक्तजनहरू मेरो भक्तिको चर्चाद्वारा आपसमा

---

१ जे-जति दृश्यमात्र संसार छ, त्यो सबै भगवान्‌को माया हो भने एक वासुदेव भगवान् नै सर्वत्र परिपूर्ण हुनुहुन्छ भनेर जान्नु नै तत्त्वसाथ जान्नु हो।

२ म वासुदेवका लागि नै जसले आफ्नो जीवन अर्पण गरिदिएका छन्, तिनको नाम 'मद्‌गतप्राणाः' हो।

मेरो प्रभावलाई जनाउँदै एवं गुण र प्रभावसहित मेरो कथन गर्दै निरन्तर सन्तुष्ट हुन्छन् एवं म वासुदेवमा नै निरन्तर रमण गर्दछन् ॥ ९ ॥

तेषां सतत-युक्तानां, भजतां प्रीति-पूर्वकम्।
ददामि बुद्धि-योगं तं, येन मामुपयान्ति ते ॥ १० ॥

ती निरन्तर मेरो ध्यान आदिमा लागेका र प्रेमपूर्वक भज्ने भक्तहरूलाई म त्यो तत्त्वज्ञानरूपी योग दिन्छु, जसका कारण तिनले मलाई नै प्राप्त गर्दछन् ॥ १० ॥

तेषा-मेवानु-कम्पार्थ,-मह-मज्ञानजं तमः।
नाशया-म्यात्म-भावस्थो, ज्ञान-दीपेन भास्वता ॥ ११ ॥

हे अर्जुन! उनीहरूमाथि अनुग्रह गर्नका लागि नै म स्वयं उनीहरूको अन्तःकरणमा स्थित भएर अज्ञानले उत्पन्न अन्धकारलाई प्रकाशमय तत्त्वज्ञानरूपी दीपकद्वारा नष्ट गरिदिन्छु ॥ ११ ॥

## अर्जुन उवाच

परं ब्रह्म परं धाम, पवित्रं परमं भवान्।
पुरुषं शाश्वतं दिव्य,-मादि-देव-मजं विभुम् ॥ १२ ॥
आहुस्-त्वा-मृषयः सर्वे, देवर्षिर्-नारदस्-तथा।
असितो देवलो व्यासः, स्वयं चैव ब्रवीषि मे ॥ १३ ॥

**अर्जुनले भने**—हजुर परम ब्रह्म, परम धाम र परम पवित्र हुनुहुन्छ, किनकि हजुरलाई सबै ऋषिगण सनातन दिव्य पुरूष एवं देवताका पनि आदिदेव, अजन्मा र सर्वव्यापी भन्दछन्। त्यस्तै, देवर्षि नारद तथा असित र देवल ऋषि तथा महर्षि व्यासले पनि त्यही कुरा भन्नुहुन्छ भने हजुरले पनि मलाई यही भन्नुहुन्छ॥ १२-१३॥

**सर्व-मेत-दृतं मन्ये, यन्-मां वदसि केशव।**
**न हि ते भगवन्-व्यक्तिं, विदुर्-देवा न दानवाः॥ १४॥**

हे केशव! मेरालागि हजुरले जे-जति भन्नुहुन्छ, सबैलाई मैले सत्य मान्दछु। हे भगवन्! हजुरको लीलामय* स्वरूपलाई न त दानवले जान्दछन्, न त देवताले नै जान्दछन्॥ १४॥

**स्वय-मेवात्म-नात्मानं, वेत्थ त्वं पुरुषोत्तम।**
**भूत-भावन भूतेश, देव-देव जगत्-पते॥ १५॥**

हे भूतहरूलाई उत्पन्न गर्नेवाला! हे भूतहरूका ईश्वर! हे देवताका पनि देव! हे जगत्का स्वामी! हे पुरूषोत्तम! हजुर स्वयं नै आफैँले आफूलाई जान्नुहुन्छ॥ १५॥

* गीता अध्याय ४ श्लोक ६ मा यसको विस्तार हेर्नुस्।

**वक्तु-मर्हस्य-शेषेण, दिव्या ह्यात्म-विभूतयः ।**
**याभिर्-विभूतिभिर्-लोका,-निमांस्त्वं व्याप्य तिष्ठसि ॥ १६ ॥**

यसर्थ, आफ्ना दिव्य विभूतिहरू जे जति छन् तिनीहरूलाई सम्पूर्णतासाथ बताउन हजुर नै समर्थ हुनुहुन्छ, जुन विभूतिहरूद्वारा हजुर यी सबै लोकहरूलाई व्याप्त गरेर स्थित हुनुहुन्छ ॥ १६ ॥

**कथं विद्यामहं योगिंस्,-त्वां सदा परि-चिन्तयन् ।**
**केषु केषु च भावेषु, चिन्त्योऽसि भगवन् मया ॥ १७ ॥**

हे योगेश्वर! म कसरी निरन्तर चिन्तन गर्दै हजुरलाई जानूँ, हे भगवन्! हजुर कुनकुन भावहरूमा मद्वारा चिन्तन गर्न योग्य हुनुहुन्छ? ॥ १७ ॥

**विस्तरे-णात्मनो योगं, विभूतिं च जनार्दन ।**
**भूयः कथय तृप्तिर्-हि, शृण्वतो नास्ति मेऽमृतम् ॥ १८ ॥**

हे जनार्दन! आफ्नो योगशक्ति र विभूतिलाई फेरि पनि विस्तारपूर्वक भन्नुहोस्, किनकि हजुरका अमृतमय वचनहरू जति सुने पनि मलाई कहिल्यै तृप्ति हुँदैन अर्थात् सुन्ने उत्कण्ठा भइरहन्छ ॥ १८ ॥

*श्रीभगवानुवाच*

**हन्त ते कथयिष्यामि, दिव्या ह्यात्म-विभूतयः ।**
**प्राधान्यतः कुरु-श्रेष्ठ, नास्त्यन्तो विस्तरस्य मे ॥ १९ ॥**

**श्रीभगवान्ले भन्नुभयो**—हे कुरूश्रेष्ठ! मेरा जुन दिव्य विभूतिहरू छन्, अब म तिम्रालागि महत्त्वका साथ तिनलाई भन्दछु, किनकि मेरो विभूतिका विस्तारको अन्त छैन॥ १९॥

**अहमात्मा गुडाकेश, सर्व-भूताशय-स्थितः।**
**अहमादिश्-च मध्यं च, भूताना-मन्त एव च॥ २०॥**

हे अर्जुन! म सबै भूतहरूका हृदयमा स्थित सबैको आत्मा हुँ भने सबै भूतहरूको आदि, मध्य र अन्त पनि म नै हुँ॥ २०॥

**आदित्याना-महं विष्णुर्,-ज्योतिषां रवि-रंशुमान्।**
**मरीचिर्-मरुता-मस्मि, नक्षत्राणा-महं शशी॥ २१॥**

म अदितिका बाह्र पुत्रहरूमा विष्णु र ज्योतिहरूमा किरणयुक्त सूर्य हुँ भने उनन्पचास वायुहरूको मुख्य तेज एवं नक्षत्रहरूका अधिपति चन्द्रमा हुँ॥ २१॥

**वेदानां सामवेदोऽस्मि, देवाना-मस्मि वासवः।**
**इन्द्रियाणां मनश्-चास्मि, भूताना-मस्मि चेतना॥ २२॥**

म वेदहरूमा सामवेद हुँ, देवताहरूमा इन्द्र हुँ, इन्द्रियहरूमा मन हुँ भने भूतप्राणीहरूको चेतना अर्थात् ज्ञानशक्ति हुँ॥ २२॥

**रुद्राणां शङ्करश्-चास्मि, वित्तेशो यक्ष-रक्षसाम्।**
**वसूनां पावकश्-चास्मि, मेरुः शिखरिणा-महम्॥ २३॥**

म एकादश रूद्रहरूमा शङ्कर हुँ र यक्ष र राक्षसहरूमा धनका स्वामी कुबेर हुँ। म आठ वसुहरूमा अग्नि हुँ भने शिखरयुक्त पर्वतहरूमा सुमेरू पर्वत हुँ॥ २३॥

**पुरोधसां च मुख्यं मां, विद्धि पार्थ बृहस्पतिम्।**
**सेनानीना-महं स्कन्दः, सरसा-मस्मि सागरः॥ २४॥**

पुरोहितहरूमा मलाई मुख्य अर्थात् वृहस्पति भन्ने जान। हे पार्थ! म सेनापतिहरूमा स्कन्द र जलाशयहरूमा समुद्र हुँ॥ २४॥

**महर्षीणां भृगु-रहं, गिरा-मस्म्येक-मक्षरम्।**
**यज्ञानां जप-यज्ञोऽस्मि, स्थावराणां हिमालयः॥ २५॥**

म महर्षिहरूमा भृगु र वाणीहरूमा एक अक्षर अर्थात् ओम्कार हुँ। सबै प्रकारका यज्ञमध्ये जपयज्ञ हुँ भने स्थिर रहनेहरूमा हिमालय पहाड हुँ॥ २५॥

**अश्वत्थः सर्व-वृक्षाणां, देवर्षीणां च नारदः।**
**गन्धर्वाणां चित्ररथः, सिद्धानां कपिलो मुनिः॥ २६॥**

म सबै वृक्षहरूमा पीपलको वृक्ष, देवर्षिहरूमा

नारदमुनि, गन्धर्वहरूमा चित्ररथ र सिद्धहरूमा कपिलमुनि हुँ॥ २६॥

**उच्चैःश्रवस-मश्वानां, विद्धि माममृतोद्-भवम्।**
**ऐरावतं गजेन्द्राणां, नराणां च नराधिपम्॥ २७॥**

घोडाहरूमा अमृतका साथ उत्पन्न हुने उच्चैःश्रवा नामक घोडा, श्रेष्ठ हात्तीहरूमा ऐरावत नामक हात्ती र मनुष्यहरूमा मलाई राजा भन्ने बुझ॥ २७॥

**आयुधाना-महं वज्रं, धेनूना-मस्मि कामधुक्।**
**प्रजनश्-चास्मि कन्दर्पः, सर्पाणा-मस्मि वासुकिः॥ २८॥**

म शस्त्रहरूमा वज्र र गाईहरूमा कामधेनु हुँ। शास्त्रोक्त रीतिपूर्वक सन्तान उत्पत्तिको हेतु कामदेव हुँ र सर्पहरूमा सर्पराज वासुकि हुँ॥ २८॥

**अनन्तश्-चास्मि नागानां, वरुणो यादसा-महम्।**
**पितॄणा-मर्यमा चास्मि, यमः संयमता-महम्॥ २९॥**

म नागहरूमा* शेषनाग र जलचरहरूमा तिनको अधिपति वरूण देवता हुँ तथा पितृहरूमा पितृराज अर्यमा र शासन गर्नेहरूमा यमराज हुँ॥ २९॥

**प्रह्लादश्-चास्मि दैत्यानां, कालः कलयता-महम्।**
**मृगाणां च मृगेन्द्रोऽहं, वैनतेयश्-च पक्षिणाम्॥ ३०॥**

---

* नाग र सर्प यी दुई प्रकारका सर्पका जाति हुन्।

म दैत्यहरूमा प्रह्लाद र गणना गर्नेहरूको समय* हुँ भने पशुहरूमा मृगराज सिंह र पक्षीहरूमा गरूड हुँ॥ ३०॥

**पवनः पवता-मस्मि, रामः शस्त्रभृता-महम्।**
**झषाणां मकरश्-चास्मि, स्त्रोतसा-मस्मि जाह्नवी॥ ३१॥**

म पवित्र तुल्याउनेहरूमा वायु र शस्त्रधारीहरूमा श्रीराम हूँ भने माछाहरूमा मकर र नदीहरूमा श्रीभागीरथी गङ्गाजी हुँ॥ ३१॥

**सर्गाणा-मादि-रन्तश्-च, मध्यं चैवाह-मर्जुन।**
**अध्यात्म-विद्या विद्यानां, वादः प्रवदता-महम्॥ ३२॥**

हे अर्जुन! सृष्टिहरूको आदि र अन्त तथा मध्य पनि म नै हुँ। म विद्याहरूमा अध्यात्मविद्या अर्थात् ब्रह्मविद्या र परस्पर विवाद गर्नेहरूको तत्त्व निर्णयार्थ गरिने तर्क हुँ॥ ३२॥

**अक्षराणा-मकारोऽस्मि, द्वन्द्वः सामासिकस्य च।**
**अहमेवा-क्षयः कालो, धाताहं विश्वतो-मुखः॥ ३३॥**

म अक्षरहरूमा अकार र समासहरूमा द्वन्द्व नामक समास हुँ। अक्षयकाल अर्थात् कालको पनि

* क्षण, घडी, दिन, पक्ष, मास आदि जो समय छन्, सबै म हुँ।

काल महाकाल हुँ र सबैतिर मुख भएको, विराट्स्वरूप, सबैको धारण-पोषण गर्ने पनि मै हुँ॥ ३३॥

**मृत्युः सर्व-हरश्-चाह,-मुद्भवश्-च भविष्यताम्।**
**कीर्तिः श्रीर्-वाक्-च नारीणां, स्मृतिर्-मेधा धृतिः क्षमा ॥ ३४॥**

म सबैको नाश गर्ने मृत्यु र उत्पन्न हुनेहरूको उत्पत्तिको कारण हुँ भने स्त्रीहरूमा कीर्ति*, श्री, वाक्, स्मृति, मेधा, धृति र क्षमा हुँ॥ ३४॥

**बृहत्-साम तथा साम्नां, गायत्री छन्दसा-महम्।**
**मासानां मार्गशीर्षोऽह,-मृतूनां कुसुमाकरः ॥ ३५॥**

गीत गाउन योग्य श्रुतिहरूमा म बृहत्साम र छन्दहरूमा गायत्री छन्द हुँ भने महिनाहरूमा मङ्सिर र ऋतुहरूमा वसन्त हुँ॥ ३५॥

**द्यूतं छलयता-मस्मि, तेजस्-तेजस्विना-महम्।**
**जयोऽस्मि व्यवसायोऽस्मि, सत्त्वं सत्त्व-वता-महम्॥ ३६॥**

म छल गर्नेहरूमा जुवा र प्रभावशाली पुरूषहरूको तेज हुँ। म जित्नेहरूको विजय हुँ, निश्चय गर्नेहरूको निश्चय र सात्त्विक पुरूषहरूको

* कीर्ति आदि यी सात देवताहरूका स्त्री र स्त्रीवाचक नाम भएका गुण पनि प्रसिद्ध छन्। यसर्थ, दुवै प्रकारले नै भगवान्का विभूतिहरू हुन्।

सात्त्विक भाव हुँ ॥ ३६ ॥

**वृष्णीनां वासुदेवोऽस्मि, पाण्डवानां धनञ्जयः।**
**मुनीना-मप्यहं व्यासः, कवीना-मुशना कविः ॥ ३७ ॥**

वृष्णिवंशीहरूमा* वासुदेव अर्थात् म स्वयं तिम्रो साथी, अर्थात् तिमी पाण्डवहरूमा धनञ्जय, मुनिहरूमा वेदव्यास र कविहरूमा शुक्राचार्य पनि म नै हुँ ॥ ३७ ॥

**दण्डो दमयता-मस्मि, नीति-रस्मि जिगीषताम्।**
**मौनं चैवास्मि गुह्यानां, ज्ञानं ज्ञान-वता-महम् ॥ ३८ ॥**

म दमन गर्नेहरूको दण्ड अर्थात् दमन गर्ने शक्ति हुँ, जित्ने इच्छा भएकाहरूको नीति हूँ, गोप्य राख्नयोग्य भावहरूको रक्षक मौन र ज्ञानवान्‌हरूको तत्त्वज्ञान पनि म नै हुँ ॥ ३८ ॥

**यच्चापि सर्व-भूतानां, बीजं तदह-मर्जुन।**
**न तदस्ति विना यत्-स्यान्,-मया भूतं चराचरम् ॥ ३९ ॥**

हे अर्जुन! जो सम्पूर्ण प्राणीहरूको उत्पत्तिको कारण छ, त्यो पनि म नै हुँ, किनकि यस्तो चर र अचर कुनै पनि भूत छैन, जो मदेखि

* यादवहरूकै अन्तर्गत एउटा वृष्णिवंश पनि थियो।

रहित होस् ॥ ३९ ॥

**नान्तोऽस्ति मम दिव्यानां, विभूतीनां परन्-तप ।**
**एष तूद्देशतः प्रोक्तो, विभूतेर्-विस्तरो मया ॥ ४० ॥**

हे परम्तप ! मेरा दिव्य विभूतिहरूको अन्त्य छैन। मैले आफ्ना विभूतिहरूको विस्तार त तिम्रालागि सङ्क्षेपमा बताएको हुँ ॥ ४० ॥

**यद्-यद्-विभूतिमत्-सत्त्वं, श्रीमदूर्जित-मेव वा ।**
**तत्तदेवा-वगच्छ त्वं, मम तेजोंऽश-सम्भवम् ॥ ४१ ॥**

जे-जति विभूतियुक्त अर्थात् ऐश्वर्ययुक्त, एवं कान्तियुक्त र शक्तियुक्त वस्तु छन्, तिनलाई तिमीले मेरै तेजका अंशबाट नै अभिव्यक्त भएको जान ॥ ४१ ॥

**अथवा बहुनैतेन, किं ज्ञातेन तवार्जुन ।**
**विष्टभ्याह-मिदं कृत्स्न,-मेकांशेन स्थितो जगत् ॥ ४२ ॥**

अथवा हे अर्जुन! यति धेरै जान्नुसित तिम्रो के प्रयोजन छ ? म यस सम्पूर्ण जगत्लाई आफ्नो योग-शक्तिको एउटा अंश मात्रले धारण गरेर बसेको छु ॥ ४२ ॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, विभूति-योगो नाम दशमोऽध्यायः ॥ १० ॥

~~~0~~~
~~~

ॐ श्रीपरमात्मने नमः

# अथ-एकादशोऽध्यायः

## अर्जुन उवाच

**मदनुग्रहाय परमं, गुह्य-मध्यात्म-सञ्ज्ञितम्।**
**यत्-त्वयोक्तं वचस्-तेन, मोहोऽयं विगतो मम॥ १॥**

**अर्जुनले भने**—म माथि अनुग्रह गर्नका निमित्त हजुरले जुन परम गोपनीय अध्यात्मविषयक वचन अर्थात् उपदेश दिनुभयो, त्यसबाट मेरो यो अज्ञान नष्ट भएको छ॥ १॥

**भवाप्ययौ हि भूतानां, श्रुतौ विस्तरशो मया।**
**त्वत्तः कमल-पत्राक्ष, माहात्म्य-मपि चाव्ययम्॥ २॥**

किनकि हे कमलनेत्र! मैले भूतहरूको उत्पत्ति र प्रलय हजुरबाट विस्तारपूर्वक सुनें र हजुरको अविनाशी माहात्म्य पनि सबै सुनिसकें॥ २॥

**एवमेतद्-यथात्थ त्व,-मात्मानं परमेश्वर।**
**द्रष्टु-मिच्छामि ते रूप,-मैश्वरं पुरुषोत्तम॥ ३॥**

हे परमेश्वर! हजुर आफूलाई जस्तो भन्नुहुन्छ, यो ठ्याक्कै उस्तै छ; तर हे पुरूषोत्तम! हजुरको ज्ञान, ऐश्वर्य, शक्ति, बल, वीर्य र तेजयुक्त ऐश्वर्यरूपलाई म प्रत्यक्ष देख्न चाहन्छु॥ ३॥

**मन्यसे यदि तच्छक्यं, मया द्रष्टु-मिति प्रभो।**
**योगेश्वर ततो मे त्वं, दर्शयात्मान-मव्ययम्॥ ४॥**

हे प्रभु*! यदि हजुरलाई मैले हजुरको रूप हेर्न सक्छु भन्ने लाग्छ भने, हे योगेश्वर! मलाई त्यस अविनाशी स्वरूपको दर्शन गराउनुहोस्॥ ४॥

### श्रीभगवानुवाच

**पश्य मे पार्थ रूपाणि, शतशोऽथ सहस्रशः।**
**नाना-विधानि दिव्यानि, नाना-वर्णाकृतीनि च॥ ५॥**

**श्रीभगवान्‌ले भन्नुभयो**—हे पार्थ! अब तिमी मेरा अनेक तरहका नाना वर्ण र आकृतिहरू भएका सयौँ अनि हजारौँ दिव्य रूपहरू हेर॥ ५॥

**पश्यादित्यान्-वसून्-रुद्रा, -नश्विनौ मरुतस्-तथा।**
**बहून्यदृष्ट-पूर्वाणि, पश्याश्चर्याणि भारत॥ ६॥**

हे भरतवंशी अर्जुन! तिमीले ममा आदित्यहरूलाई अर्थात् अदितिका बाह्र पुत्रहरूलाई, आठ वसुहरूलाई, एघार रूद्रहरूलाई, दुवै अश्विनीकुमारहरूलाई र उनन्पचास मरूद्‌गणहरूलाई हेर र अरू पनि धेरै पहिले कहिल्यै नदेखिएका आश्चर्यमय रूपहरूलाई हेर॥ ६॥

* उत्पत्ति, स्थिति, प्रलय तथा अन्तर्यामीरूपले शासन गर्ने हुनुभएका कारण भगवान्‌को नाम 'प्रभु' हो।

**इहैकस्थं जगत्-कृत्स्नं, पश्याद्य सचराचरम्।**
**मम देहे गुडाकेश,* यच्चान्यद्-द्रष्टु-मिच्छसि॥ ७॥**

हे अर्जुन! अब यही मेरो शरीरमा एकै ठाउँमा स्थित चराचरसहित सम्पूर्ण जगत्लाई हेर र अरू पनि जे-जति हेर्न चाहन्छौ, ती पनि हेर॥ ७॥

**न तु मां शक्यसे द्रष्टु,-मनेनैव स्व-चक्षुषा।**
**दिव्यं ददामि ते चक्षुः, पश्य मे योग-मैश्वरम्॥ ८॥**

तर तिमीले यी आफ्ना प्राकृतिक नेत्रहरूले निःसन्देह मलाई हेर्न सक्दैनौ, त्यसैले म तिमीलाई दिव्य अर्थात् अलौकिक चक्षु दिन्छु, यसैद्वारा तिमीले मेरो ईश्वरीय अलौकिक शक्तिलाई हेर॥ ८॥

*सञ्जय उवाच*

**एवमुक्त्वा ततो राजन्, महायोगेश्वरो हरिः।**
**दर्शयामास पार्थाय, परमं रूप-मैश्वरम्॥ ९॥**

**सञ्जयले भने—**हे राजन्! यति भनेर महायोगेश्वर तथा सबै पापलाई नाश गर्ने भगवान्ले अर्जुनलाई परम ऐश्वर्यले युक्त दिव्य-स्वरूप देखाउनुभयो॥ ९॥

* निद्रालाई जित्ने भएका हुनाले अर्जुनको नाम 'गुडाकेश' भएको थियो।

**अनेक-वक्त्र-नयन,-मनेकाद्भुत-दर्शनम् ।**
**अनेक-दिव्याभरणं, दिव्यानेको-द्यतायुधम् ॥ १० ॥**
**दिव्य-माल्याम्बर-धरं, दिव्य-गन्धानु-लेपनम् ।**
**सर्वाश्चर्य-मयं देव,-मनन्तं विश्वतो-मुखम् ॥ ११ ॥**

अनेक मुख र नेत्रहरूले युक्त, अनेक अद्भुत दर्शनवाला, प्रशस्त दिव्य भूषणहरूले युक्त र अनेक दिव्य शस्त्रहरूलाई हातमा लिनुभएका, दिव्य माला र वस्त्रहरूलाई धारण गर्नुभएका एवं दिव्य गन्धको लेप सारा शरीरमा घस्नुभएका, सबै प्रकारका आश्चर्यहरूले युक्त, सीमारहित सबैतिर मुख गर्नुभएका विराट्स्वरूप परमदेव परमेश्वरलाई अर्जुनले देखे ॥ १०-११ ॥

**दिवि सूर्य-सहस्रस्य, भवेद्-युग-पदुत्थिता ।**
**यदि भाः सदृशी सा स्याद्,-भासस्-तस्य महात्मनः ॥ १२ ॥**

आकाशमा हजार सूर्य एकैसाथ उदय हुँदा जुन प्रकाश उत्पन्न हुन्छ, त्यो पनि त्यस विश्वरूप परमात्माको प्रकाशसमान सायदै होला ॥ १२ ॥

**तत्रैकस्थं जगत्-कृत्स्नं, प्रविभक्त-मनेकधा ।**
**अपश्यद्-देव-देवस्य, शरीरे पाण्डवस्-तदा ॥ १३ ॥**

पाण्डुपुत्र अर्जुनले त्यतिबेला अनेक प्रकारले विभक्त अर्थात् पृथक्-पृथक् सम्पूर्ण जगत्लाई

देवताहरूका देव श्रीकृष्ण भगवान्‌को शरीरमा एकै ठाउँमा स्थित भएको देखे॥ १३॥

**ततः स विस्मयाविष्टो, हृष्ट-रोमा धनञ्जयः।**
**प्रणम्य शिरसा देवं, कृताञ्जलि-रभाषत॥ १४॥**

त्यसपछि, आश्चर्यले चकित भई रोमाञ्चित भएका ती अर्जुनले प्रकाशमय विश्वरूप परमात्मालाई श्रद्धाभक्तिले शिरले प्रणाम गरी हात जोडेर विन्ती गर्न लागे॥ १४॥

*अर्जुन उवाच*

**पश्यामि देवांस्-तव देव देहे**
**सर्वांस्-तथा भूत-विशेष-सङ्घान्।**
**ब्रह्माण-मीशं कमलासनस्थ-**
**मृषींश्च सर्वा-नुरगांश्च दिव्यान्॥ १५॥**

**अर्जुनले भने**—हे देव! मैले हजुरको शरीरमा सम्पूर्ण देवताहरूलाई तथा अनेक भूतका समुदायलाई, कमलको आसनमा विराजित ब्रह्मलाई, महादेवलाई, सम्पूर्ण ऋषिहरूलाई र दिव्य सर्पहरूलाई पनि देख्दै छु॥ १५॥

**अनेक-बाहूदर-वक्त्र-नेत्रं**
**पश्यामि त्वां सर्वतोऽनन्त-रूपम्।**
**नान्तं न मध्यं न पुनस्-तवादिं**
**पश्यामि विश्वेश्वर विश्व-रूप॥ १६॥**

हे सम्पूर्ण विश्वका स्वामी! हजुरलाई अनेक हात, पेट, मुख र आँखाहरूले युक्त तथा सबैतिरबाट अनन्तरूपवाला देख्दछु। हे विश्वरूप! मैले हजुरको न त अन्तलाई देख्दछु, न मध्य, न त आदिलाई नै ॥ १६ ॥

**किरीटिनं गदिनं चक्रिणं च**
**तेजो-राशिं सर्वतो दीप्ति-मन्तम्।**
**पश्यामि त्वां दुर्-निरीक्ष्यं समन्ताद्-**
**दीप्ता-नलार्क-द्युतिमप्रमेयम् ॥ १७ ॥**

हजुरलाई मैले मुकुटयुक्त, गदायुक्त र चक्रयुक्त तथा सबैतिरबाट प्रकाशमान तेजका पुञ्ज, प्रज्वलित अग्नि र सूर्यसमान ज्योतियुक्त, कठिनतासाथ हेर्न सकिने र सबैतिरबाट अप्रमेयस्वरूपलाई देख्दछु॥ १७ ॥

**त्वमक्षरं परमं वेदितव्यं**
**त्वमस्य विश्वस्य परं निधानम्।**
**त्वमव्ययः शाश्वत-धर्म-गोप्ता**
**सनातनस्-त्वं पुरुषो मतो मे॥ १८ ॥**

हजुर नै जान्नयोग्य परम अक्षर अर्थात् परब्रह्म परमात्मा हुनुहुन्छ, हजुर नै यस जगत्का परम आश्रय हुनुहुन्छ, हजुर नै आदि धर्मका रक्षक हुनुहुन्छ र हजुर नै अविनाशी सनातन पुरूष हुनुहुन्छ भन्ने मेरो मत छ॥ १८ ॥

अनादि-मध्यान्त-मनन्त-वीर्य-
मनन्त-बाहुं शशि-सूर्य-नेत्रम्।
पश्यामि त्वां दीप्त-हुताश-वक्त्रं
स्व-तेजसा विश्व-मिदं तपन्तम्॥ १९॥

हजुरलाई आदि, अन्त र मध्यदेखि रहित, अनन्त सामर्थ्यले युक्त, अनन्त भुजा भएका, चन्द्रसूर्यरूपी आँखा भएका, प्रज्वलित अग्निरूपी मुख भएका र आफ्नो तेजले यस जगत्लाई सन्तप्त गरिरहनुभएका देख्दछु॥ १९॥

द्यावा-पृथिव्यो-रिद-मन्तरं हि
व्याप्तं त्वयैकेन दिशश्-च सर्वाः।
दृष्ट्वाद्भुतं रूप-मुग्रं तवेदं
लोक-त्रयं प्रव्यथितं महात्मन्॥ २०॥

हे महात्मन्! यो स्वर्ग र पृथ्वी बीचको सम्पूर्ण आकाश र सबै दिशाहरू एकमात्र हजुरबाट नै परिपूर्ण छन् भने हजुरका यी अलौकिक र भयङ्कर रूपलाई देखेर तीनै लोक अत्यन्त व्यथित भइरहेका छन्॥ २०॥

अमी हि त्वां सुर-सङ्घा विशन्ति
केचिद्-भीताः प्राञ्जलयो गृणन्ति।
स्वस्ती-त्युक्त्वा महर्षि-सिद्ध-सङ्घाः
स्तुवन्ति त्वां स्तुतिभिः पुष्कलाभिः॥ २१॥

तिनै देवताका समूह हजुरमा प्रवेश गर्दछन् भने केही भयभीत भई हात जोडेर हजुरका नाम र गुणहरूको उच्चारण गर्दछन्। साथै, महर्षि र सिद्धरूपको समुदायले 'कल्याण होस्' भन्दै सर्वोत्तम स्तोत्रले हजुरको स्तुति गर्दछन्॥ २१॥

**रुद्रादित्या वसवो ये च साध्या**
**विश्वेऽश्विनौ मरुतश्-चोष्मपाश्-च।**
**गन्धर्व-यक्षा-सुर-सिद्ध-सङ्घा**
**वीक्षन्ते त्वां विस्मिताश्-चैव सर्वे॥ २२॥**

जो एघार रूद्र र बाह्र आदित्य तथा आठ वसु, साध्यगण, विश्वेदेव, अश्विनीकुमार तथा मरूद्गण र पितृहरूको समुदाय तथा गन्धर्व, यक्ष, राक्षस र सिद्धहरूका समुदाय छन्, ती सबै आश्चर्यचकित हुँदै हजुरलाई हेर्दैछन्॥ २२॥

**रूपं महत्ते बहु-वक्त्र-नेत्रं**
**महाबाहो बहु-बाहूरु-पादम्।**
**बहूदरं बहु-दंष्ट्रा-करालं**
**दृष्ट्वा लोकाः प्रव्यथितास्-तथाहम्॥ २३॥**

हे महाबाहो! हजुरका धेरै मुख र नेत्रहरू, धेरै हात, जाँघ र पाउ, धेरै पेट र धेरै नै दाह्राका कारण विकराल रूपलाई देखेर सबै लोक व्याकुल भैरहेका छन् र म पनि अति व्याकुल भइरहेको छु॥ २३॥

**नभः स्पृशं दीप्त-मनेक-वर्णं**
**व्यात्ताननं दीप्त-विशाल-नेत्रम्।**
**दृष्ट्वा हि त्वां प्रव्यथितान्त-रात्मा**
**धृतिं न विन्दामि शमं च विष्णो॥ २४॥**

किनकि हे विष्णो! आकाशलाई स्पर्श गर्ने, देदीप्यमान, अनेक वर्णले युक्त तथा फैलिएको मुख र प्रकाशमान विशाल नेत्रहरूले युक्त हजुरलाई देखेर भयभीत अन्तःकरणसहितको मैले धैर्य र शान्ति अनुभव गर्न सकिरहेको छैन॥ २४॥

**दंष्ट्रा-करालानि च ते मुखानि**
**दृष्ट्वैव कालानल-सन्निभानि।**
**दिशो न जाने न लभे च शर्म**
**प्रसीद देवेश जगन्निवास॥ २५॥**

भयङ्कर दाह्राका कारण विकराल प्रलयकालको अग्निजस्तै प्रज्वलित हजुरको मुखलाई देखेर म दिशाहरू पनि चिन्दिनँ र सुख पनि पाउँदिनँ। यसर्थ, हे देवेश! हे जगन्निवास! हजुर प्रसन्न हुनुहोस्॥ २५॥

**अमी च त्वां धृतराष्ट्रस्य पुत्राः**
**सर्वे सहैवा-वनिपाल-सङ्घैः।**
**भीष्मो द्रोणः सूत-पुत्रस्-तथासौ**
**सहास्मदीयै-रपि योध-मुख्यैः॥ २६॥**

**वक्त्राणि ते त्वरमाणा विशन्ति**
**दंष्ट्रा-करालानि भयानकानि।**
**केचिद्-विलग्ना दशनान्तरेषु**
**सन्दृश्यन्ते चूर्णितै-रुत्तमाङ्गैः ॥ २७ ॥**

ती सबै धृतराष्ट्रका पुत्र, राजाहरूका समुदाय-सहित हजुरमा प्रवेश गरिरहेका छन्। त्यस्तै, भीष्मपितामह, द्रोणाचार्य, कर्ण र हाम्रो पक्षका पनि प्रधान योद्धासहित सबका सब हजुरको विकराल भयानक दाह्रायुक्त मुखमा बडो वेगले दौडँदै प्रवेश गरिरहेका छन् भने कति चूर्ण भएका शिरहरूसहित हजुरका दाँतका बीचमा परेका देखिन्छन् ॥ २६-२७ ॥

**यथा नदीनां बहवोऽम्बु-वेगाः**
**समुद्र-मेवाभि-मुखा द्रवन्ति।**
**तथा तवामी नर-लोक-वीरा**
**विशन्ति वक्त्राण्यभि-विज्वलन्ति ॥ २८ ॥**

जसरी नदीहरूका प्रशस्त जलका प्रवाहहरू स्वाभाविकरूपमा समुद्रकै मुखतिर दौडन्छन्, अर्थात् समुद्रमा प्रवेश गर्दछन्, त्यसैगरी ती नरलोकका वीर पनि हजुरका प्रज्वलित मुखहरूमा प्रवेश गर्दै छन् ॥ २८ ॥

**यथा प्रदीप्तं ज्वलनं पतङ्गा**
**विशन्ति नाशाय समृद्ध-वेगाः।**

**तथैव नाशाय विशन्ति लोकास्-**
**तवापि वक्त्राणि समृद्ध-वेगाः ॥ २९ ॥**

जसरी पुतलीहरू मोहवश नष्ट हुनका लागि प्रज्वलित अग्निमा अतिवेगले दौडँदै प्रवेश गर्दछन्, त्यसैगरी ती सबै जना पनि आफ्नो नाशका लागि हजुरका मुखमा अतिवेगले दौडँदै प्रवेश गर्दै छन्॥ २९ ॥

**लेलिह्यसे ग्रसमानः समन्ताल्-**
**लोकान्-समग्रान् वदनैर्-ज्वलद्भिः ।**
**तेजोभि-रापूर्य जगत्-समग्रं**
**भासस्-तवोग्राः प्रतपन्ति विष्णो ॥ ३० ॥**

हजुरले ती सम्पूर्ण लोकहरूलाई प्रज्वलित मुखले गाँस बनाएर सबैतिरबाट बारम्बार चाटिरहनुभएको छ। हे विष्णु! हजुरको उग्र प्रकाशले सम्पूर्ण जगत्लाई तेजका माध्यमले परिपूर्ण तुल्याई सन्तप्त गर्दै छ॥ ३० ॥

**आख्याहि मे को भवानुग्र-रूपो**
**नमोऽस्तु ते देव-वर प्रसीद।**
**विज्ञातु-मिच्छामि भवन्तमाद्यं**
**न हि प्रजानामि तव प्रवृत्तिम् ॥ ३१ ॥**

मलाई कृपा गरेर बताउनुहोस् कि उग्ररूपवाला हजुर को हुनुहुन्छ ? हे देवताहरूमा श्रेष्ठ! हजुरलाई नमस्कार छ! हजुर प्रसन्न हुनुहोस्। आदिपुरूष

हजुरलाई म विशेषरूपले जान्न चाहन्छु, किनकि म हजुरको प्रवृत्तिलाई जान्दिनँ॥ ३१ ॥

श्रीभगवानुवाच

कालोऽस्मि लोक-क्षयकृत्-प्रवृद्धो
लोकान् समाहर्तु-मिह प्रवृत्तः।
ऋतेऽपि त्वां न भविष्यन्ति सर्वे
येऽवस्थिताः प्रत्यनीकेषु योधाः॥ ३२ ॥

**श्रीभगवान्‌ले भन्नुभयो**—म लोकको नाश गर्न बढेको महाकाल हुँ। यतिबेला यी लोकहरूलाई नष्ट गर्नका लागि प्रवृत्त भएको छु। जो प्रतिपक्षीहरूका सेनामा स्थित योद्धाहरू छन्, ती सबै तिमीबिना पनि रहँदैनन्, अर्थात् तिमीले युद्ध नगरे पनि यी सबैको नाश हुने छ॥ ३२ ॥

तस्मात्त्व-मुत्तिष्ठ यशो लभस्व
जित्वा शत्रून् भुङ्क्ष्व राज्यं समृद्धम्।
मयैवैते निहताः पूर्वमेव
निमित्त-मात्रं भव सव्यसाचिन्॥ ३३ ॥

अतएव तिमी उठ! यश प्राप्त गरी शत्रुहरूलाई जितेर धनधान्यले सम्पन्न राज्यलाई भोग। यी सबै शूरवीर पहिल्यै मबाट मारिइसकेका छन्। हे

सव्यसाचिन्!* तिमी त केवल निमित्त मात्र बन॥ ३३॥

**द्रोणं च भीष्मं च जयद्रथं च**
**कर्णं तथान्या-नपि योधवीरान्।**
**मया हतांस्-त्वं जहि मा व्यथिष्ठा**
**युध्यस्व जेतासि रणे सपत्नान्॥ ३४॥**

द्रोणाचार्य र भीष्मपितामह तथा जयद्रथ र कर्ण तथा अरू पनि धेरै मद्वारा मारिएका शूरवीर योद्धाहरूलाई तिमी मार। नडराऊ। निःसन्देह तिमीले युद्धमा वैरीहरूलाई जित्ने छौ, त्यसैले युद्ध गर॥ ३४॥

*सञ्जय उवाच*

**एतच्छ्रुत्वा वचनं केशवस्य**
**कृताञ्जलिर्-वेपमानः किरीटी।**
**नमस्-कृत्वा भूय एवाह कृष्णं**
**सगद्गदं भीतभीतः प्रणम्य॥ ३५॥**

**सञ्जयले भने**– हे राजन् ! केशव भगवान्का यी वचन सुनेपछि मुकुटधारी अर्जुन हात जोडेर काँम्दै नमस्कार गरी अत्यन्त भयभीत हुँदै प्रणाम गरेर भगवान् श्रीकृष्णका अगाडि गद्गद वाणीले बोले— ॥ ३५॥

* बायाँ हातले पनि बाण चलाउने अभ्यास भएका हुनाले अर्जुनको नाम 'सव्यसाची' भएको थियो।

## अर्जुन उवाच

**स्थाने हृषीकेश तव प्रकीर्त्या**
**जगत्-प्रहृष्य-त्यनुरज्यते च।**
**रक्षांसि भीतानि दिशो द्रवन्ति**
**सर्वे नमस्यन्ति च सिद्ध-सङ्घाः॥ ३६॥**

**अर्जुनले भने**—हे अन्तर्यामी! हजुरका नाम, गुण र प्रभावको कीर्तनका कारण जगत् अति हर्षित भइरहेको छ भने अनुराग पनि प्राप्त भइरहेको छ, भयभीत राक्षसहरू चारै दिशातिर भागिरहेका छन् र सबै सिद्धगणहरूका समुदायले नमस्कार गरिरहेका छन्॥ ३६॥

**कस्माच्च ते न नमेरन्-महात्मन्**
**गरीयसे ब्रह्मणोऽप्यादि-कर्त्रे।**
**अनन्त देवेश जगन्निवास**
**त्वमक्षरं सदसत्-तत्-परं यत्॥ ३७॥**

हे महात्मन्! ब्रह्माका पनि आदिकर्ता र सबैभन्दा ठूला हजुरका लागि ती कसरी नमस्कार नगरून्, हे अनन्त! हे देवेश! हे जगन्निवास! जुन सत्, असत् र तीभन्दा पर अक्षर अर्थात् सच्चिदानन्दघन ब्रह्म छ, त्यो हजुर नै हुनुहुन्छ॥ ३७॥

**त्वमादि-देवः पुरुषः पुराणस्-**
**त्वमस्य विश्वस्य परं निधानम्।**

वेत्तासि वेद्यं च परं च धाम
त्वया ततं विश्व-मनन्त-रूप॥ ३८॥

हजुर आदिदेव तथा सनातन पुरूष हुनुहुन्छ, हजुर यस जगत्‌का परम आश्रय र जान्नेवाला अनि परमधाम हुनुहुन्छ। हे अनन्तरूप! हजुरबाट यो सबै जगत् व्याप्त अर्थात् परिपूर्ण छ॥ ३८॥

वायुर्-यमोऽग्निर्-वरुणः शशाङ्कः
प्रजापतिस्-त्वं प्रपितामहश्-च।
नमो नमस्तेऽस्तु सहस्त्र-कृत्वः
पुनश्च भूयोऽपि नमो नमस्ते॥ ३९॥

हजुर वायु, यमराज, अग्नि, वरूण, चन्द्रमा, प्रजाका स्वामी ब्रह्मा र ब्रह्माका पनि पिता हुनुहुन्छ। हजुरलाई हजारौँ पटक नमस्कार! नमस्कार छ!! हजुरलाई फेरि पनि बारम्बार नमस्कार! नमस्कार!॥ ३९॥

नमः पुरस्ता-दथ पृष्ठतस्-ते
नमोऽस्तु ते सर्वत एव सर्व।
अनन्त-वीर्यामित-विक्रमस्-त्वं
सर्वं समाप्नोषि ततोऽसि सर्वः॥ ४०॥

हे अनन्त सामर्थ्यवाला! हजुरलाई अगाडि र पछाडिबाट पनि नमस्कार छ! हे सर्वात्मन्! हजुरका लागि सबैतिरबाट नै नमस्कार छ! किनकि अनन्त पराक्रमशाली हजुरले समस्त संसारलाई व्याप्त गर्नुभएको

छ, यसर्थ हजुर नै सर्वरूप हुनुहुन्छ ॥ ४० ॥

सखेति मत्वा प्रसभं यदुक्तं
हे कृष्ण हे यादव हे सखेति।
अजानता महिमानं तवेदं
मया प्रमादात् प्रणयेन वापि ॥ ४१ ॥
यच्चाव-हासार्थ-मसत्-कृतोऽसि
विहार-शय्यासन-भोजनेषु ।
एकोऽथवाप्य-च्युत तत्-समक्षं
तत्-क्षामये त्वा-मह-मप्रमेयम् ॥ ४२ ॥

हजुरको यो प्रभावलाई नजान्दा हजुर मेरा साथी हुनुहुन्छ भन्ने मानेर प्रेमपूर्वक अथवा प्रमादपूर्वक पनि मैले 'हे कृष्ण!', 'हे यादव!', 'हे सखे!' यसरी जे पनि विचार नै नगरी भनेको छु। हे अच्युत! हजुर विनोदका लागि, विहार, शय्या, आसन र भोजनादिमा एक्लै अथवा ती साथीहरूका अगाडि पनि मद्वारा अपमानित हुनुभएको छु, ती सबै अपराध अप्रमेयस्वरूप अर्थात् अचिन्त्य प्रभाववाला हजुरबाट क्षमा मागन चाहन्छु ॥ ४१-४२ ॥

पितासि लोकस्य चराचरस्य
त्वमस्य पूज्यश्च गुरुर्-गरीयान्।
न त्वत्-समोऽस्त्य-भ्यधिकः कुतोऽन्यो
लोकत्रयेऽप्य-प्रतिम-प्रभाव ॥ ४३ ॥

हजुर नै यस चराचर जगत्‌का पिता, सबैका महान् गुरू तथा अत्यन्त पूजनीय हुनुहुन्छ। हे अनुपम प्रभावशाली ! तीनै लोकहरूमा हजुरसमान अर्को कुनै पनि छैन भने हजुरभन्दा बढी त कसरी होला र ? ॥ ४३ ॥

**तस्मात् प्रणम्य प्रणिधाय कायं**
**प्रसादये त्वा-महमीश-मीड्यम्।**
**पितेव पुत्रस्य सखेव सख्युः**
**प्रियः प्रियायार्-हसि देव सोढुम् ॥ ४४ ॥**

अतएव हे प्रभो ! म आफ्नो शरीर झुकाएर साष्टाङ्ग प्रणाम गर्दै स्तुति गर्न योग्य परमेश्वर हजुरको प्रसन्नताको लागि प्रार्थना गर्दछु। हे देव ! पिताले जसरी पुत्रको, साथीले जसरी साथीको र पतिले जसरी प्रियतमा पत्नीको अपराध गर्दछन्, त्यसैगरी हजुर पनि मद्वारा गरिएका गल्ती र अपराधहरू सहन गर्न समर्थ हुनुहुन्छ ॥ ४४ ॥

**अदृष्ट-पूर्वं हृषितोऽस्मि दृष्ट्वा**
**भयेन च प्रव्यथितं मनो मे।**
**तदेव मे दर्शय देव-रूपं**
**प्रसीद देवेश जगन्निवास ॥ ४५ ॥**

पहिला नदेखेको हजुरको यो आश्चर्यमय रूपलाई देखेर म हर्षित भइरहेको छु, मेरो मन भयले अति व्याकुल भइरहेको छ। यसर्थ, हजुरले त्यो आफ्नो

चतुर्भुजी विष्णुरूप नै मेरालागि देखाउनुहोस्। हे देवेश! हे जगन्निवास! प्रसन्न हुनुहोस्॥ ४५॥

**किरीटिनं गदिनं चक्र-हस्त-**
**मिच्छामि त्वां द्रष्टु-महं तथैव।**
**तेनैव रूपेण चतुर्भुजेन**
**सहस्त्र-बाहो भव विश्व-मूर्ते॥ ४६॥**

त्यसैगरी म हजुरलाई मुकुट धारण गदा र चक्र हातमा लिनुभएको देख्न चाहन्छु। यसर्थ, हे विश्वरूप! हे सहस्त्रबाहो! हजुर त्यही चतुर्भुजरूपमा प्रकट हुनुहोस्॥ ४६॥

*श्रीभगवानुवाच*

**मया प्रसन्नेन तवार्जुनेदं**
**रूपं परं दर्शित-मात्म-योगात्।**
**तेजोमयं विश्व-मनन्त-माद्यं**
**यन्मे त्वदन्येन न दृष्ट-पूर्वम्॥ ४७॥**

**श्रीभगवान्ले भन्नुभयो**—हे अर्जुन! प्रसन्नता पूर्वक मैले आफ्नो योगशक्तिको प्रभावले यो मेरो परम तेजोमय, सबैको आदि र सीमारहित विराट्स्वरूप तिमीलाई देखाएको छु, जसलाई तिमीबाहेक कसैलेँ पनि पहिले देखेको थिएन॥ ४७॥

न वेद-यज्ञाध्ययनैर्-न दानैर्-
न च क्रियाभिर्-न तपोभि-रुग्रैः ।
एवं-रूपः शक्य अहं नृ-लोके
द्रष्टुं त्वदन्येन कुरु-प्रवीर ॥ ४८ ॥

हे अर्जुन! मनुष्यलोकमा यसप्रकारले विश्वरूप-वाला म न वेद र यज्ञहरूको अध्ययनले, न दानले, न क्रियाहरूले र न उग्र तपस्याले नै तिमीबाहेक अरूद्वारा देखिन सक्छु ॥ ४८ ॥

मा ते व्यथा मा च विमूढ-भावो
दृष्ट्वा रूपं घोर-मीदृङ्-ममेदम् ।
व्यपेत-भीः प्रीत-मनाः पुनस्-त्वं
तदेव मे रूप-मिदं प्रपश्य ॥ ४९ ॥

मेरो यस प्रकारको विकरालरूपलाई देखेर तिमीलाई व्याकुलता नहोस् र मूढभाव पनि नहोस्। फेरि भयरहित र प्रीतियुक्त मनले तिमी त्यही मेरो शङ्ख, चक्र, गदा र पद्मयुक्त चतुर्भुज-रूपलाई हेर ॥ ४९ ॥

*सञ्जय उवाच*

इत्यर्जुनं वासुदेवस्-तथोक्त्वा
स्वकं रूपं दर्शयामास भूयः ।
आश्वास-यामास च भीतमेनं
भूत्वा पुनः सौम्य-वपुर्-महात्मा ॥ ५० ॥

**सञ्जयले भने**—वासुदेव भगवान्ले अर्जुनलाई यस प्रकार आज्ञा गर्नुभयो र फेरि त्यसरी नै आफ्नो चतुर्भुज रूपको दर्शन गराउनुभयो । अनि फेरि श्रीकृष्ण भगवान्ले सौम्यमूर्ति भएर ती भयभीत अर्जुनलाई धीर तुल्याउनुभयो ॥ ५० ॥

## *अर्जुन उवाच*

**दृष्ट्वेदं मानुषं रूपं, तव सौम्यं जनार्दन।**
**इदानी-मस्मि संवृत्तः, सचेताः प्रकृतिं गतः ॥ ५१ ॥**

**अर्जुनले भने**—हे जनार्दन! हजुरको यो अति शान्त मनुष्यरूपलाई देखेर अब म स्थिरचित्त भएको छु र आफ्नो स्वाभाविक स्थितिलाई प्राप्त गरेको छु ॥ ५१ ॥

## *श्रीभगवानुवाच*

**सुदुर्-दर्श-मिदं रूपं, दृष्टवानसि यन्-मम।**
**देवा अप्यस्य रूपस्य, नित्यं दर्शन-काङ्क्षिणः ॥ ५२ ॥**

**श्रीभगवान्ले भन्नुभयो**—मेरो जुन चतुर्भुज रूप जसलाई तिमीले देख्यौ, यो सुदुर्दर्श छ, अर्थात यस रूपको दर्शन पाउन अत्यन्त दुर्लभ छ। देवताहरू पनि सधैं यही रूपको दर्शनको कामना गरिरहन्छन् ॥ ५२ ॥

**नाहं वेदैर्-न तपसा, न दानेन न चेज्यया।**
**शक्य एवं-विधो द्रष्टुं, दृष्टवानसि मां यथा ॥ ५३ ॥**

तिमीले मलाई जस्तो रूपमा देख्यौ, यस प्रकार चर्तुभुजरूप भएको म न वेदहरूले, न तपले,

न दानले र न यज्ञले नै देखिन सक्छु ॥ ५३ ॥

**भक्त्या त्वनन्यया शक्य, अहमेवं-विधोऽर्जुन।**
**ज्ञातुं द्रष्टुं च तत्त्वेन, प्रवेष्टुं च परन्-तप ॥ ५४ ॥**

परन्तु हे परंतप अर्जुन! अनन्यभक्तिले[1] यसप्रकारको चतुर्भुजरूपमा प्रत्यक्ष देख्नका लागि, तत्त्वसाथ जान्नका लागि तथा प्रवेश गर्नका लागि अर्थात् एकभावले प्राप्त हुनका लागि पनि म सहज छु ॥ ५४ ॥

**मत्-कर्मकृन्-मत्-परमो, मद्-भक्तः सङ्ग-वर्जितः ।**
**निर्वैरः सर्व-भूतेषु, यः स मामेति पाण्डव ॥ ५५ ॥**

हे अर्जुन! जुन पुरूष केवल मेरै लागि सम्पूर्ण कर्तव्यकर्महरू गर्दछ, मैमा परायण छ, मेरो भक्त छ, आसक्तिरहित छ र सम्पूर्ण भूतप्राणीहरूमा वैरभावले रहित छ[2], त्यस्तो अनन्य-भक्तियुक्त पुरूषले मलाई नै प्राप्त गर्दछ ॥ ५५ ॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, विश्व-रूप-दर्शन-योगो नाम-एकादशोऽध्यायः ॥ ११ ॥

~~o~~

---

१. अनन्यभक्ति भावको अघिल्लो श्लोकमा विस्तार-पूर्वक बताइएको छ।

२. सर्वत्र भगवद्बुद्धि हुने पुरुषको अति अपराध गर्नेहरूसित पनि वैरभाव हुँदैन भने अरुमा त झन् हुने कुरै भएन।

# अथ द्वादशोऽध्यायः

## अर्जुन उवाच

**एवं सतत-युक्ता ये, भक्तास्-त्वां पर्युपासते।**
**ये चाप्यक्षर-मव्यक्तं, तेषां के योग-वित्तमाः ॥ १ ॥**

**अर्जुनले भने**—जुन अनन्यप्रेमी भक्तजन पूर्वोक्त विधिले निरन्तर हजुरको भजन-ध्यानमा लागिरहेर तपाईँ सगुणस्वरूप परमेश्वरलाई र अर्को जो केवल अविनाशी सच्चिदानन्दघन निराकार ब्रह्मलाई नै अतिश्रेष्ठ भावले उपासना गर्दछन्, यी दुई प्रकारका उपासकमा अति उत्तम योगवेत्ता चाहिँ को हो? ॥ १ ॥

## श्रीभगवानुवाच

**मय्यावेश्य मनो ये मां, नित्य-युक्ता उपासते।**
**श्रद्धया परयोपेतास्,-ते मे युक्त-तमा मताः ॥ २ ॥**

**श्रीभगवान्ले भन्नुभयो**—अतिशय श्रेष्ठ श्रद्धाले युक्त भएर ममा मनलाई एकाग्र गरेर निरन्तर मेरो भजन ध्यानमा लागेका* जो भक्तजन म सगुणस्वरूप परमेश्वरलाई भज्दछन्, ती मेरालागि योगीहरूमा पनि अति उत्तम योगी मानिन्छन्॥ २ ॥

* अर्थात् गीता अध्याय ११ श्लोक ५५ मा लेखिए जस्तै प्रकारले निरन्तर ममा लागेका।

**ये त्वक्षर-मनिर्देश्य,-मव्यक्तं पर्युपासते।**
**सर्वत्र-गम-चिन्त्यं च, कूटस्थ-मचलं ध्रुवम्॥ ३॥**
**सन्नियम्येन्द्रिय-ग्रामं, सर्वत्र सम-बुद्धयः।**
**ते प्राप्नुवन्ति मामेव, सर्व-भूत-हिते रताः॥ ४॥**

तर, जुन पुरुषले इन्द्रियका समुदायलाई राम्रोसित वशमा गरेर मनबुद्धिदेखि पर, सर्वव्यापी, अकथनीयस्वरूप र सदा एकरस रहने, नित्य, अचल, निराकार, अविनाशी सच्चिदानन्दघन ब्रह्मलाई निरन्तर एकभावले ध्यान गर्दै भज्दछन्, ती सम्पूर्ण भूतहरूको हितमा संलग्न र सबैमा समानभाव भएका योगीले मलाई नै प्राप्त गर्दछन्॥ ३-४॥

**क्लेशोऽधिक-तरस्-तेषा,-मव्यक्ता-सक्त-चेतसाम्।**
**अव्यक्ता हि गतिर्दुःखं, देहवद्भि-रवाप्यते॥ ५॥**

ती सच्चिदानन्दघन निराकार ब्रह्ममा आसक्त चित्त भएका पुरुषहरूका साधनामा परिश्रम विशेष रहन्छ, किनकि देहाभिमानीहरूद्वारा अव्यक्त विषयक गति दुःखपूर्वक प्राप्त गर्न सकिन्छ॥ ५॥

**ये तु सर्वाणि कर्माणि, मयि सन्न्यस्य मत्-पराः।**
**अनन्ये-नैव योगेन, मां ध्यायन्त उपासते॥ ६॥**

तर, मैरै परायण रहने भक्तजनहरू सम्पूर्ण कर्महरूलाई ममा अर्पण गरी म सगुणरूप

परमेश्वरलाई नै अनन्य भक्तियोगले निरन्तर चिन्तन गर्दै भज्दछन्[१] ॥ ६ ॥

**तेषामहं समुद्धर्ता, मृत्यु-संसार-सागरात्।**
**भवामि नचिरात् पार्थ, मय्यावेशित-चेतसाम् ॥ ७ ॥**

हे अर्जुन! त्यस्ता ममा चित्त लगाउने प्रेमी भक्तहरूलाई म मृत्युरूपी संसारसमुद्रबाट छिटै उद्धार गर्नेवाला हुनेछु ॥ ७ ॥

**मय्येव मन आधत्स्व, मयि बुद्धिं निवेशय।**
**निवसिष्यसि मय्येव, अत ऊर्ध्वं न संशयः ॥ ८ ॥**

तिमी ममा नै मन लगाऊ, ममा नै बुद्धिलाई पनि लगाऊ, त्यसपछि तिमी ममा नै निवास गर्ने छौ भन्ने कुरामा कुनै पनि संशय छैन ॥ ८ ॥

**अथ चित्तं समाधातुं, न शक्नोषि मयि स्थिरम्।**
**अभ्यास-योगेन ततो, मामिच्छाप्तुं धनञ्जय ॥ ९ ॥**

तिमी मनलाई ममा स्थिर गरेर राख्न समर्थ छैनौ भने हे अर्जुन! अभ्यासरूपी[२] योगद्वारा मलाई पाउने प्रयत्न गर ॥ ९ ॥

---

१. यस श्लोकको विशेष भाव जान्नका लागि गीता अध्याय ११ श्लोक ५५ हेर्नुपर्दछ।

२. भगवान्‌का नाम र गुणहरूको श्रवण, कीर्तन, मनन तथा श्वासद्वारा जप र भगवत्प्राप्तिविषयक शास्त्रहरूको पठन-पाठन आदि चेष्टाहरू भगवत्प्राप्तिका लागि बारम्बार गर्नुको नाम 'अभ्यास' हो।

**अभ्यासेऽप्य-समर्थोऽसि, मत्-कर्म-परमो भव।**
**मदर्थ-मपि कर्माणि, कुर्वन् सिद्धि-मवाप्स्यसि ॥ १० ॥**

तिमी उपर्युक्त अभ्यासमा पनि असमर्थ छौ भने केवल मेरालागि कर्म[1] गर्न तत्पर होऊ। यसरी, मेरा निमित्त कर्महरू गरिरहँदा पनि मेरो प्राप्तिरूप सिद्धिलाई नै प्राप्त गर्नेछौ ॥ १० ॥

**अथै-तदप्य-शक्तोऽसि, कर्तुं मद्योग-माश्रितः।**
**सर्व-कर्म-फल-त्यागं, ततः कुरु यतात्मवान् ॥ ११ ॥**

मेरो प्राप्तिरूपी योगमा आश्रित भई उपर्युक्त साधना गर्नमा पनि तिमी असमर्थ छौ भने मनबुद्धि आदिमाथि विजय प्राप्त गर्नेवाला भएर सबै कर्मका फललाई त्याग[2] गर ॥ ११ ॥

**श्रेयो हि ज्ञान-मभ्यासाज्,-ज्ञानाद्-ध्यानं विशिष्यते।**
**ध्यानात्-कर्म-फल-त्यागस्,-त्यागाच्-छान्ति-रनन्तरम् ॥ १२ ॥**

मर्म नबुझी गरिएका अभ्यासभन्दा ज्ञान श्रेष्ठ हो, ज्ञानभन्दा म परमेश्वरको स्वरूपको ध्यान श्रेष्ठ हो

---

१. स्वार्थलाई त्यागेर तथा परमेश्वरलाई नै परम आश्रय र परमगति ठानेर, निष्काम प्रेमभावले सती-शिरोमणि, पतिव्रता स्त्रीको जस्तै मन, वाणी र शरीरद्वारा परमेश्वरकै लागि यज्ञ, दान र तपादि सम्पूर्ण कर्तव्यकर्म-हरूलाई गर्नुको नाम 'भगवदर्थ कर्म गर्नका लागि तयार हुन' हो।

२. गीता अध्याय ९ श्लोक २७ मा यसको विस्तार हेर्नुस्।

र ध्यानभन्दा पनि सबै कर्महरूको फलको त्याग* श्रेष्ठ हो, किनकि त्यागबाट तत्कालै परम शान्ति प्राप्त हुन्छ॥ १२॥

**अद्वेष्टा सर्व-भूतानां, मैत्रः करुण एव च।**
**निर्ममो निरहङ्कारः, सम-दुःख-सुखः क्षमी॥ १३॥**
**सन्तुष्टः सततं योगी, यतात्मा दृढ-निश्चयः।**
**मय्यर्पित-मनो-बुद्धिर्,-यो मद्-भक्तः स मे प्रियः॥ १४॥**

जुन पुरूष सबै भूतहरूमा द्वेषभावले रहित, स्वार्थरहित, सबैको प्रेमी र दया एवं करूणाले परिपूर्ण छ, साथै ममतारहित, अहङ्काररहित छ, सुख-दुःखहरूको प्राप्तिमा समान अनि क्षमावान् छ अर्थात् अपराध गर्नेलाई पनि अभय प्रदान गर्ने खालको छ र जुन योगी निरन्तर सन्तुष्ट, मन-इन्द्रियसहित शरीर वशमा गरेर ममा दृढ निश्चयवाला छ, त्यो ममा अर्पण गरिएको मन-बुद्धिवाला मेरो भक्त मलाई प्रिय छ॥ १३-१४॥

**यस्मान्नो-द्विजते लोको, लोकान्नो-द्विजते च यः।**
**हर्षा-मर्ष-भयोद्वेगैर्,-मुक्तो यः स च मे प्रियः॥ १५॥**

जसबाट कुनै पनि जीव दुःखी हुँदैन र जुन

* केवल भगवदर्थ कर्म गर्नेवाला पुरुषको भगवान्‌सित प्रेम र श्रद्धा तथा भगवान्‌को चिन्तन पनि रहिरहन्छ, यसर्थ ध्यानभन्दा 'कर्मफलको त्याग' श्रेष्ठ मानिएको हो।

स्वयं पनि कुनै जीवद्वारा दुःखी हुँदैन, अनि जुन हर्ष, अमर्ष[१], भय र उद्वेगादिले रहित छ, त्यस्तो भक्त मलाई प्रिय छ॥ १५॥

**अनपेक्षः शुचिर्-दक्ष, उदासीनो गत-व्यथः।**
**सर्वारम्भ-परित्यागी, यो मद्-भक्तः स मे प्रियः॥ १६॥**

जुन पुरूष आकाङ्क्षाले रहित, बाहिर-भित्रैदेखि शुद्ध[२], चतुर, पक्षपातले रहित र दुःखहरूदेखि मुक्त छ, त्यो सबै आरम्भहरूको त्यागी मेरो भक्त मलाई प्रिय छ॥ १६॥

**यो न हृष्यति न द्वेष्टि, न शोचति न काङ्क्षति।**
**शुभाशुभ-परित्यागी, भक्ति-मान्यः स मे प्रियः॥ १७॥**

जो न कहिल्यै हर्षित हुन्छ, न द्वेष गर्दछ, न शोक गर्दछ, न कामना गर्दछ तथा जो शुभ अशुभ सम्पूर्ण कर्महरूको त्यागी छ, त्यो भक्तियुक्त पुरूष मलाई प्रिय छ॥ १७॥

**समः शत्रौ च मित्रे च, तथा मानाप-मानयोः।**
**शीतोष्ण-सुख-दुःखेषु, समः सङ्ग-विवर्जितः॥ १८॥**

जो शत्रु-मित्रमा र मान-अपमानमा समान छ

---

१. अर्काको उन्नतिलाई देखेर सन्ताप हुनुको नाम 'अमर्ष' हो।
२. गीता अध्याय १३ श्लोक ७ को टिप्पणीमा यसको विस्तार हेर्नुस्।

तथा सर्दी, गर्मी र सुखदुःखादि द्वन्द्वहरूमा समान छ र आसक्तिरहित छ॥ १८॥

**तुल्य-निन्दा-स्तुतिर्-मौनी, सन्तुष्टो येन केनचित्।**
**अनिकेतः स्थिर-मतिर्,-भक्तिमान् मे प्रियो नरः ॥ १९ ॥**

जो निन्दा र स्तुतिलाई समान सम्झन्छ, मननशील एवं जुनकुनै प्रकारले पनि शरीरको निर्वाह मात्र हुँदा पनि सदा सन्तुष्ट छ र बस्ने ठाउँमा पनि ममता र आसक्तिदेखि पर छ, त्यो स्थिरबुद्धि भक्तिमान् पुरूष मलाई प्रिय छ॥ १९॥

**ये तु धर्म्यामृत-मिदं, यथोक्तं पर्युपासते।**
**श्रद्-दधाना मत्-परमा, भक्तास्-तेऽतीव मे प्रियाः ॥ २० ॥**

तर जुन श्रद्धायुक्त* पुरूषहरू मेरो परायण भएर यो माथि बताइएको धर्ममय अमृतलाई निष्काम प्रेमभावले सेवन गर्दछन्, ती भक्त मेरा लागि अतिशत प्रिय छन्॥ २०॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, भक्ति-योगो नाम द्वादशोऽध्यायः ॥ १२ ॥

~~०~~

---

* वेद, शास्त्र, महात्मा र गुरुजनहरूका तथा परमेश्वरका वचनहरूमा प्रत्यक्षसमान विश्वासको नाम 'श्रद्धा' हो।

ॐश्रीपरमात्मने नमः

# अथ त्रयोदशोऽध्यायः

## श्रीभगवानुवाच

**इदं शरीरं कौन्तेय, क्षेत्र-मित्यभि-धीयते।**
**एतद्यो वेत्ति तं प्राहुः, क्षेत्रज्ञ इति तद्-विदः॥ १॥**

**श्रीभगवान्ले भन्नुभयो**—हे अर्जुन! यो शरीरलाई 'क्षेत्र'[१] नामले चिनिन्छ। यसलाई जसले जान्दछ, त्यसलाई ज्ञानीजनहरूले 'क्षेत्रज्ञ' भनेर बताउँछन्॥ १॥

**क्षेत्रज्ञं चापि मां विद्धि, सर्व-क्षेत्रेषु भारत।**
**क्षेत्र-क्षेत्रज्ञयोर्-ज्ञानं, यत्तज्-ज्ञानं मतं मम॥ २॥**

हे अर्जुन! तिमी सबै क्षेत्रहरूमा क्षेत्रज्ञ अर्थात् जीवात्मा पनि मलाई नै जान[२] र क्षेत्र-क्षेत्रज्ञलाई अर्थात् विकारसहित प्रकृति र पुरूषलाई जसले तत्त्वसाथ जान्दछ, अर्थात् विकारसहित प्रकृति र पुरूषलाई जुन तत्त्वपूर्वक जान्नु छ[३] त्यो ज्ञान हो भन्ने मेरो मत छ॥ २॥

---

१. जसरी खेतहरूमा रोपिएका बीऊहरूको त्यसैअनुरूपको फल समय आएपछि प्रकट हुन्छ, त्यसैगरी यसमा रोपिएका कर्मका संस्काररूपी बिऊहरूको फल समय आएपछि प्रकट हुन्छ, यसर्थ यसको नाम 'क्षेत्र' हुन गएको हो।

२. गीता अध्याय १५ श्लोक ७ र त्यसको टिप्पणी हेर्नुस्।

३. गीता अध्याय १३ श्लोक २३ र त्यसको टिप्पणी हेर्नुस्।

**तत्-क्षेत्रं यच्च यादृक् च, यद्-विकारि यतश्-च यत्।**
**स च यो यत् प्रभावश्-च, तत् समासेन मे शृणु ॥ ३ ॥**

त्यो क्षेत्र जुन र जे-जस्तो होस् अथवा जुन विकारहरूले युक्त छ र जुन कारणले जे भएको छ, साथै त्यो क्षेत्रज्ञ पनि जे र जुन प्रभाववाला छ, त्यो सबै सङ्क्षेपमा मबाट सुन॥ ३ ॥

**ऋषिभिर्-बहुधा गीतं, छन्दोभिर्-विविधैः पृथक्।**
**ब्रह्मसूत्र-पदैश्-चैव, हेतुमद्भिर्-विनिश्चितैः ॥ ४ ॥**

यो क्षेत्र र क्षेत्रज्ञको तत्त्व ऋषिहरूद्वारा अनेक किसिमले भनिएको छ र विविध वेदमन्त्रहरूद्वारा पनि विभागपूर्वक भनिएको छ, अनि अत्यन्त राम्ररी निश्चय गरिएका युक्तियुक्त ब्रह्मसूत्रका पदहरूद्वारा पनि भनिएको छ॥ ४ ॥

**महाभूता-न्यहङ्कारो, बुद्धि-रव्यक्त-मेव च।**
**इन्द्रियाणि दशैकं च, पञ्च चेन्द्रिय-गोचराः ॥ ५ ॥**

पाँच महाभूत, अहङ्कार, बुद्धि र मूलप्रकृति, दस इन्द्रियहरू, एक मन र पाँच इन्द्रियका विषय अर्थात् शब्द, स्पर्श, रूप, रस र गन्ध॥ ५ ॥

**इच्छा द्वेषः सुखं दुःखं, सङ्घातश्-चेतना धृतिः।**
**एतत् क्षेत्रं समासेन, सविकार-मुदाहृतम्॥ ६ ॥**

तथा, इच्छा, द्वेष, सुख, दुःख, स्थूल देहको पिण्ड,

चेतना[1] र धृति[2]—यसप्रकारका विकारहरूसहित[3] यो क्षेत्र सङ्क्षेपमा भनियो ॥ ६ ॥

**अमानित्व-मदम्भित्व,-महिंसा क्षान्ति-रार्जवम्।**
**आचार्यो-पासनं शौचं, स्थैर्य-मात्म-विनिग्रहः ॥ ७ ॥**

श्रेष्ठता अभिमान नहुनु, ढोँगीभाव नहुनु, प्राणीमात्रलाई कुनै पनि प्रकारले नसताउनु, क्षमाभाव, मन-वाणी आदिको सरलता, श्रद्धाभक्ति-सहित गुरूको सेवा, बाहिरभित्रको शुद्धि*, अन्तःकरणको स्थिरता र मन-इन्द्रियहरूसहित शरीरको निग्रह ॥ ७ ॥

**इन्द्रियार्थेषु वैराग्य,-मनहङ्कार एव च।**
**जन्म-मृत्यु-जरा-व्याधि,-दुःख-दोषानु-दर्शनम् ॥ ८ ॥**

यस लोक र परलोकका सम्पूर्ण भोगादिमा

१. शरीर र अन्तःकरणको एक प्रकारको चेतनशक्ति।
२. गीता अध्याय १८ श्लोक ३४ देख ३५ सम्म हेर्नुस्।
३. पाँचौँ श्लोकमा भनिएको त क्षेत्रको स्वरूप बुझ्नुपर्दछ भने यस श्लोकमा बताइएका इच्छादि क्षेत्रका विकार भन्ने बुझ्नुपर्दछ।

*सत्यतापूर्वक शुद्ध व्यवहारले द्रव्य र त्यसको अन्नबाट आहारको तथा यथायोग्य व्यवहारबाट आचरणहरूको र जलमृत्तिकादिबाट शरीरको शुद्धिलाई बाहिरको शुद्धि भनिन्छ भने राग, द्वेष र कपट आदि विकारहरू नाश भएर अन्तःकरण स्वच्छ हुनु भित्रको शुद्धि मानिन्छ।

आसक्ति नहुनु, अहङ्कार पनि नहुनु र जन्म, मृत्यु, बुढ्याइँ, रोग आदिमा दुःख र दोषहरूको बारम्बार विचार गर्नु॥ ८॥

**असक्ति-रनभिष्वङ्ग:, पुत्र-दार-गृहादिषु।**
**नित्यं च सम-चित्तत्व,-मिष्टानिष्टो-पपत्तिषु॥ ९॥**

पुत्र, स्त्री, घरपरिवार र धन आदिमा आसक्त नहुनु, ममत्वभाव नराख्नु, प्रिय एवं अप्रिय कुराको प्राप्तिमा सधैँ समचित्त रहनु॥ ९॥

**मयि चानन्य-योगेन, भक्ति-रव्यभिचारिणी।**
**विविक्त-देश-सेवित्व,-मरतिर्-जन-संसदि॥ १०॥**

म परमेश्वरमा अनन्य योगद्वारा अव्यभिचारिणी भक्ति[१] तथा शुद्ध एवम् एकान्त स्थानमा बस्ने स्वभाव र विषयासक्त मनुष्यहरूको समुदायमा प्रेम नहुनु॥ १०॥

**अध्यात्म-ज्ञान-नित्यत्वं, तत्त्व-ज्ञानार्थ-दर्शनम्।**
**एतज्-ज्ञान-मिति प्रोक्त,-मज्ञानं यदतोऽन्यथा॥ ११॥**

अध्यात्मज्ञानमा[२] नित्यस्थिति र तत्त्वज्ञानका

१. केवल एक सर्वशक्तिमान् परमेश्वरलाई नै आफ्नो स्वामी मान्दै स्वार्थ र अभिमानको त्याग गरी, श्रद्धा र भावसहित परमप्रेमले भगवान्‌को निरन्तर चिन्तन गर्नु 'अव्यभिचारिणी' भक्ति हो।

२. जसको ज्ञानद्वारा आत्मवस्तु र अनात्मवस्तु जान्न सकिन्छ, त्यस ज्ञानको नाम 'अध्यात्मज्ञान' हो।

अर्थरूपी परमात्मालाई नै देख्नु, यो सबै ज्ञान[१] हो भने जो यसदेखि विपरीत छ, त्यो अज्ञान[२] हो भनेर भनिएको छ॥ ११ ॥

**ज्ञेयं यत्तत्-प्रवक्ष्यामि, यज्-ज्ञात्वा-मृत-मश्नुते।**
**अनादिमत्-परं ब्रह्म, न सत्-तन्ना-सदुच्यते॥ १२ ॥**

जुन जान्नुपर्ने छ र जसलाई जानेर मनुष्यले परमानन्द प्राप्त गर्दछ, त्यो कुरा राम्रोसँग भन्दछु। त्यो अनादिवाला परमब्रह्मलाई न सत् भनिन्छ, न असत् नै॥ १२ ॥

**सर्वतः-पाणि-पादं तत्, सर्वतोऽक्षि-शिरो-मुखम्।**
**सर्वतः-श्रुतिमल्-लोके, सर्व-मावृत्य तिष्ठति॥ १३ ॥**

जसका हातपाउ सबैतिर फैलिएका छन्, आँखा, शिर र मुखहरू पनि सबैतिर छन्, कान पनि सर्वत्र छन्, त्यस्ता परब्रह्म संसारमा सबैलाई व्याप्त गरेर रहनुभएको छ[३]॥ १३ ॥

---

१. यस अध्यायको श्लोक ७ देखि लिएर यहाँसम्म जे साधन बताइएका छन्, ती सबै तत्त्वज्ञानको प्राप्तिमा हेतु हुनाले 'ज्ञान' नामले पुकारिएका हुन्।

२. माथि बताइएका ज्ञानका साधनहरूभन्दा विपरीत जुन मान, दम्भ, हिंसा आदि छन्, ती अज्ञानको वृद्धिमा हेतु हुनाले 'अज्ञान' नामले चिनिएका हुन्।

३. आकाश जसरी वायु, अग्नि, जल र पृथ्वीको कारणरूप हुनाले तिनलाई व्याप्त गरेर रहेको छ, त्यसैगरी परमात्मा पनि

**सर्वेन्द्रिय-गुणाभासं, सर्वेन्द्रिय-विवर्जितम्।**
**असक्तं सर्वभृच्-चैव, निर्गुणं गुण-भोक्तृ च॥ १४॥**

ऊ सम्पूर्ण इन्द्रियका विषयलाई जान्नेवाला हो, तर वास्तवमा सबै इन्द्रियबाट रहित छ, आसक्तिरहित भएर पनि सबैलाई धारण-पोषण गर्ने र निर्गुण भएर पनि गुणहरूलाई भोग्ने खालको छ॥ १४॥

**बहिरन्तश्-च भूताना,-मचरं चरमेव च।**
**सूक्ष्मत्वात्-तद-विज्ञेयं, दूरस्थं चान्तिके च तत्॥ १५॥**

ऊ चराचर सबै भूतको बाहिर-भित्र परिपूर्ण छ र चर-अचर पनि उही हो। साथै, ऊ सूक्ष्म हुनाले अविज्ञेय[1] छ भने अति नजिक[2] र टाढा[3] पनि रहेको छ॥ १५॥

---

सबैका कारणरूप हुनाले सम्पूर्ण चराचर जगत्लाई व्यास तुल्याई स्थित रहेको छ।

१.जसरी सूर्यका किरणहरूमा स्थित जल सूक्ष्म हुनाले सामान्य मानिसले जान्न सक्दैनन्, त्यसैगरी सर्वव्यापी परमात्मा पनि सूक्ष्म हुनाले सामान्य मनुष्यको जानकारीमा आउँदैन।

२. त्यो परमात्मा सर्वत्र परिपूर्ण र सबैको आत्मा हुनाले अत्यन्त नजिक छ।

३. श्रद्धारहित, अज्ञानी पुरुषहरूका लागि नजान्नाले गर्दा निकै टाढा छ।

अविभक्तं च भूतेषु, विभक्त-मिव च स्थितम्।
भूत-भर्तृ च तज्-ज्ञेयं, ग्रसिष्णु प्रभविष्णु च॥ १६॥

त्यो परमात्मा विभागरहित एकरूपले आकाशसमान परिपूर्ण हुँदा पनि चराचर सम्पूर्ण भूतहरूमा विभक्तजस्तै रहेको प्रतीत हुन्छ[1]। जान्नयोग्य त्यही परमात्मा विष्णुरूपले भूतहरूको धारण-पोषण गर्ने, रूद्ररूपले संहार गर्ने र ब्रह्मरूपले सबैलाई उत्पन्न गर्ने सृष्टिकर्ता हुनुहुन्छ॥ १६॥

ज्योतिषा-मपि तज्-ज्योतिस्,-तमसः पर-मुच्यते।
ज्ञानं ज्ञेयं ज्ञान-गम्यं, हृदि सर्वस्य विष्ठितम्॥ १७॥

त्यो परमात्मा ज्योतिहरूको पनि ज्योति[2] एवं मायादेखि अत्यन्त पर मानिन्छ। त्यो परमात्मा बोधस्वरूप, जान्नयोग्य एवं तत्त्वज्ञानले प्राप्त गर्नयोग्य छ भने सबैका हृदयमा विशेषरूपले स्थित छ॥ १७॥

इति क्षेत्रं तथा ज्ञानं, ज्ञेयं चोक्तं समासतः।
मद्-भक्त एतद्-विज्ञाय, मद्भावा-योपपद्यते॥ १८॥

---

१. जसरी महाकाश विभागरहित स्थित भएर पनि घैंटोमा फरक-फरक प्रतीत हुन्छ, त्यसैगरी परमात्मा सबै भूतहरूमा एकरूपले स्थित भएर पनि फरक-फरक जस्तै प्रतीत हुन्छ।

२. गीता अध्याय १५ श्लोक १२ मा हेर्नुस्।

यसप्रकार क्षेत्र[१], ज्ञान[२] र जान्नयोग्य परमात्माको स्वरूप[३] सङ्क्षेपमा बताएँ। मेरो भक्तले यसलाई तत्त्वपूर्वक जानेर मेरै स्वरूपलाई प्राप्त गर्दछ ॥ १८ ॥

**प्रकृतिं पुरुषं चैव, विद्ध्यनादी उभावपि।**
**विकारांश्-च गुणांश्-चैव, विद्धि प्रकृति-सम्भवान् ॥ १९ ॥**

प्रकृति र पुरूष यी दुवैलाई नै तिमी अनादि जान। राग-द्वेषादि विकारहरूलाई एवं त्रिगुणात्मक सम्पूर्ण पदार्थ पनि प्रकृतिबाट नै उत्पन्न भएको जान ॥ १९ ॥

**कार्य-करण-कर्तृत्वे, हेतुः प्रकृति-रुच्यते।**
**पुरुषः सुख-दुःखानां, भोक्तृत्वे हेतु-रुच्यते ॥ २० ॥**

कार्य[४] र करण[५]को उत्पत्तिमा कारण प्रकृति हो भनिन्छ र सुख-दुःखहरूको उपभोगमा कारण जीवात्मा हो भनिन्छ ॥ २० ॥

---

१. श्लोक ५-६ मा विकाररहित क्षेत्रको स्वरूप भनिएको छ।

२. श्लोक ७ देखि ११ सम्म ज्ञान अर्थात् ज्ञानको साधन बताइएको छ।

३. श्लोक १२ देखि १७ सम्म ज्ञेयको स्वरूप बताइएको छ।

४. आकाश, वायु, अग्नि, जल र पृथ्वी तथा शब्द, स्पर्श, रूप, रस, गन्ध—यिनको नाम 'कार्य' हो।

५. बुद्धि, अहङ्कार र मन तथा श्रोत्र, त्वचा, जिभ्रो, आँखा र घ्राण एवं वाक्, हस्त, पाद, उपस्थ र गुदा—यी १३ को नाम 'करण' हो।

**पुरुषः प्रकृतिस्थो हि, भुङ्क्ते प्रकृतिजान्-गुणान्।**
**कारणं गुण-सङ्गोऽस्य, सदसद्-योनि-जन्मसु॥ २१॥**

प्रकृतिमा[१] स्थित पुरूषनै प्रकृतिबाट उत्पन्न त्रिगुणात्मक पदार्थहरूलाई भोग्दछ भने यिनै गुणहरूको सङ्गत नै जीवात्माको राम्रा-नराम्रा योनिहरूमा जन्म लिने कारण हो[२]॥ २१॥

**उप-द्रष्टा-नुमन्ता च, भर्ता भोक्ता महेश्वरः।**
**परमात्मेति चाप्युक्तो, देहेऽस्मिन्-पुरुषः परः॥ २२॥**

शरीरमा स्थित यो आत्मा वास्तवमा परमात्मा नै हो। यो साक्षी हुनाले उपद्रष्टा र यथार्थ सम्मति दिने भएकाले अनुमन्ता, सबैलाई धारण-पोषण गर्ने भएकाले भर्ता, जीवरूपले भोक्ता, ब्रह्मा आदिको पनि स्वामी भएकाले महेश्वर र शुद्ध सच्चिदानन्दघन हुनाले परमात्मा भनिएको हो॥ २२॥

---

१. प्रकृति शब्दको अर्थ गीता अध्याय ७ श्लोक १४ मा बताइएको भगवान्को त्रिगुणमयी माया भन्ने बुझ्नुपर्दछ।

२. सत्त्वगुणको सङ्गतले देवयोनिमा, रजोगुणको सङ्गतले मनुष्ययोनिमा र तमोगुणको सङ्गतले पशु, पक्षी आदि नीच योनिहरूमा जन्म हुन्छ।

**य एवं वेत्ति पुरुषं, प्रकृतिं च गुणैः सह।**
**सर्वथा वर्तमानोऽपि, न स भूयोऽभि-जायते॥ २३॥**

यसप्रकार, पुरूष र गुणहरूका साथमा प्रकृतिलाई जो मनुष्यले तत्त्वपूर्वक जान्दछ[1], त्यसले सबै प्रकारका कर्तव्यकर्म गरिरहेर पनि फेरि जन्मँदैन॥ २३॥

**ध्याने-नात्मनि पश्यन्ति, केचिदात्मान-मात्मना।**
**अन्ये साङ्ख्येन योगेन, कर्म-योगेन चापरे॥ २४॥**

त्यस परमात्मालाई कति मानिसले त शुद्ध भएको सूक्ष्म बुद्धिले ध्यानद्वारा[2] हृदयमा देख्दछन् भने अन्य कतिले ज्ञानयोगद्वारा[3] र कतिले निष्काम कर्मयोगका[4] माध्यमले देख्दछन्, प्राप्त गर्दछन्॥ २४॥

---

१. दृश्यमात्र सम्पूर्ण जगत् मायाको कार्य हुनाले क्षणभङ्गुर, नाशवान्, जड र अनित्य छ भने जीवात्मा नित्य, चेतन, निर्विकार र अविनाशी एवं शुद्ध बोधस्वरूप, सच्चिदानन्दघन परमात्माकै सनातन अंश हो भन्ने तरिकाले बुझेर सम्पूर्ण मायिक पदार्थहरूसितको सङ्गतलाई त्यागेर परमपुरुष परमात्मामै एकभावले नित्य स्थित रहनुको नाम उनलाई 'तत्त्वपूर्वक जान्नु' हो।

२. जसको वर्णन गीता अध्याय ६ मा श्लोक ११ देखि ३२ सम्म विस्तारपूर्वक गरिएको छ।

३. जसको वर्णन गीता अध्याय २ मा श्लोक ११ देखि ३० सम्म विस्तारपूर्वक गरिएको छ।

४. जसको वर्णन गीता अध्याय २ मा श्लोक ४० देखि अध्याय समाप्तिपर्यन्त सविस्तार गरिएको छ।

**अन्ये त्वेव-मजानन्तः, श्रुत्वान्येभ्य उपासते।**
**तेऽपि चाति-तरन्त्येव, मृत्युं श्रुति-परायणाः॥ २५॥**

तर, यीभन्दा फरक जो मन्दबुद्धिवाला पुरूष छन्, तिनले यसरी नजानेर अरूबाट अर्थात् तत्त्वलाई जानेको पुरूषबाट सुनेर नै तदनुसार उपासना गर्दछन् र ती सुन्न परायण भएका पुरूषहरू पनि मृत्युरूपी संसार-सागरबाट निःसन्देह पार हुन्छन्॥ २५॥

**यावत् सञ्जायते किञ्चित्, सत्त्वं स्थावर-जङ्गमम्।**
**क्षेत्र-क्षेत्रज्ञ-संयोगात्, तद्-विद्धि भरतर्षभ॥ २६॥**

हे अर्जुन! यावत् जति पनि स्थावर-जङ्गम प्राणी उत्पन्न हुन्छन्, ती सबैलाई तिमीले क्षेत्र र क्षेत्रज्ञको संयोगबाट नै उत्पन्न भएको भन्ने जान॥ २६॥

**समं सर्वेषु भूतेषु, तिष्ठन्तं परमेश्वरम्।**
**विनश्यत्स्व-विनश्यन्तं, यः पश्यति स पश्यति॥ २७॥**

जुन पुरूष नष्ट भइरहेका सम्पूर्ण चराचर भूतहरूमा नाशरहित परमेश्वरलाई समभावपूर्वक स्थित देख्दछ, उसैले यथार्थ देख्दछ॥ २७॥

**समं पश्यन् हि सर्वत्र, सम-वस्थित-मीश्वरम्।**
**न हिनस्त्यात्म-नात्मानं, ततो याति परां गतिम्॥ २८॥**

किनकि जुन पुरुषले सबैमा समभावले स्थित भएका परमेश्वरलाई समान देख्दै आफैँद्वारा

आफूलाई नष्ट गर्दैन, यसैबाट उसले परम गतिलाई प्राप्त गर्दछ॥ २८॥

**प्रकृत्यैव च कर्माणि, क्रियमाणानि सर्वशः।**
**यः पश्यति तथात्मान,-मकर्तारं स पश्यति॥ २९॥**

जुन पुरूष सम्पूर्ण कर्महरूलाई सबै किसिमले प्रकृतिका माध्यमले नै गरिएको देख्दछ र आत्मालाई अकर्ता देख्दछ, उसैले यथार्थ देख्दछ॥ २९॥

**यदा भूत-पृथग्-भाव,-मेकस्थ-मनु-पश्यति।**
**तत एव च विस्तारं, ब्रह्म सम्पद्यते तदा॥ ३०॥**

जुन बेला उक्त पुरूषले भूतहरूको पृथक्-पृथक् भावलाई एकै परमात्मामा नै स्थित भएको तथा उही परमात्माबाट नै सम्पूर्ण भूतहरूको विस्तार भएको देख्दछ, त्यसै क्षण उसले सच्चिदानन्दघन ब्रह्मलाई प्राप्त गर्दछ॥ ३०॥

**अनादित्वान्-निर्गुणत्वात्, परमात्माय-मव्ययः।**
**शरीरस्थोऽपि कौन्तेय, न करोति न लिप्यते॥ ३१॥**

हे अर्जुन! अनादि हुनाले र निर्गुण हुनाले यो अविनाशी परमात्मा शरीरमा स्थित रहेर पनि वास्तवमा न केही कर्म गर्दछ, न त लिप्त नै हुन्छ॥ ३१॥

**यथा सर्वगतं सौक्ष्म्या,-दाकाशं नोपलिप्यते।**
**सर्वत्रा-वस्थितो देहे, तथात्मा नोपलिप्यते॥ ३२॥**

जसरी सर्वत्र व्याप्त भएर पनि आकाश सूक्ष्म भएका कारण लिप्त हुँदैन, त्यसैगरी देहमा सर्वत्र स्थित भएर पनि आत्मा निर्गुण भएका कारण देहका गुणहरूले लिप्त हुँदैन॥ ३२॥

**यथा प्रकाश-यत्येकः, कृत्स्नं लोक-मिमं रविः।**
**क्षेत्रं क्षेत्री तथा कृत्स्नं, प्रकाशयति भारत॥ ३३॥**

हे अर्जुन! जसरी एकै सूर्यले यो सम्पूर्ण ब्रह्माण्डलाई प्रकाशित गर्दछ, त्यसरी नै एकै आत्माले सम्पूर्ण क्षेत्रलाई नै प्रकाशित गर्दछ॥ ३३॥

**क्षेत्र-क्षेत्रज्ञयो-रेव,-मन्तरं ज्ञान-चक्षुषा।**
**भूत-प्रकृति-मोक्षं च, ये विदुर्-यान्ति ते परम्॥ ३४॥**

यसप्रकार, जुन पुरूषले ज्ञानचक्षुद्वारा क्षेत्र र क्षेत्रज्ञका भेदलाई* तथा कार्यसहित प्रकृतिबाट मुक्त हुनुलाई तत्त्वसाथ जान्दछन्, ती महात्माहरूले परमब्रह्म परमात्मालाई प्राप्त गर्दछन्॥ ३४॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, क्षेत्र-क्षेत्रज्ञ-विभाग-योगो नाम त्रयोदशोऽध्यायः॥ १३॥

~~0~~

* क्षेत्रलाई जड, विकारी, क्षणिक र नाशवान् तथा क्षेत्रज्ञलाई नित्य, चेतन, अविकारी र अविनाशी जान्नु नै तिनका भेदलाई जान्नु हो।

ॐश्रीपरमात्मने नमः

# अथ चतुर्दशोऽध्यायः

## श्रीभगवानुवाच

**परं भूयः प्रवक्ष्यामि, ज्ञानानां ज्ञान-मुत्तमम्।**
**यज्-ज्ञात्वा मुनयः सर्वे, परां सिद्धि-मितो गताः ॥ १ ॥**

**श्रीभगवान्‌ले भन्नुहुन्छ**—ज्ञानमा पनि अति उत्तम त्यस परमज्ञान म तिमीलाई फेरि भन्दछु, जसलाई जानेर सबै मुनिजनले यस संसारबाट मुक्त भएर परमसिद्धिलाई प्राप्त गरेका छन्॥ १ ॥

**इदं ज्ञान-मुपाश्रित्य, मम साधर्म्य-मागताः।**
**सर्गेऽपि नोपजायन्ते, प्रलये न व्यथन्ति च॥ २ ॥**

यस ज्ञानको आश्रय लिई अर्थात् धारण गरी मेरो स्वरूपलाई प्राप्त गरेका पुरूषहरू सृष्टिको सुरुआतमा पुनः उत्पन्न हुँदैनन् र प्रलयकालमा पनि व्याकुल हुँदैनन्॥ २ ॥

**मम योनिर्-महद्-ब्रह्म, तस्मिन् गर्भं दधाम्यहम्।**
**सम्भवः सर्व-भूतानां, ततो भवति भारत॥ ३ ॥**

हे अर्जुन! मेरो महद्-ब्रह्मरूप मूल प्रकृति सम्पूर्ण भूतहरूको योनि हो अर्थात् गर्भाधानको

स्थान हो र म त्यसै योनिमा चेतनसमुदायरूपी गर्भलाई स्थापित गर्दछु। त्यस जड–चेतनको संयोगबाट सबै भूतहरूको उत्पत्ति हुन्छ॥ ३॥

**सर्व-योनिषु कौन्तेय, मूर्तयः सम्भवन्ति याः।**
**तासां ब्रह्म महद्-योनि,-रहं बीज-प्रदः पिता॥ ४॥**

हे अर्जुन! नानाप्रकारका सबै योनिहरूमा जति मूर्तिहरू अर्थात् शरीरधारी प्राणी उत्पन्न हुन्छन्, प्रकृति त ती सबैलाई गर्भधारण गर्ने माता हुन् र म बीजलाई स्थापन गर्ने पिता हुँ॥ ४॥

**सत्त्वं रजस्-तम इति, गुणाः प्रकृति-सम्भवाः।**
**निबध्नन्ति महाबाहो, देहे देहिन-मव्ययम्॥ ५॥**

हे अर्जुन! सत्त्वगुण, रजोगुण र तमोगुण— यी प्रकृतिबाट उत्पन्न भएका तीनै गुणले यस अविनाशी जीवात्मालाई शरीरमा बाँध्दछन्॥ ५॥

**तत्र सत्त्वं निर्मलत्वात्, प्रकाशक-मनामयम्।**
**सुख-सङ्गेन बध्नाति, ज्ञान-सङ्गेन चानघ॥ ६॥**

हे निष्पाप! ती तीनै गुणहरूमा सत्त्वगुण त निर्मल हुनाले प्रकाश दिने र विकाररहित छ, तापनि सुखको र ज्ञानको आसक्तिले अर्थात् ज्ञानको अभिमानले जीवात्मालाई बाँध्दछ॥ ६॥

**रजो रागात्मकं विद्धि, तृष्णा-सङ्ग-समुद्भवम्।**
**तन्-निबध्नाति कौन्तेय, कर्म-सङ्गेन देहिनम्॥ ७॥**

हे अर्जुन! रागरूपी रजोगुणलाई कामना र आसक्तिद्वारा उत्पन्न भएको भन्ने जान। त्यसैले यसले कर्म र कर्मफलप्रतिको आसक्तिद्वारा जीवात्मालाई बाँध्दछ॥ ७॥

**तमस्-त्वज्ञानजं विद्धि, मोहनं सर्व-देहिनाम्।**
**प्रमादालस्य-निद्राभिस्,-तन्-निबध्नाति भारत॥ ८॥**

हे अर्जुन! सबै देहाभिमानीहरूलाई मोहमा पार्ने तमोगुण लाई त अज्ञानद्वारा उत्पन्न भएको भन्ने जान। त्यसले प्रमाद[१], आलस्य[२] र निद्राद्वारा जीवात्मालाई बाँध्दछ॥ ८॥

**सत्त्वं सुखे सञ्जयति, रजः कर्मणि भारत।**
**ज्ञान-मावृत्य तु तमः, प्रमादे सञ्जयत्युत॥ ९॥**

हे अर्जुन! सत्त्वगुणले सुखतिर लगाउँछ, रजोगुणले कर्ममा र तमोगुणले त ज्ञानलाई ढाकेर प्रमादमा पनि लगाउँछ॥ ९॥

---

१. इन्द्रियहरू र अन्तःकरणको व्यर्थ चेष्टाहरूको नाम 'प्रमाद' हो।

२. कर्तव्य-कर्ममा अप्रवृत्तिरूपी निरुद्यमताको नाम 'आलस्य' हो।

**रजस्-तमश्-चाभिभूय, सत्त्वं भवति भारत।**
**रजः सत्त्वं तमश्-चैव, तमः सत्त्वं रजस्-तथा॥ १०॥**

हे अर्जुन! रजोगुण र तमोगुणलाई दबाएर सत्त्वगुणको, सत्त्वगुण र तमोगुणलाई दबाएर रजोगुणको, त्यस्तै सत्त्वगुण र रजोगुणलाई दबाएर तमोगुणको वृद्धि हुन्छ, अर्थात् बढ्दछ॥ १०॥

**सर्व-द्वारेषु देहेऽस्मिन्, प्रकाश उपजायते।**
**ज्ञानं यदा तदा विद्याद्, -विवृद्धं सत्त्व-मित्युत॥ ११॥**

जुन समयमा यस देहमा तथा अन्तःकरण र इन्द्रियमा चेतना र बोधशक्ति उत्पन्न हुन्छ, त्यतिबेला सत्त्वगुणको वृद्धि भएको छ भन्ने ठान्नुपर्दछ॥ ११॥

**लोभः प्रवृत्ति-रारम्भः, कर्मणा-मशमः स्पृहा।**
**रजस्येतानि जायन्ते, विवृद्धे भरतर्षभ॥ १२॥**

हे अर्जुन! रजोगुण बढेमा लोभ, सांसारिक चेष्टा वा प्रवृत्ति, स्वार्थबुद्धिद्वारा सकामकर्महरूको आरम्भ, अशान्ति र विषयभोगहरूको लालसा— यी सबै उत्पन्न हुन्छन्॥ १२॥

**अप्रकाशोऽप्रवृत्तिश्-च, प्रमादो मोह एव च।**
**तमस्येतानि जायन्ते, विवृद्धे कुरु-नन्दन॥ १३॥**

हे अर्जुन! तमोगुण बढेपछि अन्तःकरण र

इन्द्रियहरूमा अप्रकाश, कर्तव्य–कर्महरूमा अप्रवृत्ति र प्रमाद अर्थात् व्यर्थ चेष्टा र निद्रादि अन्तःकरणका मोहिनी वृत्तिहरू—यी सबै उत्पन्न हुन्छन्॥ १३॥

**यदा सत्त्वे प्रवृद्धे तु, प्रलयं याति देह–भृत्।**
**तदोत्तम–विदां लोका,–नमलान् प्रतिपद्यते॥ १४॥**

जब सत्त्वगुणको वृद्धि भएका समयमा मनुष्यले मृत्युलाई प्राप्त गर्दछ, तब उसले उत्तम कर्म गर्नेहरूको निर्मल दिव्य स्वर्गादि लोकहरू प्राप्त गर्दछु॥ १४॥

**रजसि प्रलयं गत्वा, कर्म–सङ्गिषु जायते।**
**तथा प्रलीनस्–तमसि, मूढ–योनिषु जायते॥ १५॥**

रजोगुण बढेको बेलामा मृत्युलाई प्राप्त गर्छ भने ऊ कर्महरूमा आसक्त मनुष्यहरूमा उत्पन्न हुन्छ र तमोगुण बढेको बेलामा मर्ने मानिस कीट, पशु आदि मूढ योनिहरूमा उत्पन्न हुन्छ॥ १५॥

**कर्मणः सुकृतस्याहुः, सात्त्विकं निर्मलं फलम्।**
**रजसस्–तु फलं दुःख,–मज्ञानं तमसः फलम्॥ १६॥**

श्रेष्ठ कर्महरूको त सात्त्विक अर्थात् सुख, ज्ञान र वैराग्यादि निर्मल फल बताइएको छ, राजस कर्मको फल दुःख एवं तामस कर्मको फल

अज्ञान भनिएको छ॥ १६॥

**सत्त्वात् सञ्जायते ज्ञानं, रजसो लोभ एव च।**
**प्रमाद-मोहौ तमसो, भवतोऽज्ञान-मेव च॥ १७॥**

सत्त्वगुणबाट ज्ञान उत्पन्न हुन्छ भने रजोगुणबाट निःसन्देह लोभ तथा तमोगुणबाट प्रमाद[1] र मोह[2] उत्पन्न हुन्छन् र अज्ञान पनि पैदा हुन्छ॥ १७॥

**ऊर्ध्वं गच्छन्ति सत्त्वस्था, मध्ये तिष्ठन्ति राजसाः।**
**जघन्य-गुण-वृत्तिस्था, अधो गच्छन्ति तामसाः॥ १८॥**

सत्त्वगुणमा स्थित पुरूषहरू स्वर्गादि उच्च लोकहरूमा जान्छन्, रजोगुणमा स्थित राजस पुरूष बीचमा अर्थात् मनुष्यलोकमा नै रहन्छन् र तमोगुणका कार्यरूप निद्रा, प्रमाद र आलस्यादिमा स्थित तामस पुरूषले अधोगति अर्थात् कीट, पशु आदि नीच योनिहरूलाई र नरकहरूलाई प्राप्त गर्दछन्॥ १८॥

**नान्यं गुणेभ्यः कर्तारं, यदा द्रष्टानु-पश्यति।**
**गुणेभ्यश्-च परं वेत्ति, मद्-भावं सोऽधि-गच्छति॥ १९॥**

जतिबेला द्रष्टाले तीनै गुणदेखि अतिरिक्त अन्य कसैलाई कर्ता देख्दैन र तीनै गुणदेखि अत्यन्त पर सच्चिदानन्दघनस्वरूप म परमात्मालाई

१-२. यसै अध्यायको श्लोक १३ मा हेर्नुस्।

तत्त्वपूर्वक जान्दछ, त्यतिबेला त्यस पुरूषले मेरो स्वरूपलाई प्राप्त गर्दछ॥ १९ ॥

**गुणानेता-नतीत्य त्रीन्, देही देह-समुद्भवान्।**
**जन्म-मृत्यु-जरा-दुःखैर्,-विमुक्तोऽमृत-मश्नुते ॥ २० ॥**

त्यस्तो पुरूषले शरीरको* उत्पत्तिका कारणरूपी यी तीनै गुणहरूलाई उल्लङ्घन गरेर जन्म, मृत्यु, वृद्धावस्था र सबै प्रकारका दुःखहरूदेखि मुक्त भई परमानन्दलाई प्राप्त गर्दछ॥ २० ॥

## *अर्जुन उवाच*

**कैर्लिङ्गैस्-त्रीन् गुणानेता,-नतीतो भवति प्रभो।**
**किमाचारः कथं चैतांस्,-त्रीन् गुणा-नति-वर्तते ॥ २१ ॥**

**अर्जुनले भने—** हे प्रभो! यी तीनै गुणहरूदेखि पार भएको पुरूष कुन-कुन लक्षणहरूले युक्त हुन्छ र कस्तो प्रकारको आचरण भएको हुन्छ? अनि ऊ कुन उपायले यी तीनै गुणहरूदेखि अतीत हुन सक्छ॥ २१ ॥

---

* बुद्धि, अहंकार र मन तथा पाँच ज्ञानेन्द्रिय, पाँच कर्मेन्द्रिय, पाँच भूत, पाँच इन्द्रियका विषय गरी तेइस तत्त्वहरूको पिण्डरूपी यो स्थूल शरीर प्रकृतिबाट उत्पन्न हुने गुणहरूकै कार्य हो। यसर्थ, यी तीनै गुणहरूलाई यसको उत्पत्तिको कारण भनिएको छ।

### श्रीभगवानुवाच

**प्रकाशं च प्रवृत्तिं च, मोहमेव च पाण्डव।**
**न द्वेष्टि सम्प्रवृत्तानि, न निवृत्तानि काङ्क्षति॥ २२॥**

**श्रीभगवान्‌ले भन्नुभयो**—हे अर्जुन! जुन पुरूषले सत्त्वगुणको कार्यरूप प्रकाशलाई[1] र रजोगुणको कार्यरूप प्रवृत्तिलाई तथा तमोगुणको कार्यरूप मोहलाई[2] पनि न त प्रवृत्त हुँदा तीसित द्वेष गर्दछ र न निवृत्त हुँदा तिनको आकाङ्क्षा गर्दछ[3]॥ २२॥

**उदासीन-वदासीनो, गुणैर्-यो न विचाल्यते।**
**गुणा वर्तन्त इत्येव, योऽव-तिष्ठति नेङ्गते॥ २३॥**

जो साक्षीजस्तै स्थित भएर गुणहरूदेखि विचलित

---

१. अन्तःकरण र इन्द्रियादिहरूमा आलस्यको अभाव भएर जुन एक प्रकारको चेतनता हुन्छ, त्यसको नाम 'प्रकाश' हो।

२. निद्रा र आलस्य आदिको बहुलताद्वारा अन्तःकरण र इन्द्रियहरूमा चेतनशक्तिको लय हुनुलाई यहाँ 'मोह' नामले बुझ्नुपर्दछ।

३. जुन पुरुष एक सच्चिदानन्दघन परमात्मामा नै नित्य, एकीभावले स्थित भएको यस त्रिगुणमयी मायाको प्रपञ्चरूपी संसारदेखि सर्वथा अतीत भएको छ, त्यस गुणातीत पुरुषको अभिमानरहित अन्तःकरणमा तीनै गुणहरूको कार्यरूप प्रकाश, प्रवृत्ति र मोहादि वृत्तिहरू प्रकट हुँदा र नहुँदा कुनै पनि कालमा पनि इच्छा-द्वेष आदि विकार हुँदैनन्, यही उसको गुणहरूदेखि अतीत हुनुको प्रधान लक्षण हो।

तुल्याउन सकिँदैन अर्थात् गुणैगुणमा विचरण[१] गर्दछन् भन्ने सम्झिएर जो सच्चिदानन्दघन परमात्मामा एकीभावले स्थित रहन्छ र त्यस स्थितिबाट कहिल्यै विचलित हुँदैन॥ २३ ॥

**सम-दुःख-सुखः स्वस्थः, सम-लोष्टाश्म-काञ्चनः।**
**तुल्य-प्रियाप्रियो धीरस्,-तुल्य-निन्दात्म-संस्तुतिः ॥ २४ ॥**

जो निरन्तर आत्मभावमा स्थित, दुःख-सुखलाई समान सम्झिनेवाला, माटो, ढुङ्गा र सुनमा समानभाव भएको ज्ञानी, प्रिय तथा अप्रियलाई पनि उस्तै मान्ने र आफ्नो निन्दा-स्तुतिमा पनि समान भाववाला छ॥ २४ ॥

**मानाप-मानयोस्-तुल्यस्,-तुल्यो मित्रारि-पक्षयोः।**
**सर्वारम्भ-परित्यागी, गुणातीतः स उच्यते॥ २५ ॥**

जो मान र अपमानमा समान छ, मित्र र वैरीका पक्षमा पनि समान छ एवं जो सम्पूर्ण आरम्भमा कर्तापनको अभिमानले रहित छ, त्यो पुरूष गुणातीत मानिन्छ॥ २५ ॥

१. त्रिगुणमयी मायाद्वारा उत्पन्न भएको अन्तःकरणसहित इन्द्रियहरू आ-आफ्नै विषयहरूमा विचरण गर्नु नै 'गुणहरूको गुणहरूमा विचरण' हो।

**मां च योऽव्यभिचारेण, भक्ति-योगेन सेवते।**
**स गुणान् समतीत्यैतान्, ब्रह्म-भूयाय कल्पते॥ २६॥**

साथै, जुन पुरूषले अव्यभिचारी भक्तियोगद्वारा* मलाई निरन्तर भज्दछ, उसले पनि यी तीनै गुणहरूलाई राम्ररी पार गरेर सच्चिदानन्दघन ब्रह्मालाई प्राप्त गर्नका लागि योग्य बन्दछ॥ २६॥

**ब्रह्मणो हि प्रतिष्ठाह, -ममृतस्या-व्ययस्य च।**
**शाश्वतस्य च धर्मस्य, सुखस्यै-कान्तिकस्य च॥ २७॥**

किनकि त्यस अविनाशी परब्रह्मको, अमृतको, नित्यधर्मको र अखण्ड एकरस आनन्दको आश्रय म नै हुँ॥ २७॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, गुण-त्रय-विभाग-योगो नाम चतुर्दशोऽध्यायः॥ १४॥

~~o~~

* केवल एक सर्वशक्तिमान् परमेश्वर वासुदेव भगवान्लाई नै आफ्नो स्वामी मानेर, स्वार्थ र अभिमानलाई त्यागेर, श्रद्धा र भावसहित, परम प्रेमले निरन्तर चिन्तन गर्नुलाई 'अव्यभिचारी भक्तियोग' भनिन्छ।

ॐ श्रीपरमात्मने नमः

# अथ पञ्चदशोऽध्यायः

## श्रीभगवानुवाच

**ऊर्ध्व-मूल-मधःशाख, -मश्वत्थं प्राहु-रव्ययम्।**
**छन्दांसि यस्य पर्णानि, यस्तं वेद स वेदवित्॥ १॥**

**श्रीभगवान्ले भन्नुभयो**—आदिपुरुष परमेश्वररूपी मूल[१] र ब्रह्मारूपी हाँगा[२] भएको, वेद जसका पातहरू[३] बताइएका छन्–जुन संसाररूपी पीपलको

---

१. आदिपुरुष नारायण वासुदेव भगवान् नै नित्य र अनन्त तथा सबैका आधार हुनाले र सबैभन्दामाथि नित्यधाममा सगुणरूपले वास गर्ने कारणले ऊर्ध्व नामले चिनिनुहुन्छ र त्यस्ता मायापति, सर्वशक्तिमान् परमेश्वर नै यस संसाररूपी वृक्षका कारण हुनुहुन्छ। यसर्थ, यस संसाररूपी वृक्षलाई 'ऊर्ध्वमूलवाला' भनिन्छ।

२. त्यस आदिपुरुष परमेश्वरबाट उत्पन्न हुने भएका कारण तथा नित्यधामदेखि तल ब्रह्मलोकमा वास गर्ने भएका कारण, हिरण्यगर्भरूपी ब्रह्मालाई परमेश्वरको तुलनामा 'अधः' भनिएको हो र त्यही यो संसारलाई विस्तार गर्नेवाला भएका कारण यसको मुख्य शाखा हो। यसर्थ, यस संसारवृक्षलाई 'अधःशाखावाला' भनिन्छ।

३. यस वृक्षको मूल कारण परमात्मा अविनाशी छ तथा अनादिकालदेखि नै यसको परम्परा चल्दै आउँछ। यसर्थ, यस संसारवृक्षलाई 'अविनाशी' भनिन्छ।

वृक्षलाई अविनाशी[१] भन्दछन्, त्यस संसाररूपी वृक्षलाई जुन पुरुषले मूलसहित तत्त्वपूर्वक जान्दछ, ऊ वेदको तात्पर्यलाई जान्नेवाला हो[२] ॥ १ ॥

**अधश्-चोर्ध्वं प्रसृतास्-तस्य शाखा**
**गुण-प्रवृद्धा विषय-प्रवालाः।**
**अधश्-च मूला-न्यनु-सन्ततानि**
**कर्मानु-बन्धीनि मनुष्य-लोके ॥ २ ॥**

त्यस संसारवृक्षका तीनै गुणरूपी जलद्वारा बढेको एवं विषय-भोगरूपी प्रवाल पालुवा[३] देव, मनुष्य र तिर्यक् आदि योनिरूपी शाखाहरू[४] तल

---

१. यस वृक्षको शाखारूपी ब्रह्मबाट प्रकट हुने र यज्ञादिक कर्महरूद्वारा यस संसारवृक्षको रक्षा र वृद्धि गर्ने र शोभालाई बढाउने भएका कारणले वेदलाई 'पात' भनेर भनिएको हो।

२. भगवान्‌को योगमायाले उत्पन्न भएको संसार क्षणभङ्गुर, नाशवान् र दुःखरूप छ। यसको चिन्तनलाई त्यागेर केवल परमेश्वरकै नित्य-निरन्तर, अनन्यप्रेमले चिन्तन गर्नु 'वेदका तात्पर्यलाई जान्नु' हो।

३. शब्द, स्पर्श, रूप, रस र गन्ध—यी पाँच स्थूलदेह र इन्द्रियका अपेक्षामा सूक्ष्म हुनाले ती शाखाहरूलाई 'कोपल' भनेर भनिन्छ।

४. मुख्य शाखारूपी ब्रह्माबाट सम्पूर्ण लोकहरू-सहित देव, मनुष्य र तिर्यक् आदि योनिहरूको उत्पत्ति र विस्तार भएको छ। यसर्थ, तिनलाई यहाँ शाखाहरूका रूपमा वर्णन गरिएको छ।

र माथि सबैतिर फैलिएका छन् तथा मनुष्य लोकमा[१] कर्मअनुसार बाँध्ने अहंता-ममता र वासनारूपी जराहरू पनि तल र माथि सबै लोकमा व्याप्त भइरहेका छन्॥ २॥

**न रूप-मस्येह तथोप-लभ्यते**
**नान्तो न चादिर्-न च सम्प्रतिष्ठा।**
**अश्वत्थ-मेनं सुविरूढ-मूल-**
**मसङ्ग-शस्त्रेण दृढेन छित्त्वा॥ ३॥**

यस संसारवृक्षको स्वरूप जस्तो बताइएको छ, त्यस्तो यहाँ विचारकालमा पाइँदैन[२], किनकि न यसको आदि छ[३], न अन्त छ[४], न त यसको स्थिति नै राम्रो

१. अहंता, ममता र वासनारूपी मोह केवल मनुष्ययोनिमा कर्मद्वारा बाँधिन्छ, भन्नुको तात्पर्य यो हो कि अन्य सबै योनिमा त केवल पूर्व गरिएका कर्महरूको फल भोग्ने अधिकार छ। अर्थात् मनुष्य योनिमा नयाँ कर्म गर्ने अधिकार पनि छ।

२. यस संसारको जस्तो स्वरूप शास्त्रमा वर्णन गरिएको छ अर्थात् देखिएको र सुनिएको छ, त्यस्तै तत्त्वज्ञान हुनुको पछि केही पाईदैन, जसरी आँखा खुलेपछि सपनाको संसार पाइँदैन।

३. यसको आदि छैन, यो भन्नुको कारण यो हो कि यसको परम्परा कहिलेदेखि चलि आएको हो, यसको केही जानकारी नै छैन।

४. यसको अन्त छैन, यो भन्नुको कारण यो हो कि यसको परम्परा कहिलेसम्म चल्छ, यसको केही जानकारी नै छैन।

किसिमको छ[1]। यसर्थ, यस अहंता, ममता र वासनारूपी अति दृढ मूल भएको संसाररूपी पीपलवृक्षलाई दृढ वैराग्यरूपी[2] शस्त्रद्वारा काटेर[3] ॥ ३ ॥

**ततः पदं तत् परि–मार्गितव्यं**
**यस्मिन् गता न निवर्तन्ति भूयः ।**
**तमेव चाद्यं पुरुषं प्रपद्ये**
**यतः प्रवृत्तिः प्रसृता पुराणी ॥ ४ ॥**

त्यसपछि त्यस परमपदरूपी परमेश्वरलाई ठीक तरिकाले खोज्नुपर्दछ, जहाँ गएका पुरुषहरू फेरि यस संसारमा फर्किएर आउँदैनन् र जुन परमेश्वरबाट यस पुरातन संसारवृक्षको प्रवृत्ति सविस्तार प्राप्त भएको छ, त्यही आदिपुरुष नारायणको म शरण हुँ भन्ने दृढ निश्चय गरेर त्यस परमेश्वरको मनन र निदिध्यासन गर्नुपर्दछ ॥ ४ ॥

---

१. यसको राम्रो स्थिति पनि छैन भन्नुको प्रयोजन वास्तवमा यो क्षणभङ्गुर र नाशवान् छ भन्नु पनि हो।

२. ब्रह्मलोकसम्मका भोग क्षणिक र नाशवान् छन् भन्ने सम्झिएर यस संसारका समस्त विषयभोगहरूमा सत्ता, सुख, प्रीति र रमणीयता भासित नहुनु नै दृढ 'वैराग्यरूपी शस्त्र' हो।

३. स्थावर, जङ्गमरूपी यावन्मात्र संसारको चिन्तनका तथा अनादिकालदेखि अज्ञानद्वारा दृढ भएको अहंता, ममता र वासनारूपी जरोलाई त्याग गर्नु नै संसारवृक्षको अवान्तर 'मूलहरूसहित काट्नु' हो।

निर्मान-मोहा जित-सङ्ग-दोषा
अध्यात्म-नित्या विनिवृत्त-कामाः ।
द्वन्द्वैर्-विमुक्ताः सुख-दुःख-सञ्ज्ञैर्-
गच्छन्-त्यमूढाः पद-मव्ययं तत् ॥ ५ ॥

जसको मान र मोह नष्ट भएको छ, जसले आसक्तिरूपी दोषलाई जितेको छ, जसको परमात्माको स्वरूपमा नित्य स्थिति छ र जसका कामनाहरू पूर्णरूपमा नष्ट भएका छन्—ती सुखदुःख नामक द्वन्द्वहरूदेखि मुक्त भएका ज्ञानीजनले त्यस अविनाशी परमपदलाई प्राप्त गर्दछन् ॥ ५ ॥

न तद्-भासयते सूर्यो, न शशाङ्को न पावकः ।
यद्-गत्वा न निवर्तन्ते, तद्धाम परमं मम ॥ ६ ॥

त्यस स्वयं प्रकाशमय परमपदलाई न सूर्यले प्रकाशित गर्न सक्दछ, न चन्द्रमाले र न त अग्निले नै; जुन परमपदलाई प्राप्त गरेपछि मनुष्य फर्किएर संसारमा आउँदैन, त्यही मेरो परमधाम* हो ॥ ६ ॥

ममैवांशो जीव-लोके, जीव-भूतः सनातनः ।
मनःषष्ठा-नीन्द्रियाणि, प्रकृति-स्थानि कर्षति ॥ ७ ॥

यस देहको यो सनातन जीवात्मा मेरै अंश

* 'परमधाम' को अर्थ गीता अध्याय ८ श्लोक २१ मा हेर्नुस्।

हो* र त्यसले नै यी प्रकृतिमा स्थित मन र पाँचै इन्द्रियलाई आकर्षित गर्दछ॥ ७॥

**शरीरं यद-वाप्नोति, यच्चा-प्युत्क्राम-तीश्वरः।**
**गृहीत्वैतानि संयाति, वायुर्गन्धा-निवाशयात्॥ ८॥**

वायुले गन्धको ठाउँबाट गन्धलाई जसरी ग्रहण गरेर लैजान्छ, त्यसैगरी देहादिको स्वामी जीवात्माले पनि जुन शरीरको त्याग गर्दछ, त्यसैद्वारा यी मनसहितका इन्द्रियहरूलाई ग्रहण गरी त्यसपछि जुन शरीर प्राप्त गर्दछ, त्यसैमा जान्छ॥ ८॥

**श्रोत्रं चक्षुः स्पर्शनं च, रसनं घ्राण-मेव च।**
**अधिष्ठाय मनश्-चायं, विषया-नुपसेवते॥ ९॥**

यो जीवात्माले कान, आँखा, छाला, जिब्रो, नाक र मनलाई आश्रय बनाई अर्थात् यी सबैका सहारामा नै विषयहरूलाई भोग गर्दछ॥ ९॥

**उत्क्रामन्तं स्थितं वापि, भुञ्जानं वा गुणान्वितम्।**
**विमूढा नानु-पश्यन्ति, पश्यन्ति ज्ञान-चक्षुषः॥ १०॥**

शरीरलाई छोडेर गइरहेको, शरीरमा स्थित

* जसरी विभागरहित स्थित रहँदा पनि महाकाश घैंटोमा पृथक्-पृथक्जस्तै प्रतीत हुन्छ, त्यसैगरी सबै भूतहरूमा एकैरूपले स्थित भएर पनि परमात्मा पृथक्-पृथक्जस्तै प्रतीत हुन्छ, यसैबाट देहमा स्थित जीवात्मालाई भगवान्ले आफ्नो 'सनातन अंश' भन्नुभएको छ।

रहेको, विषयहरूलाई भोग्दै गरेको र यी तीनै गुणहरूले युक्त भएकालाई पनि अज्ञानीजनले जान्दैनन्, केवल ज्ञानरूपी आँखा भएका विवेकशील ज्ञानीले नै तत्त्वसाथ जान्दछन्॥ १०॥

**यतन्तो योगिनश्-चैनं, पश्यन्त्यात्म-न्यवस्थितम्।**
**यतन्तोऽप्य-कृतात्मानो, नैनं पश्यन्-त्यचेतसः॥ ११॥**

यत्न गर्ने योगीहरू पनि आफ्नो हृदयमा स्थित यस आत्मालाई तत्त्वसाथ जान्दछन्, तर जसले आफ्नो अन्तःकरणलाई शुद्ध गरेका छैनन्, यस्ता अज्ञानीजनले त यत्न गरिरहेर पनि यस आत्मालाई जान्दैनन्॥ ११॥

**यदादित्य-गतं तेजो, जगद्-भासयतेऽखिलम्।**
**यच्चन्द्रमसि यच्चाग्नौ, तत्तेजो विद्धि मामकम्॥ १२॥**

सूर्यमा स्थित जुन तेजले सम्पूर्ण जगत्लाई प्रकाशित गर्दछ तथा जुन तेज चन्द्रमामा छ र अग्निमा छ, त्यसलाई तिमीले मेरै तेज जान॥ १२॥

**गामाविश्य च भूतानि, धारया-म्यह-मोजसा।**
**पुष्णामि चौषधीः सर्वाः, सोमो भूत्वा रसात्मकः॥ १३॥**

म नै पृथ्वीमा प्रवेश गरेर आफ्नो शक्तिले सबै भूतहरूलाई धारण गर्दछु र रसस्वरूप अर्थात् अमृतमय चन्द्रमा भएर सम्पूर्ण औषधिहरूलाई अर्थात् वनस्पतिहरूलाई पुष्ट गर्दछु॥ १३॥

**अहं वैश्वानरो भूत्वा, प्राणिनां देह-माश्रितः।**
**प्राणापान-समायुक्तः, पचाम्यन्नं चतुर्विधम्॥ १४॥**

म नै सबै प्राणीहरूको शरीरमा स्थित रहने प्राण र अपानले युक्त वैश्वानर अग्निरूप भएर चार[1] प्रकारका अन्नलाई पचाउँछु॥ १४॥

**सर्वस्य चाहं हृदि सन्निविष्टो**
**मत्तः स्मृतिर्-ज्ञान-मपोहनं च।**
**वेदैश्-च सर्वै-रहमेव वेद्यो**
**वेदान्त-कृद्-वेदविदेव चाहम्॥ १५॥**

म नै सबै प्राणीहरूका हृदयमा अन्तर्यामी-रूपले स्थित छु, स्मृति, ज्ञान र अपोहन[2] मबाट नै हुन्छ भने सबै वेदहरूद्वारा जान्नका लागि योग्य[3] म नै

१. भक्ष्य, भोज्य, लेह्य र चोष्य गरी चार प्रकारका अन्न हुन्छन्। तीमध्ये जुन चपाएर खाइन्छ, त्यो 'भक्ष्य' हो, जस्तै रोटी आदि। जुन निलिन्छ, त्यो 'भोज्य' हो; जस्तै दूध आदि। जुन चाटिन्छ, त्यो 'लेह्य' हो, जस्तै चटनी आदि। जुन चूसिन्छ, त्यो 'चोष्य' हो, जस्तैः ऊखु आदि।

२. विचारद्वारा बुद्धिमा रहनेवाला संशय-विपर्यय आदि दोषहरूलाई हटाउनुको नाम 'अपोहन' हो।

३. सर्ववेदहरूको तात्पर्य परमेश्वरलाई जान्नु हो, यसर्थ सबै वेदहरूद्वारा 'जान्नका लागि योग्य' एक परमेश्वर नै हो।

छु। साथै, वेदान्तको कर्ता र वेदलाई जान्नेवाला पनि म नै हुँ॥ १५॥

**द्वाविमौ पुरुषौ लोके, क्षरश्‌-चाक्षर एव च।**
**क्षरः सर्वाणि भूतानि, कूटस्थोऽक्षर उच्यते॥ १६॥**

यस संसारमा नाशवान् र अविनाशी यीदुई प्रकारका* पुरुष छन्। यिनमा सम्पूर्ण भूतप्राणीहरूको शरीरलाई नाशवान् र जीवात्मालाई अविनाशी भनेर भनिन्छ॥ १६॥

**उत्तमः पुरुषस्‌-त्वन्यः, परमात्मे-त्युदाहृतः।**
**यो लोक-त्रय-माविश्य, बिभर्‌-त्यव्यय ईश्वरः॥ १७॥**

यी दुवैभन्दा उत्तम पुरुष त अर्कै छ, जो तीनै लोकहरूमा प्रवेश गरेर सबैको धारण-पोषण गर्दछ। यसैले, अविनाशी परमेश्वर र परमात्मा भनिएको हो॥ १७॥

**यस्मात् क्षर-मतीतोऽह,-मक्षरादपि चोत्तमः।**
**अतोऽस्मि लोके वेदे च, प्रथितः पुरुषोत्तमः॥ १८॥**

किनकि म नाशवान् जडवर्ग-क्षेत्रदेखि त सर्वथा अतीत छु र अविनाशी जीवात्माभन्दा पनि

* गीता अध्याय ७ श्लोक ४-५ मा जुन अपरा र परा प्रकृतिको नामले बताइएका छन् तथा अध्याय १३ श्लोक १ मा जुन क्षेत्र र क्षेत्रज्ञको नामले चिनाइएका छन्, ती दुवैको यहाँ क्षर र अक्षर नामले वर्णन गरिएको छ।

उत्तम छु। यसर्थ, लोकमा र वेदहरूमा पनि पुरुषोत्तम नामले प्रसिद्ध छु॥ १८॥

**यो मामेवम-सम्मूढो, जानाति पुरुषोत्तमम्।**
**स सर्व-विद्-भजति मां, सर्व-भावेन भारत॥ १९॥**

हे भारत! जुन ज्ञानी पुरुषले मलाई यसप्रकार तत्त्वपूर्वक पुरुषोत्तम भन्ने जान्दछ, त्यस सर्वज्ञ पुरुषले सबै प्रकारले निरन्तर म वासुदेव परमेश्वरलाई नै भज्दछ॥ १९॥

**इति गुह्य-तमं शास्त्र,-मिद-मुक्तं मयानघ।**
**एतद्-बुद्ध्वा बुद्धिमान्-स्यात्, कृत-कृत्यश्-च भारत॥ २०॥**

हे निष्पाप अर्जुन! यसप्रकार यो अति रहस्ययुक्त गोपनीय शास्त्र मद्वारा बताइयो। यसलाई तत्त्वपूर्वक जानेर मनुष्य ज्ञानवान् र कृतार्थ हुन्छ॥ २०॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, पुरुषोत्तम-योगो नाम पञ्चदशोऽध्यायः॥ १५॥

~~०~~

ॐ श्रीपरमात्मने नमः

# अथ षोडशोऽध्यायः

## श्रीभगवानुवाच

**अभयं सत्त्व-संशुद्धिर्,-ज्ञान-योग-व्यवस्थितिः ।**
**दानं दमश्-च यज्ञश्-च, स्वाध्यायस्-तप आर्जवम् ॥ १ ॥**

**श्रीभगवान्ले भन्नुभयो**—भयको सर्वथा अभाव, अन्तःकरणको पूर्ण निर्मलता, तत्त्वज्ञानका लागि ध्यानयोगमा निरन्तर दृढ स्थिति[1] र सात्त्विक दान[2] इन्द्रियहरूको दमन, भगवान्, देवता र गुरुजनहरूको पूजा तथा अग्निहोत्र आदि उत्तम कर्महरूको आचरण एवं वेदशास्त्रहरूको पठनपाठन तथा भगवान्का नाम र गुणहरूको कीर्तन, स्वधर्मपालनका लागि कष्टसहन अनि शरीर तथा इन्द्रियसहित अन्तःकरणको सरलता ॥ १ ॥

**अहिंसा सत्य-मक्रोधस्,-त्यागः शान्ति-रपैशुनम् ।**
**दया भूतेष्व-लोलुप्त्वं, मार्दवं ह्री-रचापलम् ॥ २ ॥**

मन, वाणी र शरीरले कुनै प्रकारले पनि कसैलाई

---

१. परमात्माको स्वरूपलाई तत्त्वपूर्वक जान्नका लागि सच्चिदानन्दघन परमात्माको स्वरूपमा एकैभावले ध्यानको निरन्तर गाढा स्थितिको नाम नै 'ज्ञानयोगव्यवस्थिति' भन्ने बुझ्नुपर्दछ।

२. गीता अध्याय १७ श्लोक २० मा जसको विस्तार गरिएको छ।

कष्ट नदिनु, यथार्थ र प्रिय बोली[1], आफ्नो कुभलो गर्नेप्रति पनि क्रोध नहुनु, कर्ममा कर्तापनको अभिमानको त्याग, अन्तःकरणको उपरति अर्थात् चित्तको चञ्चलताको अभाव, कसैको पनि निन्दादि नगर्नु, सबै भूतप्राणीहरूमा हेतुरहित दया, इन्द्रियको विषयहरूसित संयोग हुँदा पनि तीप्रति आसक्ति नहुनु, कोमलता, लोक र शास्त्रविरुद्ध आचरणमा लज्जा र व्यर्थ चेष्टाहरूको अभाव॥ २॥

**तेजः क्षमा धृतिः शौच,-मद्रोहो नातिमानिता।**
**भवन्ति सम्पदं दैवी,-मभि-जातस्य भारत॥ ३॥**

तेज[2], क्षमा, धैर्य, बाहिरको शुद्धि[3] एवं कसैमा पनि शत्रुभाव नहुनु र आफूमा पूज्यताको अभिमानको अभाव— हे अर्जुन! यी सबै दैवी सम्पदा लिएर उत्पन्न भएका पुरुषहरूका लक्षण हुन्॥ ३॥

**दम्भो दर्पोऽभिमानश्च, क्रोधः पारुष्य-मेव च।**
**अज्ञानं चाभि-जातस्य, पार्थ सम्पद-मासुरीम्॥ ४॥**

१. अन्तःकरण र इन्द्रियहरूद्वारा जस्तो निश्चय गरिएको छ, त्यस्तै नै प्रिय शब्दहरूमा भन्नुको नाम 'सत्यभाषण' हो।

२. श्रेष्ठ पुरुषहरूको त्यस शक्तिको नाम 'तेज' हो कि जसको प्रभावले तिनको सामुन्ने विषयासक्त र नीच प्रकृतिवाला मनुष्य पनि प्रायः अन्यायाचरणदेखि पछि हटेर तिनको कथनानुसार श्रेष्ठ कर्महरूमा प्रवृत्त हुन्छन्।

३. गीता अध्याय १३ श्लोक ७ को टिप्पणी हेर्नु पर्दछ।

हे पार्थ! दम्भ, घमण्ड र अभिमान तथा क्रोध, कठोरता र अज्ञान—यी सबै आसुरी सम्पदा लिएर उत्पन्न भएका पुरुषका लक्षण हुन्॥ ४॥

**दैवी सम्पद्-विमोक्षाय, निबन्धा-यासुरी मता।**
**मा शुचः सम्पदं दैवी,-मभि-जातोऽसि पाण्डव॥ ५॥**

दैवी सम्पदा मुक्तिका लागि र आसुरी सम्पदा बन्धनका लागि मानिएका छन्। यसर्थ, हे अर्जुन! तिमी शोक नगर, किनकि तिमी दैवी सम्पदालाई लिएर उत्पन्न भएका छौ॥ ५॥

**द्वौ भूत-सर्गौ लोकेऽस्मिन्, दैव आसुर एव च।**
**दैवो विस्तरशः प्रोक्त, आसुरं पार्थ मे शृणु॥ ६॥**

हे अर्जुन! यस लोकमा भूतहरूको सृष्टि अर्थात् मनुष्यसमुदाय दुई प्रकारको छ— दैवी प्रकृतिवाला र आसुरी प्रकृतिवाला। तीमध्ये दैवी प्रकृतिवालाको बारेमा त सविस्तार बताइयो, अब तिमीले आसुरी प्रकृतिवाला मनुष्य-समुदाय बारे पनि सविस्तार मबाट सुन॥ ६॥

**प्रवृत्तिं च निवृत्तिं च, जना न विदु-रासुराः।**
**न शौचं नापि चाचारो, न सत्यं तेषु विद्यते॥ ७॥**

आसुरस्वभाववाला मनुष्यले प्रवृत्ति र निवृत्ति— यी दुवैलाई जान्दैनन्। यसर्थ, तिनमा न त

भित्रबाहिरको शुद्धि छ, न श्रेष्ठ आचरण छ र न सत्यभाषण नै छ॥ ७॥

**असत्य-मप्रतिष्ठं ते, जगदाहु-रनीश्वरम्।**
**अपरस्पर-सम्भूतं, किमन्यत्-काम-हैतुकम्॥ ८॥**

ती आसुरी प्रकृति भएका मनुष्यहरू जगत् आश्रयरहित, सर्वथा असत्य र विना ईश्वर आफैँ केवल स्त्री र पुरुषको संयोगले उत्पन्न भएको हो, अतएव, केवल काम नै यसको कारण हो, यसबाहेक अरु के छ र? भन्ने गर्दछन्॥ ८॥

**एतां दृष्टि-मवष्टभ्य, नष्टात्मानोऽल्प-बुद्धयः।**
**प्रभवन्-त्युग्र-कर्माणः, क्षयाय जगतोऽहिताः॥ ९॥**

यस मिथ्याज्ञानलाई अवलम्बन गरी जसको स्वभाव नष्ट भएको छ, तथा जसको बुद्धि मन्द छ, ती सबैको अपकार गर्ने क्रूरकर्मी मनुष्य केवल जगत्को विनाशका लागि मात्रै समर्थ हुन्छन्॥ ९॥

**काम-माश्रित्य दुष्पूरं, दम्भ-मान-मदान्विताः।**
**मोहाद्-गृहीत्वा-सद्-ग्राहान्, प्रवर्तन्तेऽशुचिव्रताः॥ १०॥**

ती दम्भ, मान र मदले युक्त मनुष्य कुनै पनि तरिकाले पूरा नहुने कामनाहरूको आश्रय लिएर, अज्ञान-पूर्वक मिथ्या सिद्धान्तहरूलाई ग्रहण गर्दै भ्रष्ट आचरण-हरूलाई धारण गरी संसारमा विचरण गर्दछन्।॥ १०॥

**चिन्ता-मपरिमेयां च, प्रलयान्ता-मुपाश्रिताः।**
**कामोप-भोग-परमा, एतावदिति निश्चिताः॥ ११॥**

तीमृत्युपर्यन्त रहने असङ्ख्य चिन्ताहरूको आश्रय लिनेवाला, विषयभोगहरूलाई भोग्न तत्पर रहने र 'यति नै सुख छ' भनेर मान्ने खालका हुन्छन्॥ ११॥

**आशा-पाश-शतैर्-बद्धाः, काम-क्रोध-परायणाः।**
**ईहन्ते काम-भोगार्थ,-मन्यायेनार्थ-सञ्चयान्॥ १२॥**

ती आशाका सयौँ बन्धनहरूमा बाँधिएका मनुष्यहरू कामक्रोधका परायण भएर विषयभोग-हरूका लागि अन्यायपूर्वक धनादि पदार्थहरूको सङ्ग्रह गर्ने चेष्टा गर्दछन्॥ १२॥

**इदमद्य मया लब्ध,-मिमं प्राप्स्ये मनोरथम्।**
**इदमस्तीद-मपि मे, भविष्यति पुनर्धनम्॥ १३॥**

तिनले 'मैले आज यो प्राप्त गरेको छु, अब यो मनको इच्छा पूरा गर्दछु, मसित यति धन छ, अब यति हुन्छ भनेर सोच्ने गर्दछन्।'॥ १३॥

**असौ मया हतः शत्रुर्,-हनिष्ये चापरानपि।**
**ईश्वरोऽह-महं भोगी, सिद्धोऽहं बलवान् सुखी॥ १४॥**

त्यो शत्रु मद्वारा मारियो, अब अर्कोलाई पनि मार्दछु। म ईश्वर हुँ, ऐश्वर्यलाई भोग्नेवाला हुँ। म

सबै सिद्धिहरूले युक्त छु र बलवान् तथा सुखी छु॥ १४॥

**आढ्योऽभि-जनवानस्मि, कोऽन्योऽस्ति सदृशो मया।**
**यक्ष्ये दास्यामि मोदिष्य, इत्य-ज्ञान-विमोहिताः॥ १५॥**
**अनेक-चित्त-विभ्रान्ता, मोह-जाल-समावृताः।**
**प्रसक्ताः काम-भोगेषु, पतन्ति नरकेऽशुचौ॥ १६॥**

म निकै धनी र ठूलो कुटुम्बवाला हुँ। म बराबरी अर्को को छ र? म नै यज्ञ गर्ने छु, दान गर्ने छु र आमोद-प्रमोद गर्ने छु। यसप्रकार अज्ञानले मोहित रहनेवाला तथा अनेक प्रकारले भ्रमित चित्तवाला मोहरूप जालले समावृत एवं विषयभोगहरूमा अत्यन्त आसक्त असुरहरू भयानक अपवित्र नर्कमा पर्दछन्॥ १५-१६॥

**आत्म-सम्भाविताः स्तब्धा, धन-मान-मदान्विताः।**
**यजन्ते नाम यज्ञैस्-ते, दम्भेनाविधि-पूर्वकम्॥ १७॥**

ती आफूले आफैँलाई श्रेष्ठ मान्ने घमण्डी पुरुष धन र मानको मदले युक्त भएर केवल नाममात्रका यज्ञहरूद्वारा पाखण्डपूर्वक शास्त्रविधिरहित यजन गर्दछन्॥ १७॥

**अहङ्कारं बलं दर्पं, कामं क्रोधं च संश्रिताः।**
**मामात्म-पर-देहेषु, प्रद्विषन्तोऽभ्य-सूयकाः॥ १८॥**

तीं अहङ्कार, बल, घमण्ड, कामना र क्रोधादि परायण र अर्कालाई निन्दा गर्ने पुरुष आफूमा र अरूमा स्थित म अन्तर्यामीसित द्वेष गर्ने हुन्छन्॥ १८॥

**तानहं द्विषतः क्रूरान्, संसारेषु नराधमान्।**
**क्षिपाम्यजस्त्र-मशुभा, -नासुरीष्वेव योनिषु॥ १९॥**

ती द्वेष गर्ने पापाचारी र क्रूरकर्मी नराधमहरूलाई मैले संसारमा बारम्बार आसुरी योनिहरूमै पारिदिन्छु॥ १९॥

**आसुरीं योनि-मापन्ना, मूढा जन्मनि जन्मनि।**
**मामप्राप्यैव कौन्तेय, ततो यान्-त्यधमां गतिम्॥ २०॥**

हे अर्जुन! ती मूर्खहरूले मलाई प्राप्त नगरी जन्मजन्ममा आसुरी योनिलाई प्राप्त गर्दछन् र त्यसभन्दा पनि अति नीच गतिलाई प्राप्त गर्दछन्, अर्थात् घोर नरकमा पर्दछन्॥ २०॥

**त्रिविधं नरकस्येदं, द्वारं नाशन-मात्मनः।**
**कामः क्रोधस्-तथा लोभस्, -तस्मा-देतत् त्रयं त्यजेत्॥ २१॥**

काम, क्रोध तथा लोभ गरी यी तीन प्रकारका नर्कका द्वार* आत्मालाई नाश गर्ने र त्यसलाई अधोगतितिर लिएर जानेखाले छन्। त्यसैले, यी तीनैलाई त्यागिदिनु पर्दछ॥ २१॥

---

* सर्व अनर्थहरूको मूल र नर्कको प्राप्तिमा हेतु हुनाले यहाँ काम, क्रोध र लोभलाई 'नर्कको ढोका' भनिन्छ।

**एतैर्-विमुक्तः कौन्तेय, तमो-द्वारैस्-त्रिभिर्-नरः ।**
**आचर-त्यात्मनः श्रेयस्,-ततो याति परां गतिम् ॥ २२ ॥**

हे अर्जुन ! यी तीनै ओटा नर्कका द्वारहरूदेखि मुक्त पुरुषले आफ्नो कल्याणको आचरण गर्दछ*, यसैबाट ऊ परमगतितिर जान्छ, अर्थात् मलाई प्राप्त गर्दछ ॥ २२ ॥

**यः शास्त्र-विधि-मुत्सृज्य, वर्तते काम-कारतः ।**
**न स सिद्धि-मवाप्नोति, न सुखं न परां गतिम् ॥ २३ ॥**

जुन पुरुषले शास्त्रविधिलाई त्यागेर आफ्नो इच्छाले मनोमानी आचरण गर्दछ, उसले न सिद्धिलाई प्राप्त गर्दछ, न परमगतिलाई र न सुखलाई नै प्राप्त गर्दछ ॥ २३ ॥

**तस्माच्-छास्त्रं प्रमाणं ते, कार्या-कार्य-व्यवस्थितौ ।**
**ज्ञात्वा शास्त्र-विधानोक्तं, कर्म कर्तु-मिहार्हसि ॥ २४ ॥**

यसैले, तिम्रालागि यो कर्तव्य र अकर्तव्यको व्यवस्थामा शास्त्र नै प्रमाण हो भन्ने जानेर तिमी शास्त्रविधि अनुसारका कर्म नै गर्न योग्य छौ ॥ २४ ॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, दैवासुर-सम्पद्-विभाग-योगो नाम षोडशोऽध्यायः ॥ १६ ॥

~~~0~~~

* आफ्नो उद्धारका लागि भगवदाज्ञानुसार विचरण गर्नु नै 'आफ्नो कल्याणको आचरण गर्नु' हो ।
~~~

ॐश्रीपरमात्मने नमः

# अथ सप्तदशोऽध्यायः

## अर्जुन उवाच

**ये शास्त्र-विधि-मुत्सृज्य, यजन्ते श्रद्धयान्विताः।**
**तेषां निष्ठा तु का कृष्ण, सत्त्वमाहो रजस्-तमः॥ १॥**

**अर्जुनले भने**—हे कृष्ण! जुन मनुष्यले शास्त्र-विधिलाई त्यागेर श्रद्धाले युक्त हुँदै देवादिको पूजन गर्दछन्, तिनको स्थिति चाहिँ कस्तो हुन्छ? सात्त्विकी हुन्छ कि राजसी अथवा तामसी हुन्छ?॥ १॥

## श्रीभगवानुवाच

**त्रि-विधा भवति श्रद्धा, देहिनां सा स्वभावजा।**
**सात्त्विकी राजसी चैव, तामसी चेति तां शृणु॥ २॥**

**श्रीभगवान्‌ले भन्नुभयो**—मनुष्यहरूको त्यो शास्त्रीय संस्कारले रहित केवल स्वभावद्वारा उत्पन्न हुने श्रद्धा* सात्त्विकी, राजसी र तामसी भेद गरी तीन प्रकारको नै हुन्छ। त्यस विषयमा तिमीले सुन॥ २॥

**सत्त्वानु-रूपा सर्वस्य, श्रद्धा भवति भारत।**
**श्रद्धामयोऽयं पुरुषो, यो यच्छ्रद्धः स एव सः॥ ३॥**

हे भारत! सबै मनुष्यको श्रद्धा तिनका

---

* अनन्त जन्महरूमा गरिएका कर्महरूका सञ्चित संस्कारद्वारा उत्पन्न भएको श्रद्धा 'स्वभावजा' श्रद्धा मानिन्छ।

अन्तःकरणको स्वभाव अनुरूप हुन्छ। यो पुरुष श्रद्धामय छ, यसर्थ जुन पुरुष जस्तो श्रद्धावाला छ, ऊ स्वयं पनि त्यही नै हुन्छ॥ ३॥

**यजन्ते सात्त्विका देवान्, यक्ष-रक्षांसि राजसाः।**
**प्रेतान् भूतगणांश्-चान्ये, यजन्ते तामसा जनाः॥ ४॥**

सात्त्विक पुरुषहरूले देवताहरूलाई पूज्दछन्, राजसी पुरुषले यक्ष र राक्षसलाई र अन्य तामसी मनुष्यहरूले भने प्रेत र भूतगणहरूलाई पूज्दछन्॥ ४॥

**अशास्त्र-विहितं घोरं, तप्यन्ते ये तपो जनाः।**
**दम्भा-हङ्कार-संयुक्ताः, काम-राग-बलान्विताः॥ ५॥**

जुन मनुष्यहरू शास्त्रविधिरहित केवल मनः कल्पित घोर तपको अभ्यास गर्दछन् तथा दम्भ र अहङ्कारले युक्त एवं कामना, आसक्ति बलको अभिमानले पनि युक्त भएका हुन्छन्॥ ५॥

**कर्शयन्तः शरीरस्थं, भूत-ग्राम-मचेतसः।**
**मां चैवान्तःशरीरस्थं, तान्-विद्ध्यासुर-निश्चयान्॥ ६॥**

जो शरीररूपले स्थित भूतसमुदाय र अन्तःकरणमा स्थित म परमात्मालाई पनि कमजोर (कृश) तुल्याउने*

* शास्त्रविरुद्ध उपवासादि घोर आचरणहरूद्वारा शरीरलाई सुकाउनु र भगवान्‌को अंशस्वरूप जीवात्मालाई क्लेश दिनु, भूतसमुदाय तथा अन्तर्यामी परमात्मालाई 'कमजोर (कृश) तुल्याउनु' हो।

खालका छन्, ती अज्ञानीहरूलाई तिमीले आसुर-स्वभावयुक्त जान॥ ६ ॥

**आहारस्-त्वपि सर्वस्य, त्रिविधो भवति प्रियः ।**
**यज्ञस्-तपस्-तथा दानं, तेषां भेद-मिमं शृणु ॥ ७ ॥**

भोजन पनि सबैलाई आ-आफ्नै प्रकृतिअनुसार तीन प्रकारले प्रिय हुन्छ। त्यसैगरी, यज्ञ, तप र दान पनि तीन-तीन प्रकारका हुन्छन्। तिनका यी पृथक्-पृथक् भेदलाई तिमीले जान॥ ७ ॥

**आयुः-सत्त्व-बलारोग्य,-**
**सुख-प्रीति-विवर्धनाः ।**
**रस्याः स्निग्धाः स्थिरा हृद्या,**
**आहाराः सात्त्विक-प्रियाः ॥ ८ ॥**

आयु, बुद्धि, बल, आरोग्य, सुख र प्रीतिलाई बढाउने, रसयुक्त, नरम र स्थिर रहने* एवं स्वभावतः मनलाई प्रिय आहार अर्थात् भोजन गर्ने पदार्थहरू सात्त्विक पुरुषलाई प्रिय हुन्छन्॥ ८ ॥

**कट्वम्ल-लवणा-त्युष्ण,-तीक्ष्ण-रूक्ष-विदाहिनः ।**
**आहारा राजसस्येष्टा, दुःख-शोकामय-प्रदाः ॥ ९ ॥**

तीतो, अमिलो, नुनिलो, सारै तातो, कडा, रुख्खा,

* जुन भोजनको सार शरीरमा लामो समयसम्म रहन्छ, त्यसलाई स्थिर रहने भनेर भनिन्छ।

दाहकारक र दुःख, चिन्ता र रोगहरूलाई उत्पन्न गर्ने आहार अर्थात् भोजनका पदार्थहरू राजस पुरुषलाई प्रिय हुन्छन्॥ ९॥

**यात-यामं गत-रसं, पूति पर्युषितं च यत्।**
**उच्छिष्ट-मपि चामेध्यं, भोजनं तामस-प्रियम्॥ १०॥**

जुन भोजन आधा पाकेको, रसरहित, दुर्गन्धयुक्त, बासी, जुठो र अपवित्र छ, त्यो भोजन तामस पुरुषलाई प्रिय हुन्छ॥ १०॥

**अफला-काङ्क्षिभिर्-यज्ञो, विधि-दृष्टो य इज्यते।**
**यष्टव्य-मेवेति मनः, समाधाय स सात्त्विकः॥ ११॥**

शास्त्रविधिद्वारा नियत यज्ञ गर्नु नै कर्तव्य हो भन्ने ठानेर मनलाई समाहित गर्दै, फलको चाहना नगर्ने पुरुषहरूद्वारा गरिने यज्ञ सात्त्विक हो॥ ११॥

**अभि-सन्धाय तु फलं, दम्भार्थ-मपि चैव यत्।**
**इज्यते भरत-श्रेष्ठ, तं यज्ञं विद्धि राजसम्॥ १२॥**

परन्तु हे अर्जुन! केवल दम्भ देखाउनका लागि अथवा फललाई पनि दृष्टिमा राखेर जुन यज्ञ गरिन्छ, त्यस यज्ञलाई तिमीले राजस भन्ने जान॥ १२॥

**विधि-हीन-मसृष्टान्नं, मन्त्र-हीन-मदक्षिणम्।**
**श्रद्धा-विरहितं यज्ञं, तामसं परिचक्षते॥ १३॥**

शास्त्रविधिले हीन, अन्नदानले रहित, मन्त्रबिना, दक्षिणाबिना र श्रद्धाबिना गरिने यज्ञलाई तामस यज्ञ भनिन्छ ॥ १३ ॥

**देव-द्विज-गुरु-प्राज्ञ,-पूजनं शौच-मार्जवम्।**
**ब्रह्मचर्य-महिंसा च, शारीरं तप उच्यते ॥ १४ ॥**

देवता, ब्राह्मण, गुरु[1] र ज्ञानीजनको पूजन, पवित्रता, सरलता, ब्रह्मचर्य र अहिंसालाई शरीर-सम्बन्धी तप भनिन्छ ॥ १४ ॥

**अनुद्वेग-करं वाक्यं, सत्यं प्रिय-हितं च यत्।**
**स्वाध्याया-भ्यसनं चैव, वाङ्मयं तप उच्यते ॥ १५ ॥**

जुन वाणीमा उद्वेग नगर्ने, प्रिय र हितकारक एवं यथार्थ भाषण (बोली)[2] छ तथा वेदशास्त्रको पठनपाठनको एवं परमेश्वरको नाम-जपको अभ्यास छ, त्यसैलाई वाणीसम्बन्धी तप भनिन्छ ॥ १५ ॥

**मनःप्रसादः सौम्यत्वं, मौनमात्म-विनिग्रहः।**
**भाव-संशुद्धि-रित्येतत्, तपो मानस-मुच्यते ॥ १६ ॥**

मनको प्रसन्नता, शान्तभाव, भगवत्चिन्तन गर्ने

---

१. यहाँ 'गुरु' शब्दले माता, पिता, आचार्य र वृद्ध एवं आफूभन्दा कुनै पनि किसिमले ठूला छन्, ती सबैलाई बुझ्नुपर्दछ।

२. मन र इन्द्रियहरूद्वारा जस्तो अनुभव गरिएको छ, ठीक त्यस्तै भन्नुको नाम 'यथार्थ भाषण (बोली)' हो।

स्वभाव, मनका निग्रह र अन्तःकरणका भावहरूको सुन्दर पवित्रतालाई मनसम्बन्धी तप भनेर भनिन्छ॥ १६ ॥

**श्रद्धया परया तप्तं, तपस्-तत्-त्रिविधं नरैः ।**
**अफला-काङ्क्षिभिर्-युक्तैः, सात्त्विकं परिचक्षते ॥ १७ ॥**

फलको चाहना नगर्ने योगी पुरुषहरूद्वारा परम श्रद्धासाथ गरिएका यी माथि बताइएका तीन प्रकारका तपलाई सात्त्विक भनिन्छ॥ १७ ॥

**सत्कार-मान-पूजार्थं, तपो दम्भेन चैव यत् ।**
**क्रियते तदिह प्रोक्तं, राजसं चल-मध्रुवम् ॥ १८ ॥**

जुन तप सत्कार, मान र पूजाका लागि तथा अन्य कुनै स्वार्थवश या पाखण्डपूर्वक गरिन्छ, त्यस्तो अनिश्चित* एवं क्षणिक फल दिने तपलाई यहाँ राजस भनिएको छ॥ १८ ॥

**मूढग्राहे-णात्मनो यत्, पीडया क्रियते तपः ।**
**परस्योत्-सादनार्थं वा, तत्-तामस-मुदाहृतम् ॥ १९ ॥**

जुन तप मूढतासाथ हठले, मन, वाणी र शरीरलाई पीडासहित अथवा अरुलाई अनिष्ट गर्ने उद्देश्यका साथ गरिन्छ, त्यो तपलाई तामस भनिएको छ॥ १९ ॥

* 'अनिश्चित फल दिने' भनेर त्यसलाई भनिन्छ, जुन हुने र नहुनेमा शङ्का भएको होस्।

**दातव्य-मिति यद्दानं, दीयतेऽनुपकारिणे।**
**देशे काले च पात्रे च, तद्-दानं सात्त्विकं स्मृतम्॥ २०॥**

दान दिनु नै कर्तव्य हो भन्ने भावले जुन दान देश[१] तथा काल[२] र सुयोग्य पात्र प्राप्त[३] हुँदा उपकार नगर्नेलाई दिइन्छ, त्यो दानलाई सात्त्विक भनिएको छ॥ २०॥

**यत्-तु प्रत्युप-कारार्थं, फल-मुद्दिश्य वा पुनः।**
**दीयते च परि-क्लिष्टं, तद्-दानं राजसं स्मृतम्॥ २१॥**

तर, जुन दान क्लेशपूर्वक[४] तथा प्रत्युपकारको प्रयोजनले अथवा फललाई ध्यानमा[५] राखी दिइन्छ, त्यो दानलाई राजस भनिन्छ॥ २१॥

**अदेश-काले यद्-दान,-मपात्रेभ्यश्च दीयते।**
**असत्-कृत-मवज्ञातं, तत्-तामस-मुदाहृतम्॥ २२॥**

---

१.-२. जुन देश-कालमा जुन वस्तुको अभाव हुन्छ, त्यही देश-कालमा त्यस वस्तुद्वारा प्राणीहरूको सेवा गर्नका लागि योग्य मानिन्छ।

३. भोका, अनाथ, दुःखी, रोगी र असमर्थ तथा भिक्षुक आदि त अन्न, वस्त्र र औषधि एवं जुन वस्तुको जसलाई अभाव छ, त्यस वस्तुद्वारा सेवा गर्नका लागि योग्य पात्र मानिन्छन् भने श्रेष्ठ आचरणवाला विद्वान् ब्राह्मणजन पनि धनादि सबै प्रकारका पदार्थहरूद्वारा सेवा गर्नका लागि योग्य पात्र मानिन्छन्।

४. जस्तो प्रायः वर्तमान समयमा चन्दा, चिठ्ठा आदिमा धन दिने गरिन्छ।

५. अर्थात् मान, प्रतिष्ठा, बढोत्तरी र स्वर्गादि प्राप्तिका लागि अथवा रोगादिको निवृत्तिका लागि।

जुन दान विनासत्कार अथवा तिरस्कारपूर्वक अयोग्य देश–कालमा र कुपात्रलाई दिइन्छ, त्यो दान तामस मानिन्छ॥ २२॥

**ॐ तत्–सदिति निर्देशो, ब्रह्मणस्–त्रिविधः स्मृतः।**
**ब्राह्मणास्–तेन वेदाश्–च, यज्ञाश्–च विहिताः पुरा॥ २३॥**

ॐ, तत्, सत्— यस्ता यी तीन प्रकारका सच्चिदानन्दघन ब्रह्मका नाम भनेर बताइएका छन्, त्यसैबाट सृष्टिको सुरुआतमा ब्राह्मण र वेद तथा यज्ञादि रचना गरिए॥ २३॥

**तस्मा–दोमित्यु–दाहृत्य, यज्ञ–दान–तपः–क्रियाः।**
**प्रवर्तन्ते विधानोक्ताः, सततं ब्रह्म–वादिनाम्॥ २४॥**

यसर्थ, वेदमन्त्रहरूको उच्चारण गर्ने श्रेष्ठ पुरुषहरूको शास्त्रविधिले नियत गरिएका यज्ञ, दान र तपरूपी क्रियाहरू सधैँ 'ॐ' यो परमात्माको नामलाई उच्चारण गरेर नै सुरु गरिन्छन्॥ २४॥

**तदित्य–नभि–सन्धाय, फलं यज्ञ–तपः–क्रियाः।**
**दान–क्रियाश्च विविधाः, क्रियन्ते मोक्ष–काङ्क्षिभिः॥ २५॥**

तत् अर्थात् 'तत्' नामले चिनिने यी सबै परमात्माकै हुन् भन्ने भावले फलको चाहना नराखी अनेक प्रकारका यज्ञ, तपरूपी क्रियाहरू तथा दानरूपी क्रियाहरू कल्याणको इच्छा गर्ने पुरुषहरूद्वारा गरिन्छन्॥ २५॥

**सद्-भावे साधु-भावे च, सदित्येतत्-प्रयुज्यते।**
**प्रशस्ते कर्मणि तथा, सच्छब्दः पार्थ युज्यते॥ २६॥**

'सत्'-यसप्रकार परमात्माको यो नाम सत्यभावमा र श्रेष्ठभावमा प्रयोग गरिन्छ। हे पार्थ! उत्तम कर्ममा पनि 'सत्' शब्दको प्रयोग गरिन्छ॥ २६॥

**यज्ञे-तपसि दाने च, स्थितिः सदिति चोच्यते।**
**कर्म चैव तदर्थीयं, सदित्येवाभि-धीयते॥ २७॥**

साथै यज्ञ, तप र दानमा जुन स्थिति छ, त्यसलाई पनि 'सत्' भनिन्छ र परमात्माका लागि गरिएको त्यस कर्मलाई पनि निश्चयपूर्वक 'सत्' भनिन्छ॥ २७॥

**अश्रद्धया हुतं दत्तं, तपस्-तप्तं कृतं च यत्।**
**अस-दित्युच्यते पार्थ, न च तत्-प्रेत्य नो इह॥ २८॥**

हे अर्जुन! बिनाश्रद्धाले गरिएको हवन, दिइएको दान तपिएको तप र जेसुकै गरिएको शुभकर्म होस्, त्यो सबैलाई 'असत्' भनेर भनिन्छ। यसर्थ, त्यो न त यसलोकमा लाभदायक छ, न मृत्युपछि नै॥ २८॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, श्रद्धा-त्रय-विभाग-योगो नाम सप्तदशोऽध्यायः॥ १७॥

~~o~~

ॐश्रीपरमात्मने नमः

# अथ-अष्टादशोऽध्यायः

## अर्जुन उवाच

**सन्यासस्य महाबाहो, तत्त्व-मिच्छामि वेदितुम्।**
**त्यागस्य च हृषीकेश, पृथक्-केशि-निषूदन॥ १॥**

**अर्जुनले भने**—हे महाबाहो! हे अन्तर्यामी! हे वासुदेव! म संन्यास र त्यागका तत्त्वलाई छुट्टाछुट्टै जान्न चाहन्छु॥ १॥

## श्रीभगवानुवाच

**काम्यानां कर्मणां न्यासं, सन्न्यासं कवयो विदुः।**
**सर्व-कर्म-फल-त्यागं, प्राहुस्-त्यागं विचक्षणाः॥ २॥**

**श्रीभगवान्ले भन्नुभयो**—कति पण्डितहरूले त काम्य कर्महरूको[१] त्यागलाई संन्यास भन्ने सम्झन्छन् भने अन्य विचारकुशल पुरुषले सबै कर्महरूका फलको त्यागलाई[२] त्याग भनेर भन्दछन्॥ २॥

---

१. स्त्री, पुत्र र धन आदि प्रिय वस्तुहरूको प्राप्तिका लागि तथा रोग-सङ्कटादिको निवृत्तिका लागि जुन यज्ञ, दान, तप र उपासना आदि कर्महरू गरिन्छन्, तिनको नाम 'काम्यकर्म' हो।

२. ईश्वरको भक्ति, देवताहरूको पूजन, मातापितादि गुरुजनहरूको सेवा, यज्ञ, दान र तप तथा वर्णाश्रमअनुसार आजीविकाद्वारा गृहस्थको निर्वाह एवं शरीरसम्बन्धी खानपान इत्यादि जति पनि कर्तव्यकर्म छन्, ती सबैमा यस लोक र परलोकका सम्पूर्ण कामनाहरूको त्यागको नाम 'सबै कर्महरूका फलको त्याग' हो।

**त्याज्यं दोष-वदित्येके, कर्म प्राहुर्-मनीषिणः।**
**यज्ञ-दान-तपः-कर्म, न त्याज्य-मिति चापरे ॥ ३ ॥**

एकथरी विद्वान्ले यस्तो भन्दछन् कि कर्ममात्र दोषयुक्त छन्, यसर्थ त्यागनयोग्य छन्। अर्काथरी विद्वान् भने यज्ञ, दान र तपरूपी कर्म त्यागनयोग्य छैनन् भनेर भन्दछन्॥ ३ ॥

**निश्चयं शृणु मे तत्र, त्यागे भरत-सत्तम।**
**त्यागो हि पुरुष-व्याघ्र, त्रिविधः सम्प्रकीर्तितः ॥ ४ ॥**

हे पुरुषश्रेष्ठ अर्जुन! संन्यास र त्याग, यी दुईमध्ये पहिला त्यागको विषयमा तिमीले मेरो निश्चय सुन, किनकि त्याग सात्त्विक, राजस र तामस भेदले तीन प्रकारका मानिएका छन्॥ ४ ॥

**यज्ञ-दान-तपः-कर्म, न त्याज्यं कार्यमेव तत्।**
**यज्ञो दानं तपश्-चैव, पावनानि मनीषिणाम्॥ ५ ॥**

यज्ञ, दान र तपरूपी कर्म त्यागनयोग्य छैनन्, बरु अनिवार्यरूपमा गर्नुपर्ने खालका छन्, किनकि यज्ञ, दान र तप—यी तीनै कर्महरू बुद्धिमान् पुरुषहरूलाई* पवित्र गर्नेवाला हुन्॥ ५ ॥

---

* त्यो मनुष्य 'बुद्धिमान्' हो, जो फल र आसक्तिलाई त्यागेर केवल भगवदर्थ कर्म गर्दछ।

**एतान्यपि तु कर्माणि, सङ्गं त्यक्त्वा फलानि च।**
**कर्तव्यानीति मे पार्थ, निश्चितं मत-मुत्तमम्॥ ६॥**

यसर्थ, हे पार्थ! यी यज्ञ, दान र तपरूपी कर्महरूलाई अन्य सम्पूर्ण कर्तव्यकर्महरूप्रतिको आसक्ति र फलहरूलाई त्यागेर अवश्य गर्नुपर्दछ भन्ने मैले निश्चय गरेको उत्तम मत हो॥ ६॥

**नियतस्य तु सन्न्यासः, कर्मणो नोपपद्यते।**
**मोहात् तस्य परित्यागस्, -तामसः परि-कीर्तितः॥ ७॥**

(निषिद्ध र काम्य कर्महरूको त स्वरूपबाटै त्याग गर्नु उचित हुन्छ) तर नियत कर्मलाई* स्वरूपबाटै त्याग गर्नु उचित हुँदैन। यसर्थ, मोहका कारण त्यसलाई त्याग गर्नुलाई तामस त्याग भनेर भनिएको छ॥ ७॥

**दुःख-मित्येव यत्-कर्म, काय-क्लेश-भयात्-त्यजेत्।**
**स कृत्वा राजसं त्यागं, नैव त्याग-फलं लभेत्॥ ८॥**

जे-जति कर्म छ, त्यो सबै दुःखरूप छ भन्ने सम्झिएर यदि कसैले शारीरिक क्लेशको भयका कारण कर्तव्यकर्महरूको त्याग गर्दछ भने उसले यस्तो राजस त्याग गरेर त्यागको फललाई कुनै पनि प्रकारले प्राप्त गर्दैन॥ ८॥

---

* यसै अध्यायको श्लोक ४८ को टिप्पणीमा यसको अर्थ हेर्नुस्।

**कार्य-मित्येव यत्-कर्म, नियतं क्रियतेऽर्जुन।**
**सङ्गं त्यक्त्वा फलं चैव, स त्यागः सात्त्विको मतः॥ ९॥**

हे अर्जुन! जसद्वारा शास्त्रविहित कर्म गर्नु कर्तव्य हो भन्ने भावले आसक्ति र फलको इच्छा त्याग गरेर गरिन्छ, त्यसैलाई सात्त्विक त्याग मानिएको छ॥ ९॥

**न द्वेष्ट्य-कुशलं कर्म, कुशले नानु-षज्जते।**
**त्यागी सत्त्व-समाविष्टो, मेधावी छिन्न-संशयः॥ १०॥**

जुन मनुष्य अकुशल कर्मसित द्वेष गर्दैन र कुशल कर्ममा आसक्त हुँदैन, त्यो शुद्ध सत्त्वगुणले युक्त पुरुष संशयरहित, बुद्धिमान् र सच्चा त्यागी हो॥ १०॥

**न हि देह-भृता शक्यं, त्यक्तुं कर्मा-ण्यशेषतः।**
**यस्तु कर्म-फल-त्यागी, स त्यागी-त्यभिधीयते॥ ११॥**

किनकि कुनै पनि शरीरधारी मनुष्यद्वारा सम्पूर्णतापूर्वक सबै कर्महरूको त्याग गर्न निश्चय पनि सम्भव छैन, यसर्थ जो पुरूष कर्मफलको त्यागी छ, उसैलाई त्यागी भनेर भनिन्छ॥ ११॥

**अनिष्ट- मिष्टं मिश्रं च, त्रिविधं कर्मणः फलम्।**
**भवत्य-त्यागिनां प्रेत्य, न तु सन्न्यासिनां क्वचित्॥ १२॥**

कर्मको फल इष्ट, अनिष्ट र मिश्र तीन प्रकारको हुन्छ। कर्मको फल त्याग नगर्ने मनुष्यका लागि

कर्मको तीनै प्रकारको फल मरेपछि भोग्नुपर्छ, तर कर्मफलको त्याग गरिदिने मनुष्यका लागि त कर्मको फल कहिल्यै पनि हुँदैन॥ १२॥

**पञ्चैतानि महाबाहो, कारणानि निबोध मे।**
**साङ्ख्ये कृतान्ते प्रोक्तानि, सिद्धये सर्व-कर्मणाम्॥ १३॥**

हे महाबाहो! सम्पूर्ण कर्महरूको सिद्धिका निमित्त कर्महरूको अन्त गर्नका लागि उपाय बताइने साङ्ख्यशास्त्रमा यी पाँच कारणहरू उल्लेख गरिएका छन्, तिनलाई मबाट राम्रोसित जान॥ १३॥

**अधिष्ठानं तथा कर्ता, करणं च पृथग्-विधम्।**
**विविधाश्च पृथक्-चेष्टा, दैवं चैवात्र पञ्चमम्॥ १४॥**

यस विषयमा अर्थात् कर्महरूको सिद्धिमा अधिष्ठान[१] र कर्ता, भिन्नभिन्न प्रकारका करण[२] एवं अनेक प्रकारका अलग-अलग चेष्टाहरू र दैव[३]- यी पाँचवटा कारणहरू छन्॥ १४॥

**शरीर-वाङ्-मनोभिर्-यत्, कर्म प्रारभते नरः।**
**न्याय्यं वा विपरीतं वा, पञ्चैते तस्य हेतवः॥ १५॥**

---

१. जसको आश्रयमा कर्म गरिन्छ, त्यसको नाम 'अधिष्ठान' हो।

२. जुनजुन इन्द्रियहरू र साधनहरूद्वारा कर्म गरिन्छ, तिनको नाम 'करण' हो।

३. पूर्वकृत शुभाशुभ कर्महरूका संस्कारको नाम 'दैव' हो।

मनुष्यले मन, वाणी र शरीरद्वारा शास्त्रानुकूल अथवा विपरीत जे-जति कर्म गर्दछ, त्यसका यी पाँच कारण हुन्॥ १५॥

**तत्रैवं सति कर्तार,-मात्मानं केवलं तु यः।**
**पश्यत्य-कृत-बुद्धित्वान्,-न स पश्यति दुर्मतिः॥ १६॥**

तर, यस्तो हुँदा पनि जुन मनुष्य अशुद्ध बुद्धि[१] हुनाले त्यस विषयमा अर्थात् कर्म हुनुमा केवल शुद्धस्वरूप आत्मालाई कर्ता ठान्दछ, त्यस्तो मलिन बुद्धिवाला अज्ञानीले यथार्थ बुझ्दैन॥ १६॥

**यस्य नाहङ्-कृतो भावो, बुद्धिर्-यस्य न लिप्यते।**
**हत्वापि स इमाँल्-लोकान्, न हन्ति न निबध्यते॥ १७॥**

जुन पुरुषको अन्तःकरणमा 'म कर्ता हुँ' भन्ने भाव छैन तथा जसको बुद्धि सांसारिक पदार्थहरूमा र कर्महरूमा लिप्त छैन, त्यो पुरुषले यी सबै लोकहरूलाई मारेर पनि वास्तवमा न त मार्दछ, न पापले बाँधिन्छ नै[२]॥ १७॥

१. सत्सङ्ग र शास्त्रको अभ्यासबाट एवं भगवदर्थ कर्म र उपासना गर्नाले मनुष्यको बुद्धि शुद्ध हुन्छ, यसर्थ जो उपर्युक्त साधनहरूले रहित छ, त्यसको बुद्धि अशुद्ध छ भन्ने सम्झनुपर्दछ।

२. जसरी अग्नि, वायु र पानीद्वारा प्रारब्धवश कुनै प्राणीको हिंसा भएको देखिन आयो भने पनि त्यो हिंसा होइन, त्यसैगरी जुन पुरुषको देहमा अभिमान छैन र स्वार्थरहित केवल संसारको

**ज्ञानं ज्ञेयं परिज्ञाता, त्रिविधा कर्म-चोदना।**
**करणं कर्म कर्तेति, त्रिविधः कर्म-सङ्ग्रहः ॥ १८ ॥**

ज्ञाता[1], ज्ञान[2] र ज्ञेय[3]—यी तीन प्रकारका कर्म-प्रेरणा हुन् भने कर्ता[4], करण[5] र क्रिया[6]—यी तीन प्रकारका कर्म-सङ्ग्रह हुन्॥ १८ ॥

**ज्ञानं कर्म च कर्ता च, त्रिधैव गुण-भेदतः।**
**प्रोच्यते गुण-सङ्ख्याने, यथा-वच्छृणु तान्यपि॥ १९ ॥**

गुणहरूको सङ्ख्या उल्लेख गर्ने शास्त्रमा ज्ञान र कर्म तथा कर्ता गुणका भेदले तीन-तीन प्रकारका नै बताइएका छन्, तिनलाई पनि राम्ररी सुन॥ १९ ॥

---

हितका लागि जसका सम्पूर्ण क्रिया र प्रयासहरू हुन्छन्, त्यस पुरुषको शरीर अथवा इन्द्रियहरूद्वारा यदि कुनै प्राणीको हिंसा भएको लोकदृष्टिमा देखियो भने पनि त्यो वास्तवमा हिंसा होइन, किनकि आसक्ति, स्वार्थ र अहङ्कार नहुँदा कुनै पनि प्राणीको हिंसा हुन सक्दैन। साथै, बिना कर्तृत्वाभिमान गरिएको कर्म वास्तवमा अकर्म नै हो। तसर्थ, त्यो पुरुष 'पापले बाँधिदैन'।

१. जान्नेवालाको नाम 'ज्ञाता' हो।
२. जसद्वारा जानिन्छ, त्यसको नाम 'ज्ञान' हो।
३. जानकारीमा आउने वस्तुको नाम 'ज्ञेय' हो।
४. कर्म गर्नेवालाको नाम 'कर्ता' हो।
५. जुन साधनहरूले कर्म गरिन्छ, त्यसको नाम 'करण' हो।
६. गर्नुको नाम 'क्रिया' हो।

**सर्व-भूतेषु येनैकं, भाव-मव्यय-मीक्षते।**
**अविभक्तं विभक्तेषु, तज्ज्ञानं विद्धि सात्त्विकम्॥ २०॥**

जुन ज्ञानद्वारा मनुष्यले पृथक्-पृथक् सबै भूतहरूमा एक अविनाशी परमात्मभावलाई विभाग-रहित समभावले स्थित देख्दछ, त्यस ज्ञानलाई तिमीले सात्त्विक जान॥ २०॥

**पृथक्त्वेन तु यज्ज्ञानं, नाना-भावान्-पृथग्-विधान्।**
**वेत्ति सर्वेषु भूतेषु, तज्ज्ञानं विद्धि राजसम्॥ २१॥**

तर, जुन ज्ञानद्वारा मनुष्यले सम्पूर्ण भूतहरूमा भिन्न-भिन्न प्रकारका अनेक भावहरूलाई फरक-फरक जान्दछ, त्यस ज्ञानलाई तिमीले राजस भन्ने जान॥ २१॥

**यत्तु कृत्स्न-वदेकस्मिन्, कार्ये सक्त-महैतुकम्।**
**अतत्त्वार्थ-वदल्पं च, तत्-तामस-मुदाहृतम्॥ २२॥**

तर, जुन ज्ञान एक कार्यरूपी शरीरमा नै सम्पूर्ण रूपमा आसक्त छ तथा जुन विनायुक्तिवाला, तात्त्विक अर्थले रहित र तुच्छ छ, त्यसलाई तामस भनेर भनिएको छ॥ २२॥

**नियतं सङ्ग-रहित,-मराग-द्वेषतः कृतम्।**
**अफल-प्रेप्सुना कर्म, यत्तत्-सात्त्विक-मुच्यते॥ २३॥**

जुन कर्म शास्त्रविधिले निर्धारित गरिएको र

कर्तापनको अभिमानले रहित होस् एवं फल नचाहने पुरुषद्वारा राग-द्वेषबिना गरिएको छ, त्यसलाई सात्त्विक भनिन्छ॥ २३॥

**यत्तु कामेप्सुना कर्म, साहङ्कारेण वा पुनः।**
**क्रियते बहुलायासं, तद्-राजस-मुदाहृतम्॥ २४॥**

तर, जुन कर्म निकै परिश्रमले युक्त हुन्छ र भोगलाई चाहने पुरुषद्वारा अथवा अहङ्कारयुक्त पुरुषद्वारा गरिन्छ, त्यो कर्म राजस कर्म हो॥ २४॥

**अनुबन्धं क्षयं हिंसा,-मनवेक्ष्य च पौरुषम्।**
**मोहा-दारभ्यते कर्म, यत्तत्-तामस-मुच्यते॥ २५॥**

जुन कर्म परिणाम, हानि, हिंसा र सामर्थ्यको विचार नगरी केवल अज्ञानपूर्वक आरम्भ गरिन्छ, त्यसलाई तामस भनिन्छ॥ २५॥

**मुक्त-सङ्गोऽनहं-वादी, धृत्युत्साह-समन्वितः।**
**सिद्ध्य-सिद्ध्योर्-निर्विकारः, कर्ता सात्त्विक उच्यते॥ २६॥**

जुन कर्ता सङ्गरहित, अहङ्कारयुक्त वचन नबोल्ने, धैर्य र उत्साहले युक्त तथा कार्यको सिद्धि हुनु र नुहुनुमा हर्ष-शोकादि विकारहरूले रहित छ, ऊ सात्त्विक मानिन्छ॥ २६॥

**रागी कर्म-फल-प्रेप्सुर्,-लुब्धो हिंसात्मकोऽशुचिः ।**
**हर्ष-शोकान्वितः कर्ता, राजसः परिकीर्तितः ॥ २७ ॥**

जुन कर्ता आसक्तिले युक्त, कर्मफल चाहने र लोभी छ तथा अरुलाई कष्ट दिने स्वभाववाला, अशुद्धाचारी र हर्ष-शोकले लिप्त छ, उसलाई राजस भनिएको छ॥ २७ ॥

**अयुक्तः प्राकृतः स्तब्धः, शठोऽनैष्कृतिकोऽलसः ।**
**विषादी दीर्घ-सूत्री च, कर्ता तामस उच्यते ॥ २८ ॥**

जुन कर्ता अयुक्त, शिक्षाले रहित, घमण्डी, धूर्त र अर्काको जीविकाको नाश गर्नेवाला एवं शोक गर्नेवाला, अल्छी र दीर्घसूत्री* छ, ऊ तामस हो॥ २८ ॥

**बुद्धेर्-भेदं धृतेश्-चैव, गुणतस्-त्रिविधं शृणु ।**
**प्रोच्यमान-मशेषेण, पृथक्त्वेन धनञ्जय ॥ २९ ॥**

हे धनञ्जय! अब तिमी बुद्धि र धृतिशक्तिको गुणअनुसार हुने तीन प्रकारका भेद मद्वारा सम्पूर्णतासाथ विभागपूर्वक सुन॥ २९ ॥

**प्रवृत्तिं च निवृत्तिं च, कार्याकार्ये भयाभये ।**
**बन्धं मोक्षं च या वेत्ति, बुद्धिः सा पार्थ सात्त्विकी ॥ ३० ॥**

---

* 'दीर्घसूत्री' त्यसलाई भनिन्छ, जसले थोरै समयमै तुरुन्तै हुने सामान्य कामलाई पनि पछि गर्छु भन्ने आशामा लामो समयसम्म पूरा गर्दैन।

हे पार्थ! जुन बुद्धिले प्रवृत्तिमार्ग[1] र निवृत्ति-मार्गलाई[2], कर्तव्य र अकर्तव्यलाई, भय र अभयलाई अनि बन्धन र मोक्षलाई यथार्थसित जान्दछ, त्यो बुद्धि सात्त्विकी बुद्धि हो॥ ३०॥

**यया धर्म-मधर्मं च, कार्यं चाकार्य-मेव च।**
**अयथावत् प्रजानाति, बुद्धिः सा पार्थ राजसी॥ ३१॥**

हे पार्थ! मनुष्यले जुन बुद्धिद्वारा धर्म र अधर्म तथा कर्तव्य र अकर्तव्यलाई पनि यथार्थ जान्दैन, त्यो बुद्धि राजसी हो॥ ३१॥

**अधर्मं धर्म-मिति या, मन्यते तमसावृता।**
**सर्वार्थान् विपरीतांश्-च, बुद्धिः सा पार्थ तामसी॥ ३२॥**

हे अर्जुन! जुन तमोगुणले घेरिएको बुद्धिले अधर्मलाई पनि 'यो धर्म' हो भनेर मान्दछ र यसैगरी अन्य सम्पूर्ण पदार्थहरूलाई पनि विपरीत मान्दछ, त्यो बुद्धि तामसी हो॥ ३२॥

---

१. गृहस्थमा रहेरै फल र आसक्तिलाई त्यागी भगवदर्पणबुद्धिले केवल लोकशिक्षाका लागि राजा जनकले जस्तै व्यवहार गर्नुको नाम 'प्रवृत्तिमार्ग' हो।

२. देहाभिमानलाई त्यागेर केवल सच्चिदानन्दघन परमात्मामा एकभावले स्थित भएका श्रीशुकदेवजी र सनकादिकहरूजस्तै संसारदेखि मुक्त भएर विचरण गर्नुको नाम 'निवृत्तिमार्ग'।

**धृत्या यया धारयते, मनःप्राणेन्द्रिय-क्रियाः।**
**योगेना-व्यभिचारिण्या, धृतिः सा पार्थ सात्त्विकी ॥ ३३ ॥**

हे पार्थ! जुन अव्यभिचारिणी धारणशक्तिद्वारा[१] मनुष्यले ध्यानयोगका माध्यमले मन, प्राण र इन्द्रियका क्रियाहरूलाई[२] धारण गर्दछ, त्यो सात्त्विकी धृति हो ॥ ३३ ॥

**यया तु धर्म-कामार्थान्, धृत्या धारयतेऽर्जुन।**
**प्रसङ्गेन फलाकाङ्क्षी, धृतिः सा पार्थ राजसी ॥ ३४ ॥**

तर, हे पृथापुत्र अर्जुन! फलको इच्छा भएको मानिसले जुन धारणशक्तिका माध्यमले अत्यन्त आसक्तिका साथ धर्म, अर्थ र कामहरूलाई धारण गर्दछ, त्यो राजसी हो ॥ ३४ ॥

**यया स्वप्नं भयं शोकं, विषादं मदमेव च।**
**न विमुञ्चति दुर्मेधा, धृतिः सा पार्थ तामसी ॥ ३५ ॥**

हे पार्थ! दुष्ट बुद्धि भएको मानिसले जुन धारणशक्तिका माध्यमले निद्रा, भय, चिन्ता र दुःख तथा उन्मत्ततालाई पनि छोड्दैन अर्थात् धारण गरिरहन्छ, त्यो धारण शक्ति तामसी हो ॥ ३५ ॥

---

१. भगवद्विषय बाहेक अन्य सांसारिक विषयहरूलाई धारण गर्नु नै अव्यभिचारदोष हो। त्यस दोषले जो रहित छ, त्यो 'अव्यभिचारिणी धारणा' हो।

२. मन, प्राण र इन्द्रियहरूलाई भगवत्प्राप्तिका लागि भजन, ध्यान र निष्काम कर्महरूमा लगाउनुको नाम 'तिनका क्रियाहरूलाई धारण गर्नु' हो।

**सुखं त्विदानीं त्रिविधं, शृणु मे भरतर्षभ।**
**अभ्यासाद्-रमते यत्र, दुःखान्तं च निगच्छति॥ ३६॥**
**यत्तदग्रे विषमिव, परिणामेऽमृतोपमम्।**
**तत्सुखं सात्त्विकं प्रोक्त,-मात्म-बुद्धि-प्रसादजम्॥ ३७॥**

हे भरतश्रेष्ठ! अब तीन प्रकारका सुखलाई पनि तिमीले मबाट सुन। जुन सुखमा साधक मनुष्यले भजन, ध्यान र सेवादिको अभ्यासले रमण गर्दछ र जसद्वारा दुःखको अन्त्यलाई प्राप्त गर्छ, त्यो सुख, जुन सुरुआतमा विषजस्तै प्रतीत[1] हुन्छ, तापनि त्यसको परिणाम अमृतसमान हुन्छ, यसर्थ त्यो परमात्मा विषयक बुद्धिको प्रसादद्वारा उत्पन्न हुने सुख सात्त्विक मानिएको छ॥ ३६-३७॥

**विषयेन्द्रिय-संयोगाद्,-यत्तदग्रेऽमृतोपमम्।**
**परिणामे विषमिव, तत्सुखं राजसं स्मृतम्॥ ३८॥**

जुन सुख विषय र इन्द्रियहरूको संयोगले उत्पन्न हुन्छ, त्यो सुरुआततिर भोगका समयमा अमृततुल्य प्रतीत भए पनि परिणाममा विषयतुल्य[2] छ, त्यो

१. जसरी, खेलमा आसक्ति भएको बालकलाई विद्याको अभ्यास मूर्खताका कारण सुरुमा विषसमान आभास हुन्छ, त्यसैगरी विषयमा आसक्ति भएको पुरुषलाई भगवद्भजन, ध्यान, सेवा आदि साधनाहरूको अभ्यास गहिराइ नबुझ्नाले सुरुमा 'विषजस्तै' हुन्छ।

२. बल, वीर्य, बुद्धि, धन, उत्साह र परलोक नाशक हुनाले

सुख राजस मानिएको छ॥ ३८॥

**यदग्रे चानुबन्धे च, सुखं मोहन-मात्मनः।**
**निद्रालस्य-प्रमादोत्थं, तत्तामस-मुदाहृतम्॥ ३९॥**

जुन सुख भोगकालमा र परिणाममा पनि आत्मालाई मोहित गर्ने खालको छ, त्यो निद्रा, आलस्य र प्रमादबाट उत्पन्न हुने सुख तामस मानिएको छ॥ ३९॥

**न तदस्ति पृथिव्यां वा, दिवि देवेषु वा पुनः।**
**सत्त्वं प्रकृतिजैर्-मुक्तं, यदेभिः स्यात्-त्रिभिर्-गुणैः॥ ४०॥**

पृथ्वी, आकाश र देवता तथा यीबाहेक अन्यत्र कतै पनि यस्तो कुनै पनि सत्त्व छैन, जो प्रकृतिबाट उत्पन्न यी तीनै गुणहरूले रहित होस्॥ ४०॥

**ब्राह्मण-क्षत्रिय-विशां, शूद्राणां च परन्-तप।**
**कर्माणि प्रविभक्तानि, स्वभाव-प्रभवैर्-गुणैः॥ ४१॥**

हे परम्तप! ब्राह्मण, क्षत्रिय र वैश्य तथा शूद्रहरूका कर्म स्वभावले उत्पन्न गुणहरूद्वारा विभक्त गरिएका छन्॥ ४१॥

**शमो दमस्-तपः शौचं, क्षान्ति-रार्जव-मेव च।**
**ज्ञानं विज्ञान-मास्तिक्यं, ब्रह्म-कर्म स्वभावजम्॥ ४२॥**

---

विषय र इन्द्रियहरूको संयोगले हुने सुखलाई 'परिणाममा विषसमान' मानिएको छ।

अन्तःकरणको निग्रह गर्नु, इन्द्रियहरूको दमन गर्नु, धर्मपालनको लागि कष्ट सहनु, भित्रबाहिरबाटै शुद्ध[१] रहनु, अर्काका अपराधलाई क्षमा गर्नु, मन, इन्द्रिय र शरीरलाई सरल राख्नु, वेद, शास्त्र, ईश्वर र परलोक आदिमा श्रद्धा राख्नु, वेदशास्त्रहरूको अध्ययन-अध्यापन गर्नु र परमात्मा तत्त्वको अनुभव गर्नु—यी सबै ब्राह्मणका स्वाभाविक कर्म हुन्॥ ४२॥

**शौर्यं तेजो धृतिर्-दाक्ष्यं, युद्धे चाप्य-पलायनम्।**
**दान-मीश्वर-भावश्-च, क्षात्रं कर्म स्वभावजम्॥ ४३॥**

शूरवीरता, तेज, धैर्य, चतुरता, युद्धमा नभाग्नु, दान दिनु र स्वामीभाव राख्नु—यी सबै क्षत्रियका स्वाभाविक कर्म हुन्॥ ४३॥

**कृषि-गौरक्ष्य-वाणिज्यं, वैश्य-कर्म स्वभावजम्।**
**परिचर्यात्मकं कर्म, शूद्रस्यापि स्वभावजम्॥ ४४॥**

खेती, गौपालन र क्रय-विक्रयरूपी सत्य व्यवहार[२]—यी वैश्यका स्वाभाविक कर्म हुन्।

---

१. गीता अध्याय १३ श्लोक ७ को टिप्पणीमा हेर्नुस्।

२. वस्तुहरू खरीद गर्दा वा बिक्री गर्दा तौल, नाप र गन्ती गर्दा कम दिनु अथवा धेरै दिनु एवं वस्तु बदलेर वा एउटा वस्तुको साटो अर्को खराब वस्तु मिसाएर दिनु अथवा राम्रो लिनु, नाफा, दलाली ठहऱ्याएर तिनीहरूबाट अधिक दाम लिनु वा कम दिनु अथवा झुट, कपट, चोरी र जबर्जस्ती वा अन्य कुनै प्रकारले अर्काको हकलाई ग्रहण गर्नु आदि दोषहरूले रहित जुन सत्यतापूर्वक पवित्र वस्तुहरूको व्यापार छ, त्यसको नाम 'सत्यव्यवहार' हो।

साथै, सबै वर्णहरूको सेवा गर्नु शूद्रको पनि स्वाभाविक कर्म हो॥ ४४॥

**स्वे स्वे कर्मण्यभिरतः, संसिद्धिं लभते नरः।**
**स्वकर्म-निरतः सिद्धिं, यथा विन्दति तच्छृणु॥ ४५॥**

आ-आफ्ना स्वाभाविक कर्महरूमा तत्परतासाथ लागेको मनुष्यले भगवत्प्राप्तिरूप परमसिद्धिलाई प्राप्त गर्दछ। आफ्नो स्वाभाविक कर्ममा लागेको मानिसले जुन किसिमले कर्म गरी परमसिद्धिलाई प्राप्त गर्दछ, त्यस विधिलाई तिमीले सुन॥ ४५॥

**यतः प्रवृत्तिर्-भूतानां, येन सर्वमिदं ततम्।**
**स्वकर्मणा तमभ्यर्च्य, सिद्धिं विन्दति मानवः॥ ४६॥**

जुन परमेश्वरबाट सम्पूर्ण प्राणीहरूको उत्पत्ति भएको छ र जसबाट यो समस्त जगत् व्याप्त छ[१], आ-आफ्नो स्वाभाविक कर्महरूद्वारा त्यस परमेश्वरको पूजा गरेर[२] मनुष्यले परमसिद्धिलाई प्राप्त गर्दछ॥ ४६॥

---

१. जसरी बरफ पानीले व्याप्त छ, त्यसैगरी सम्पूर्ण संसार सच्चिदानन्दघन परमात्माले व्याप्त छ।

२. जसरी पतिव्रता स्त्रीले पतिलाई नै सर्वस्व ठानेर पतिको चिन्तन गर्दै, पतिकै आज्ञानुसार पतिकै लागि मन, वचन, शरीरले कर्म गर्दछिन्, त्यसैगरी परमेश्वरलाई नै सर्वस्व ठान्दै परमेश्वरको चिन्तन गर्दै परमेश्वरकै आज्ञानुसार मन, वाणी र शरीरद्वारा परमेश्वरकै लागि स्वाभाविक कर्तव्य-कर्मको आचरण गर्नु 'कर्मद्वारा परमेश्वरलाई पूज्नु' हो।

**श्रेयान्-स्वधर्मो विगुणः, परधर्मात् स्वनुष्ठितात् ।**
**स्वभाव-नियतं कर्म, कुर्वन्-नाप्नोति किल्बिषम् ॥ ४७ ॥**

राम्रो तरिकाले आचरण गरेको अर्काको धर्मभन्दा गुणरहित भए पनि आफ्नै धर्म श्रेष्ठ छ, किनकि स्वभावले नै निश्चित गरेको धर्मरूपी कर्म गर्दा मनुष्यलाई पाप लाग्दैन ॥ ४७ ॥

**सहजं कर्म कौन्तेय, सदोष-मपि न त्यजेत् ।**
**सर्वारम्भा हि दोषेण, धूमेनाग्नि-रिवावृताः ॥ ४८ ॥**

अतएव, हे कुन्तीपुत्र! दोषयुक्त भए पनि सहज* कर्मलाई त्याग्नुहुँदैन, किनकि धुवाँले अग्नि ढाके जस्तै सबै कर्म कुनै न कुनै दोषले युक्त छन् ॥ ४८ ॥

**असक्त-बुद्धिः सर्वत्र, जितात्मा विगत-स्पृहः ।**
**नैष्कर्म्य-सिद्धिं परमां, सन्न्यासे-नाधि-गच्छति ॥ ४९ ॥**

सर्वत्र आसक्तिरहित बुद्धिवाला, स्पृहारहित र अन्तःकरणलाई जितेको पुरुषले साङ्ख्ययोगका माध्यमले त्यस परम नैष्कर्म्यसिद्धिलाई प्राप्त गर्दछ ॥ ४९ ॥

---

* प्रकृतिका अनुसार शास्त्रविधिले निश्चित गरेका जुन वर्णाश्रमका धर्म र सामान्य धर्मरूपी स्वाभाविक कर्म छन्, तिनैलाई यहाँ 'स्वधर्म', 'सहजकर्म', 'स्वकर्म', 'नियतकर्म', 'स्वभावजकर्म', 'स्वभावनियतकर्म' आदि नामले चिनिन्छ ।

**सिद्धिं प्राप्तो यथा ब्रह्म, तथाप्नोति निबोध मे।**
**समासेनैव कौन्तेय, निष्ठा ज्ञानस्य या परा॥ ५०॥**

जुन ज्ञानयोगको परानिष्ठा हो, त्यस नैष्कर्म्य सिद्धिलाई जुन प्रकारले प्राप्त गरेर मनुष्यले ब्रह्मलाई प्राप्त गर्दछ, हे कुन्तीपुत्र! त्यसलाई तिमीले सङ्क्षेपमै मबाट सुन॥ ५०॥

**बुद्ध्या विशुद्धया युक्तो, धृत्यात्मानं नियम्य च।**
**शब्दादीन्-विषयांस्-त्यक्त्वा, राग-द्वेषौ व्युदस्य च॥ ५१॥**
**विविक्त-सेवी लघ्वाशी, यत-वाक्-काय-मानसः।**
**ध्यान-योग-परो नित्यं, वैराग्यं समुपाश्रितः॥ ५२॥**
**अहङ्कारं बलं दर्पं, कामं क्रोधं परिग्रहम्।**
**विमुच्य निर्ममः शान्तो, ब्रह्म-भूयाय कल्पते॥ ५३॥**

विशुद्ध बुद्धिले युक्त तथा हलुका, सात्त्विक र नियमित भोजन गर्ने, शब्दादि विषयहरूलाई त्यागेर एकान्त र शुद्ध स्थानको चाहना गर्ने, सात्त्विक धारणशक्तिद्वारा* अन्तःकरण र इन्द्रिय-हरूलाई संयम गरेर मन, वचन र शरीरलाई वशमा गर्ने, रागद्वेषलाई सर्वथा नष्ट गरेर राम्रोसित दृढ वैराग्यको आश्रय लिनेवाला तथा अहङ्कार, बल, घमण्ड, काम, क्रोध र परिग्रहलाई त्यागी निरन्तर ध्यानयोगमा

* यसै अध्यायको श्लोक ३३मा जसको विस्तार छ।

परायण रहने, ममतारहित र शान्तियुक्त पुरुष सच्चिदानन्दघन ब्रह्ममा अभिन्नभावले स्थित हुने पात्र बन्दछ ॥ ५१—५३ ॥

**ब्रह्म-भूतः प्रसन्नात्मा, न शोचति न काङ्क्षति ।**
**समः सर्वेषु भूतेषु, मद्-भक्तिं लभते पराम् ॥ ५४ ॥**

त्यसपछि त्यो सच्चिदानन्दघन ब्रह्ममा एकभावले स्थित, प्रसन्न मनवाला योगी न त कसैका लागि शोक गर्दछ, न त कुनै वस्तुको आकाङ्क्षा नै गर्दछ। यस्तो समस्त प्राणीहरूमा समभाव[1] राख्ने योगीले मेरो पराभक्तिलाई[2] प्राप्त गर्दछ ॥ ५४ ॥

**भक्त्या मामभि-जानाति, यावान् यश्चास्मि तत्त्वतः ।**
**ततो मां तत्त्वतो ज्ञात्वा, विशते तदनन्तरम् ॥ ५५ ॥**

त्यस पराभक्तिद्वारा उसले म परमात्मालाई, म जो हुँ र जति हुँ, जस्ताको त्यस्तै तत्त्वपूर्वक जान्दछ अनि सो भक्तिले मलाई तत्त्वसाथ जानेर तत्कालै ममा प्रविष्ट हुन्छ ॥ ५५ ॥

---

१. गीता अध्याय ६ श्लोक २९ मा हेर्नुस्।

२. जुन तत्त्वज्ञानको पराकाष्ठा छ तथा जसलाई प्राप्त गरेपछि केही जान्न बाँकी रहँदैन, त्यही ज्ञान यहाँ 'पराभक्ति', 'ज्ञानको परानिष्ठा', 'परम नैष्कर्म्यसिद्धि' र 'परमसिद्धि' आदि नामले चिनिन्छ।

सर्व-कर्माण्यपि सदा, कुर्वाणो मद्-व्यपाश्रयः ।
मत् प्रसादा-दवाप्नोति, शाश्वतं पद-मव्ययम् ॥ ५६ ॥

म मा परायण भएको कर्मयोगी त सम्पूर्ण कर्महरू गरिरहेर पनि मेरो कृपाले सनातन अविनाशी परमपदलाई प्राप्त गर्दछ ॥ ५६ ॥

चेतसा सर्व-कर्माणि, मयि सन्न्यस्य मत्परः ।
बुद्धि-योग-मुपाश्रित्य, मच्चित्तः सततं भव ॥ ५७ ॥

सबै कर्मलाई मनैदेखि ममा अर्पण गरेर* एवं समबुद्धिरूपी योगलाई अवलम्बन गरी मेरो परायण भै निरन्तर ममा चित्त लगाउने बन ॥ ५७ ॥

मच्चित्तः सर्व-दुर्गाणि, मत् प्रसादात् तरिष्यसि ।
अथ चेत्त्व-महङ्कारान्,-न श्रोष्यसि विनङ्क्ष्यसि ॥ ५८ ॥

उपर्युक्त प्रकारले ममा चित्त लगाउने हुँदा तिमी मेरो कृपाले गर्दा समस्त सङ्कटहरूलाई अनायासै पार गर्नें छौ, तर यदि अहङ्कारका कारण मेरा वचनलाई सुनेनौ भने नष्ट हुने छौ, अर्थात् परमार्थदेखि भ्रष्ट हुने छौ ॥ ५८ ॥

* गीता अध्याय ९ श्लोक २७ मा यसको विधि बताइएको छ ।

**यदहङ्कार-माश्रित्य, न योत्स्य इति मन्यसे।**
**मिथ्यैष व्यवसायस्ते, प्रकृतिस्-त्वां नियोक्ष्यति॥ ५९॥**

तिमीले अहङ्कारको आश्रय लिएर यदि 'म युद्ध गर्दिनँ' भन्ने मानिरहेका छौ भने तिम्रो यो निश्चय मिथ्या हो, किनकि तिम्रो स्वभावले तिमीलाई जबर्जस्ती युद्धमा लगाइदिन्छ॥ ५९॥

**स्वभावजेन कौन्तेय, निबद्धः स्वेन कर्मणा।**
**कर्तुं नेच्छसि यन्-मोहात्, करिष्यस्य-वशोऽपि तत्॥ ६०॥**

हे कुन्तीपुत्र! जुन कर्मलाई तिमीले मोहका कारण गर्न चाहँदैनौ, त्यसलाई पनि तिमीले आफ्ना पूर्वकृत स्वाभाविक कर्मले बाँधिएर परवश भई गर्ने छौ॥ ६०॥

**ईश्वरः सर्व-भूतानां, हृद्देशेऽर्जुन तिष्ठति।**
**भ्रामयन्-सर्व-भूतानि, यन्त्रा-रूढानि मायया॥ ६१॥**

हे अर्जुन! शरीररूपी यन्त्रमा आरूढ भएका सम्पूर्ण प्राणीहरूलाई अन्तर्यामी परमेश्वर आफ्नो मायाले तिनका कर्मअनुसार भ्रमण गराउँदै सबै प्राणीका हृदयमा स्थित रहेको छ॥ ६१॥

**तमेव शरणं गच्छ, सर्व-भावेन भारत।**
**तत्-प्रसादात् परां शान्तिं, स्थानं प्राप्स्यसि शाश्वतम्॥ ६२॥**

हे भारत! तिमी सबै प्रकारले त्यही परमेश्वरका शरणमा* जाऊ। उही परमात्माको कृपाले नै तिमीले शान्तिलाई तथा सनातन परमधामलाई प्राप्त गर्नेछौ॥ ६२॥

**इति ते ज्ञान-माख्यातं, गुह्याद्-गुह्यतरं मया।**
**विमृश्यै-तदशेषेण, यथेच्छसि तथा कुरु॥ ६३॥**

यसरी, यो गोपनीयभन्दा पनि गोपनीय ज्ञान मैले तिमीलाई भने। अब तिमीले यस रहस्ययुक्त ज्ञानलाई पूर्णतः राम्ररी विचार गरेर जस्तो चाहन्छौ, त्यस्तै गर॥ ६३॥

**सर्व-गुह्यतमं भूयः, शृणु मे परमं वचः।**
**इष्टोऽसि मे दृढमिति, ततो वक्ष्यामि ते हितम्॥ ६४॥**

सम्पूर्ण गोपनीयभन्दा अति गोपनीय मेरा परम रहस्य युक्त वचनलाई तिमीले पुनः सुन। तिमी

* लज्जा, भय, मान, प्रतिष्ठा र आसक्तिलाई त्यागेर एवं शरीर र संसारमा अहंता, ममताले रहित भएर केवल एक परमात्मालाई नै परम आश्रय, परमगति र सर्वस्व सम्झनु तथा अनन्यभावले अतिशय श्रद्धा, भक्ति र प्रेमपूर्वक निरन्तर भगवान्‌का नाम, गुण, प्रभाव र स्वरूपको चिन्तन गरिरहनु एवं भगवान्‌को भजन,स्मरण गरेर नै उनको आज्ञानुसार कर्तव्यकर्महरूलाई निःस्वार्थभावले केवल परमेश्वरका लागि आचरण गर्नु यो 'सबै प्रकारले परमात्माकै शरण' हुनु हो।

मेरा अतिशय प्रिय छौ, तसर्थ यो परम हितकारक वचन म तिम्रा निमित्त भन्दछु ॥ ६४ ॥

**मन्मना भव मद्-भक्तो, मद्याजी मां नमस्-कुरु ।**
**मामे-वैष्यसि सत्यं ते, प्रतिजाने प्रियोऽसि मे ॥ ६५ ॥**

हे अर्जुन ! तिमी ममा मन लगाऊ, मेरो भक्त बन, मेरो पूजन गर्नेवाला बन र मलाई नै प्रणाम गर। यसो गर्नाले तिमीले मलाई नै प्राप्त गर्नै छौ, म तिमीसित यो सत्य प्रतिज्ञा गर्दछु, किनकि तिमी मेरा अत्यन्त प्रिय छौ ॥ ६५ ॥

**सर्व-धर्मान् परित्यज्य, मामेकं शरणं व्रज ।**
**अहं त्वा सर्व-पापेभ्यो, मोक्षयिष्यामि मा शुचः ॥ ६६ ॥**

सम्पूर्ण धर्म अर्थात् कर्तव्यकर्मलाई ममा त्यागेर तिमी केवल एक म सर्वशक्तिमान् सर्वाधार परमेश्वरकै शरणमा* आऊ। मैले तिमीलाई सबै पाप-हरूबाट मुक्त गरिदिने छु, तिमीले शोक नगर ॥ ६६ ॥

**इदं ते नातपस्काय, नाभक्ताय कदाचन ।**
**न चाशुश्रूषवे वाच्यं, न च मां योऽभ्यसूयति ॥ ६७ ॥**

तिमीलाई बताएको यो गीतारूपी रहस्यमय

* यसै अध्यायको श्लोक ६२ को टिप्पणीमा 'शरण' को भाव हेर्नुस्।

उपदेश तपरहित मानिसहरूसित कुनै पनि कालमा भन्न उचित हुँदैन। यसैगरी भक्ति* भाव नभएको र सुन्न इच्छा नगर्नेसित पनि भन्न उचित हुँदैन। जसले ममा दोषदृष्टि राख्दछ, उससित त झन् कहिल्यै भन्न हुँदैन॥ ६७॥

**य इमं परमं गुह्यं, मद्-भक्ते-ष्वभि-धास्यति।**
**भक्तिं मयि परां कृत्वा, मामे-वैष्यत्य-संशयः॥ ६८॥**

जुन पुरुषले ममा परम प्रेम गर्दै यस परम रहस्ययुक्त गीता शास्त्रलाई मेरा भक्तहरूबीच भन्दछ, उसले मलाई नै प्राप्त गर्दछ, यसमा कुनै सन्देह छैन॥ ६८॥

**न च तस्मान्-मनुष्येषु, कश्चिन्-मे प्रिय-कृत्तमः।**
**भविता न च मे तस्मा,-दन्यः प्रियतरो भुवि॥ ६९॥**

मनुष्यहरूमा त्यसभन्दा धेरै मेरो प्रिय कार्य गर्ने अर्को कोही हुँदैन, तथा पृथ्वीभरिमा ऊभन्दा प्रिय अर्को भविष्यमा पनि कोही हुनेवाला छैन॥ ६९॥

**अध्येष्यते च य इमं, धर्म्यं संवाद-मावयोः।**
**ज्ञान-यज्ञेन तेनाह,-मिष्टः स्यामिति मे मतिः॥ ७०॥**

जुन पुरुषले हामी दुईको यस धर्ममय संवादरूपी

* वेद, शास्त्र र परमेश्वर तथा महात्मा र गुरुजनहरूमा श्रद्धा, प्रेम र पूज्यभावको नाम 'भक्ति' हो।

गीताशास्त्रलाई पढ्दछ, उसद्वारा पनि म ज्ञानयज्ञद्वारा* पूजित हुन्छु भन्ने मेरो मत छ॥ ७०॥

**श्रद्धावा-ननसूयश्च,**
**श्रृणुया-दपि यो नरः।**
**सोऽपि मुक्तः शुभाँल्-लोकान्,**
**प्राप्नुयात्-पुण्य-कर्मणाम् ॥ ७१ ॥**

जुन मनुष्यले श्रद्धायुक्त र दोषरहित भएर यस गीताशास्त्रको श्रवण मात्र पनि गर्दछ, उसले पनि पापहरूदेखि मुक्त भएर उत्तम कर्म गर्नेहरूको श्रेष्ठ लोकलाई प्राप्त गर्दछ॥ ७१॥

**कच्चि-देतच्-छ्रुतं पार्थ, त्वयैकाग्रेण चेतसा।**
**कच्चि-दज्ञान-सम्मोहः, प्रनष्टस्-ते धनञ्जय॥ ७२॥**

हे पार्थ! के यो गीताशास्त्र तिमीले एकाग्रचित्तले सुन्यौ त? हे धनंजय! के तिम्रो अज्ञानजनित मोह नष्ट भयो त?॥ ७२॥

### अर्जुन उवाच

**नष्टो मोहः स्मृतिर्-लब्धा, त्वत्-प्रसादान्-मयाच्युत।**
**स्थितोऽस्मि गत-सन्देहः, करिष्ये वचनं तव॥ ७३॥**

**अर्जुनले भने—**हे अच्युत! हजुरको कृपाले मेरो

* गीता अध्याय ४ श्लोक ३३ मा अर्थ हेर्नुस्।

मोह नष्ट भयो र मैले स्मृति प्राप्त गरेको छु। अब म संशयरहित भएर बसेको छु। अतः हजुरको आज्ञालाई पालन गर्नें छु॥ ७३॥

### सञ्जय उवाच

**इत्यहं वासुदेवस्य, पार्थस्य च महात्मनः।**
**संवाद-मिम-मश्रौष,-मद्‌भुतं रोम-हर्षणम्॥ ७४॥**

**सञ्जयले भने**—यसप्रकार, मैले श्रीवासुदेव र महात्मा अर्जुनको यस अद्‌भुत रहस्ययुक्त, रोमाञ्चक संवादलाई सुनें॥ ७४॥

**व्यास-प्रसादाच्-छ्रुतवा,-नेतद्-गुह्य-महं परम्।**
**योगं योगेश्वरात्-कृष्णात्, साक्षात् कथयतः स्वयम्॥ ७५॥**

श्रीव्यासजीको कृपाले दिव्यदृष्टि पाएर मैले स्वयं योगेश्वर भगवान् श्रीकृष्णले अर्जुनसित भन्दाभन्दै यस परम गोपनीय योगलाई प्रत्यक्ष सुनेको छु॥ ७५॥

**राजन् संस्मृत्य संस्मृत्य, संवाद-मिम-मद्‌भुतम्।**
**केशवार्जुनयोः पुण्यं, हृष्यामि च मुहुर्-मुहुः॥ ७६॥**

हे राजन्! भगवान् श्रीकृष्ण र अर्जुनको यस रहस्ययुक्त, कल्याणकारक र अद्‌भुत संवादलाई पुनःस्मरण गरेर म बारम्बार हर्षित भइरहेको छु॥ ७६॥

**तच्च संस्मृत्य संस्मृत्य, रूप-मत्यद्भुतं हरेः।**
**विस्मयो मे महान् राजन्, हृष्यामि च पुनः पुनः ॥ ७७ ॥**

हे राजन्! श्रीहरिको* त्यस अत्यन्त विलक्षण-रूपलाई पनि बारम्बार सम्झँदा मेरो चित्तमा महान् आश्चर्य उत्पन्न हुन्छ र म बारम्बार हर्षित भइरहेको छु॥ ७७॥

**यत्र योगेश्वरः कृष्णो, यत्र पार्थो धनुर्धरः।**
**तत्र श्रीर्-विजयो भूतिर्,-ध्रुवा नीतिर्-मतिर्-मम ॥ ७८ ॥**

हे राजन्! जहाँ योगेश्वर भगवान् श्रीकृष्ण हुनुहुन्छ र जहाँ गाण्डीव-धनुषधारी अर्जुन छन्, त्यहीँ नै श्री, विजय, विभूति र अटल नीति हुन्छ भन्ने मेरो मत रहेको छ॥ ७८॥

ॐ तत्-सदिति, श्रीमद्-भगवद्-गीता-सूपनिषत्सु, ब्रह्म-विद्यायां योग-शास्त्रे श्रीकृष्णार्जुन-संवादे, मोक्ष-सन्न्यास-योगो नाम-अष्टादशोऽध्यायः॥ १८॥

~~o~~

---

* जसको स्मरण गर्दा पापहरूको नाश हुन्छ, उसको नाम 'श्रीहरि' हो।

# आरती

जय भगवद्गीते, जय भगवद्गीते।
हरि-हिय-कमल-विहारिणि सुन्दर सुपुनीते॥ जय०

कर्म-सुमर्म-प्रकाशिनि कामासक्तिहरा।
तत्त्वज्ञान-विकाशिनि विद्या ब्रह्म परा॥ जय०

निश्चल-भक्ति-विधायिनि निर्मल मलहारी।
शरण-रहस्य-प्रदायिनि सब विधि सुखकारी॥ जय०

राग-द्वेष-विदारिणि कारिणि मोद सदा।
भव-भय-हारिणि तारिणि परमानन्दप्रदा॥ जय०

आसुर-भाव-विनाशिनि नाशिनि तम-रजनी।
दैवी सद्गुणदायिनि हरि-रसिका सजनी॥ जय०

समता, त्याग सिखावनि हरि-मुखकी बानी।
सकल शास्त्रकी स्वामिनि श्रुतियोंकी रानी॥ जय०

दया-सुधा बरसावनि मातु! कृपा कीजै।
हरि-पद-प्रेम दान कर अपनो कर लीजै॥ जय०



# गीताप्रेस, गोरखपुरकी निजी दूकानें / शाखाएँ

| | | |
|---|---|---|
| इन्दौर-452001 | जी० 5, श्रीवर्धन, 4 आर. एन. टी. मार्ग<br>**Mob. 9630111144** | © (0731) 2526516, 2511977 |
| ऋषिकेश-249304 | गीताभवन, पो० स्वर्गाश्रम<br>**Mob. 6397500736, 9837775919** | © (0135) 2430122, 2432792 |
| कटक-753009 | भरतिया टावर्स, बादाम बाड़ी<br>**Mob. 8093091800, 9338091800** | © (0671) 2335481 |
| कानपुर-208001 | 24/55, बिरहाना रोड<br>**Mob. 8299309991, 9839922098** | © (0512) 2352351 |
| कोयम्बटूर-641018 | गीताप्रेस मेंशन, 8/1 एम, रेसकोर्स<br>**Mob. 9943112202, 7909130623, 8825776969** | |
| कोलकाता-700007 | गोबिन्दभवन; 151, महात्मा गाँधी रोड<br>**Mob. 9831004222, 7688037682** | © (033) 22680251, 22686894 |
| गोरखपुर-273005 | गीताप्रेस—पो० गीताप्रेस<br>**Mob. 7985282936, 9984889884**<br>**email:booksales@gitapress.org** | © (0551) 2334721, 2331250, 2331251 |
| चेन्नई-600010 | इलेक्ट्रो हाउस No. 23 रामनाथन स्ट्रीट किलपौक<br>**Mob. 7200050708** | © (044) 26615959, 26615909 |
| जलगाँव-425001 | 7, भीमसिंह मार्केट, रेलवे स्टेशनके पास<br>**Mob. 9422281291, 7020118397** | © (0257) 2226393, 2220320 |
| दिल्ली-110006 | 2609, नयी सड़क<br>**Mob. 7289802606, 9999732072** | © (011) 23269678, 23259140 |
| नागपुर-440002 | श्रीजी कृपा कॉम्प्लेक्स, 851, न्यू इतवारी रोड<br>**Mob. 9420410735, 8830154589** | © (0712) 2734354 |
| पटना-800004 | अशोकराजपथ, महिला अस्पतालके सामने<br>**Mob. 9771787992, 8210494381** | © (0612) 2300325 |
| बेंगलुरु-560027 | 7/3, सेकेण्ड क्रास, लालबाग रोड<br>**Mob. 8310731545** | © (080) 22955190 |
| भीलवाड़ा-311001 | जी 7, आकार टावर, सी ब्लाक, गान्धीनगर<br>**Mob. 9414114291, 9928527747** | © (01482) 248330 |
| मुम्बई-400002 | 282, सामलदास गाँधी मार्ग (प्रिन्सेस स्ट्रीट)<br>**Mob. 8108529464, 9768954885, 8369536765** | © (022) 22030717 |
| राँची-834001 | कार्ट सराय रोड, अपर बाजार, बिड़ला गद्दीके प्रथम तलपर<br>**Mob. 7004458358** | © (0651) 2210685 |
| रायपुर-492009 | मित्तल कॉम्प्लेक्स, गंजपारा, तेलघानी नाका चौक (छत्तीसगढ़)<br>**Mob. 9329326200, 7879845886, 7999909243** | © (0771) 4034430, 4035310 |
| वाराणसी-221001 | 59/9, नीचीबाग<br>**Mob. 9839900745, 9140256821** | © (0542) 2413551 |
| सूरत-395001 | 2016, वैभव एपार्टमेन्ट, भटार रोड<br>**Mob. 9374047258, 9723397258** | © (0261) 2237362, 2238065 |
| हरिद्वार-249401 | सब्जीमण्डी, मोतीबाजार<br>**Mob. 9760275146, 9675721305** | © (01334) 222657 |
| हैदराबाद-500095 | 41, 4-4-1, दिलशाद प्लाजा, सुल्तान बाजार<br>**Mob. 9573650611, 9291205498** | © (040) 24758311, 66758311 |
| काठमाडौं-44600 (नेपाल) | पसल नं० 6,7,8 माधवराज सुमार्गी स्मृति भवन, वनकाली, पशुपति क्षेत्र।<br>**e-mail : gitapress.nepal@gmail.com** | |

**Whatsapp & Mob. +977- 9801056107, 9841056107, 9849736967, 9841432700**

**डाकद्वारा एवं विदेशोंमें पुस्तकें भेजनेकी व्यवस्था केवल गोरखपुरमें है।**

**गीताप्रेसद्वारा प्रकाशित सभी पुस्तकें Internet के माध्यमसे Online खरीदनेके लिये gitapressbookshop.in एवं website : www.gitapress.org पर login करें। ई-मेलके माध्यमसे भी आर्डर बुक कर सकते हैं e-mail : booksales@gitapress.org & online@gitapress.org**